अस्तरमा छापिएको मूर्तिकलाको प्रतिरूप यो दृश्य राजा शुद्धोद्धनको महलको हो, जसमा तीनजना भविष्यवक्ताहरूले भगवान बुद्धकी आमा, रानी मायाको सपना-लाई व्याख्या गरिरहेछन्। मुनिपट्टि बसेका छन् मुंशी जो व्याख्या दस्तावेज लेखिरेहछन्। संभवतः भारतमा लेखनकलाको यो सबैभन्दा पुरानो अनि चित्रांकित अभिलेख हो।

नागार्जुन, दोस्रो शताब्दी (क्राइश्टाब्द)
सौजन्य : राष्ट्रीय संग्रहालय, नयाँ दिल्ली

# मोलेयरका दुई नाटक

[लें तारतूफ़ र ले बूर्ज्वा जेन्तिओम]

अनुवादक

**किताब सिंह राइ**




साहित्य अकादेमी

**Molieraka Duyi Natak** : Nepali translation by Kitab Singh Rai of Moliere's two plays : *Tartuffe* and *Le Bourgeois Gentilhomme* from English, Sahitya Akademi (1998) Rs. 80.


प्रथम संस्करण : 1998

**साहित्य अकादेमी**

प्रधान कार्यालय
रवीन्द्र भवन, 35, फ़ीरोज़शाह मार्ग, नयाँ दिल्ली 110 001
विक्रय विभाग : स्वाति, मन्दिर मार्ग, नयाँ दिल्ली 110 001

क्षेत्रीय कार्यालय
172, मुम्बई मराठी ग्रन्थ संग्रहालय मार्ग, दादर, मुम्बई 400 014
जीवनतारा बिल्डिंग, चौथी मंज़िल, 23 ए /44 एक्स.,
डायमंड हार्बर रोड, कलकत्ता 700 053
304-305, अन्ना सलाई, तेनामपेट, चेन्नई 600 018
109, ए.डी.ए. रंगमन्दिर, जे. सी. मार्ग, बंगलोर 560 002

**ISBN 81-260-0436-3**

**मूल्य** : अस्सी रुपियाँ

**शब्द संयोजक एवं मुद्रक** : नागरी प्रिंटर्स, नवीन शाहदरा, दिल्ली 110032

# प्रस्तावना

मोलेयर, जसको जन्म 1622 औ मृत्यु 1672 मा भयो, औ जसको असल नाँउ पोकले हो, दुई यस्ता नाटककारहरूमा एकजना हुन्, फ्रांसेली नाटकहरूमाथि विवेचना गर्दा जसको नाउँ सँधै पहिले औ सँग-सँगै लिइन्छन्। दुवैको बीचमा वरियता, व्यक्तिगत वा राष्ट्रीय रुचिको आधारमाथि नै स्थापित गर्न सकिन्छ। अंग्रेजहरूले सँधै रासिनलाई पन्छाएर मोलेयरकै प्रशंसा गरेका छन्। मोलेयरले साहित्यमा मात्र फ्रांसेली-प्रतिभालाई प्रतिनिधित्व गरेका छैनन्, तर उनी फ्रांसेली इतिहासका विशिष्टतायुक्त शताब्दीको प्रतिनिधि उपज हुन्। त्यो 'स्वर्ण युग' सत्रहौं शताब्दी हो।

यो कथा अपूर्ण छ। साहित्यमा आफ्नो देशको प्रतीक-स्वरूप एकाध लेखक हुन्छन्; जस्तै इंगल्याण्डमा शेक्सपियर, जर्मनीमा गेटे, इटलीमा दांते। तर मोलेयरमा आफ्नो यथार्थ फ्रेंच-प्रतिभा भए तापनि आफ्नो मुलुकको एक भेगकै मात्र प्रतिनिधित्व गर्छन्। यस 'स्वर्ण-युगमा' पनि, मोलेयर सरह फ्रांसेली-विशिष्टतायुक्त रासिन, मोलेयर भन्दा पूर्ण रुपेण विपरित औ उनको उत्कर्ष बोध गर्ने मापदण्ड प्रतीत हुन्छन्। यी एक अर्काका पूरक हुन्। एकजनामा विषाद, उच्चता औ गाम्भीर्य छन् भने अर्कामा हास्य, कल्पना, अरु चाञ्चल्य पनि विद्यमान छन्। यी दुवै फ्रांसेली साहित्यमा समानान्तर रूपले बहन्छन्। यसर्थ नै मोलेयरले शेक्सपियर झै दुःखान्त र सुखान्त दुवैथरिका नाटक लेखेनन्। जहाँसम्म सत्रहौं शताब्दीको प्रश्न छ, नाटकका यी दुई भेद, रासिन औ मोलेयर बीचमा विभाजित भए।

निसन्देह, मोलेयर कहिले-काहीं गम्भीर हुन्छन्; यति गम्भीर कि हास्य पनि कहिले काहीं रोदनको सन्निकट हुन सक्छ भनी हामीलाई सोच्न वाध्य हुनपर्छ। स्वीनवर्न लेख्नु हुन्छ—"मोलेयर, विषण्ण मोलेयर।" कहिले-काहीं त लाग्छ उनले पनि पास्कल जस्तै विचार्दछन्—"दोस्रो अंकमा सुखान्त नाटक जति नै सुन्दर भए पनि त्यसको अंतिम अंक दुःखान्त नै हुन्छन्।" शांतिईमा सुरक्षित मियाँर-ले कोरेको उनको चित्रमा कुनै हास्य-नाटकको रचयिताको आकृति देखिन्दैन, त्यस आकृतिमा चिन्ताकुलता, आँखामा आश्चर्य औ अतृप्ति पाइन्छन्। प्रतिद्वन्द्वी नाटककारहरूका विद्वेष औ षड्यन्त्रले, संघर्ष अनि बिमारीले, अनि थोरै समयको निम्ति भए पनि, विवाह-जन्म-कलहले उनको जीवन पनि विषादयुक्त औ अशान्त भएको थियो। यसैकारण आफ्ना सुप्रसिद्ध हास्य-नाटकहरूमा 'लें मिजाँत्रोफ्'-लाई उनले दुःखान्त जस्तै बनाएका छन्।

तर साधारण अभिव्यक्ति औ प्रमुख प्रभावको दृष्टिले उनी प्रफुल्ल, उत्साहपूर्ण, साहित्यिक, जोश औ विनोदले परिपूर्ण देखिन्छन्, कहिले-काहीं त ठट्टा पनि गर्छन्। निश्चयमा पनि अत्यन्त असम्भवको चित्रणमा—जस्तै सांसारिक गतिविधिमा मानव-परिस्थितिमा हामी पाउँछौ—उनी विचलित हुँदैनन्। उनको हास्यको क्षेत्र अपरिमित छ, यसैले उनी त्यो गाम्भीर्य र उच्चता प्राप्त गर्छन् जसलाई देखेर शास्त्रीय समालोचक ब्यालोले चौधौं लुईलाई यसो भनेर आश्चर्यचकित पारे कि उनको राज्यमा मोलेयर सर्वश्रेष्ठ लेखक हुन्। जुन फ्रांसेली अकादेमीले कुनै दिन मोलेयरलाई स्वागत गरेन, आफ्नो सम्मेलन-भवनमा उनको मूर्ति स्थापना गरेर त्यस उपेक्षाको त्यसले यथोचित प्रायश्चित गऱ्यो। मूर्तिको तल्लो तहमा लेखियो—"उनको कीर्तिमा कुनै कमी रहेन, हाम्रो कीर्तिको निम्ति उहाँको कमी हामीलाई थियो।"

मोलेयरका हास्य-नाटकपछि एउटा लामो परम्परा छ, किनकि यो रूप मेनान्डरका ती परिष्कृत स्वभाव-प्रधान हास्य-नाटकहरूदेखि निस्कँदै अनि ल्याटिन नाटककार प्लुटस औ हेरेन्सका रचनाहरू हुँदै, वर्त्तमान युगमा आएका छन्। उनका नाटकहरू भन्दा तत्क्षण पहिले इटलीको 'कामेदिया देल्लार्त' (Commedia dell'arte) अनि त्यसबाट निस्केका फ्रांसेली औ स्पेनियाली रूप हुन्। तर मोलेयर यद्यपि स्वाँग (burlesque) वा हास्यानुकृतिदेखि विचलित हुँदैनन्, तथापि उनी पुराना स्वभाव-प्रधान हास्य-नाटकहरूमा एउटा नयाँ मानवीयता औ स्वाभाविकता ल्याउँछन्। ल फंतेन यसो भन्छन्—"हामीले शैली बदलेका छौं, जोदलेको शैली प्रचलित छैन अनि अब प्रकृतिबाट हामी एक पाइला पनि अलग हुनुहुँदैन।" मात्र स्वाँग अब स्वीकार्य थिएन। मनुष्य-स्वभावमा गहिरिने आश्चर्यजनक दृष्टि, गम्भीर मानवीयता अनि साथै 'मुस्कानपूर्ण अट्ठयाई' मोलेयरका नाटकको विशेषता हुन्। औ यिनै गुणहरूले उनको निम्ति विश्व-साहित्यमा एउटा यस्तो ठाँउ निश्चित गरेका छन् जसको तुलना साधारणतः शेक्सपियरसँग गर्न सकिन्छ।

**'लें बुर्ज्वा जेन्तिओम'** (जुन सर्वप्रथम शाँबोरमा 14 अक्तूबर, 1670 मा मंचित भएको थियो अनि 1670 मै पुस्तकाकारमा प्रकाशित भयो) उनको सबभन्दा आकर्षक रचनाहरूमा एउटा गनिए तापनि त्यो उनको 'शुद्ध' हास्य-नाटक होइन। यो एउटा ब्याले मिश्रित हास्य-नाटक हो। यस्ता धेरै नाटकहरू राज-दरबारको आग्रहमा लेखिएका थिए, उपर्युक्त नाटकको विषयमा पनि यही कुरा थियो। मोलेयरले तुर्केली संस्कृति बारे एउटा हास्यानुकृति लेखून् भनेर चौधौं लुईले सन् 1670 मैं चाहेका थिए। यसो गर्ने केवल एउटै उद्देश्य थियो तुर्केली सुल्तानको त्यस राजदूतको खुबै उपहास होओस् जसले एक वर्ष अघि पेरिस आउँदा फ्रांसको राजदरबारको आडम्बर औ रीति-थितिप्रति तिरस्कारको भाव प्रदर्शन गर्ने आभास दिएका थिए। लुईको उद्देश्य बारे उक्त विचार मान्य छन्, तर सितम्बर 1956 मा 'कलेज दँ फ्रांस'-मा आयोजित साहित्यिक सम्मेलनमा साहित्यकी एकजना तुर्केली प्राध्यापिका श्रीमती अदिल आयदाले, जसले मलार्मे (Mallarme) बारे फ्रांसेली भाषामा एउटा किताब लेखेकी छिन्, लुईको

उद्देश्य बारे भिन्नै व्याख्या प्रस्तुत गरेकी थिइन्। श्रीमती आयदा बमोजिम लुई, तुर्केली राजदूत, सुलेमान आगाको पद और महत्त्वलाई ठूलो बुझी उसको स्वागतमा तुर्केली संस्कृतिको अतिशय प्रदर्शन गरी जुन स्वाँगको विषय भएको थियो, यसैले उनले प्रतिकार स्वरूप उक्त नाटक लेखाएका थिए। यस्तो लाग्छ लुईलाई एउटा कुराले घोंचिरहन्थ्यो-त्यो के भने जहाँ उसले कुस्तुन्तुनियामा एकजना राजदूत नियुक्त गरेको थियो, त्यहाँ तुर्कीले बेरसाईमा राजदूत नियुक्त नगर्ने भयो किनभने लुई सम्राट नभएर राजा मात्र थियो। यसोसले रुष्ट भएर लुईले आफ्नो राजदूत झिकाएका थिए औ त्यसको जग्गामा एकजना प्रभारी राजदूत (शार्जे दाफेर) नियुक्त गरेका थिए। यसमा सुल्तानले आगालाई राजदूतको रूपमा फ्रांसमा पठाएर स्पष्टीकरण मागेका थिए। तर लुईले उसैलाई अभिष्ट राजदूत ठानी तुर्केली शान-शौकत औ रीति-रिवाज बमोजिम; अर्थात् मंच, तर्की, पायदान, दीवान, कफी, शर्बत आदिको सुप्रबन्धसंग धुमधामले स्वागत होस् भन्ने हुकुम सुनाएका थिए। राजदूतहरूलाई स्वागत गर्दा सुल्तानले व्यवहार गर्ने सुनौलो बुट्टेदार पहिरनमा लुई पनि सजेका थिए। तर सुलेमान आगा त कुनै महत्त्वपूर्ण व्यक्ति नभएर सुल्तानको पत्रवाहक मात्र हो भनी बुझेपछि ब्यांउठियेर उनले त्यो दूतलाई वास्ता गर्नै छोड़े। तर कुरा फुत्किसकेको थियो, फ्रांसेली जनता लुईको यस कृत्यमाथि हाँसिसकेको थियो।

लुईले यस घटनाको प्रभावलाई व्यंग्यद्वारा मुछ्न मोलेयरसंग तुर्की हास्यानुकृति लेख्न आग्रह गरे। यसोसले मोलेयरले उत्साहित भएर यस कामलाई पूर्ण गरे। **लें बुर्ज्वा जेन्तिओम्**—मा जुन तुर्केली रीति-रिवाजको प्रदर्शन छ, त्यो दर्शनीय सँग-सँगै 'तूफानी' पनि छ। तुर्केली संस्कृतिको हास्यानुकृति त्यसबेला हल्ला-खल्लाको रूप धारण गर्छ जब बिचरा जूर्देमाथि डण्ठाको प्रहार शुरू हुन्छ। तर, चौधौं लुई यस नाटकले पूर्णतः खुशी हुन सकेनन्, किनभने उनलाई यस्तो अनुभव भयो कि तुर्केली रूप सम्मिलित गरी औ जुर्देलाई सजाय दिइ उसैको क्षोभको अप्रत्यक्ष अभिव्यक्ति गरिएका छन्। यथार्थमा, मोलेयरको यस्तो आशय थियो कि थिएन, भन्न सकिन्न।

तर, उनले एउटा काम निश्चित रूपले गरे। तुर्केली रीति-थितिको रूप भर्ने हास्य-नाटकमा उनले हास्यको एउटा सर्वथा अलग्गै विषय थपे। उनले एकजना यस्तो बनियाको हाँसो उड़ाए जो कुलीनवर्गका विशिष्टता, शालीनता औ त्यसको रीति-थिति नै अपनाउन चाहन्थ्यो (यो ध्यान दिने कुरा हो कि नाटकको शीर्षकमा जुन 'बुर्ज्वा' शब्द छ, त्यो मार्क्सवादी 'बुर्ज्वा' शब्द होइन। त्यसको अर्थ हिजो आजको 'जेन्टलम्यान' मात्र पनि होइन। भारतीय शब्दावलीमा, मोलेयरले प्रयोग गरेको 'बुर्ज्वा' शब्द 'बनिया'-को अनि 'जेन्तिओम्' शब्द 'धनाढ्य'-को धेरै नगिच छन्)।

जबकि तत्कालीन सामाजिक विशिष्टता औ सामाजिक स्तरीकरण आजभन्दा पनि कठोर थियो, 'असल बनिया' श्रेणी औ सम्पन्नलाई नै सामाजिक प्रतिष्ठको आधार मानिलिने चलन थियो, तापनि उनमा व्याप्त प्रतिष्ठाको यस मिथ्याभाव त्यो भन्दा पनि

अझ धेरै हास्यास्पद देखिन्थ्यो। स्वाभाविक रूपले यसै कमजोरीको कारणले प्रस्तुत नाटकको बुर्ज्वा, संगीतज्ञहरू, नर्तकहरू, तरवारबाजहरू, दर्जीहरू औ कुलीन समाजका अन्य धुपौरेहरूको साहसिक जमघट—यहाँसम्म कि एकजना दार्शनिक, एकजना काउण्ट अनि एकजना मार्क्योनेसको, शिकार बनिनु पर्‍यो। आफ्नी छोरीको निम्ति उसको जुन उच्चाकांक्षा थियो, त्यसले कहानी दुःखान्त हुनबाट त बाँच्यो—बनिया चाहन्दैन थियो कि उसकी छोरीले आफ्नो प्रेमीसँग बिहे गरोस्, किनभने केटो कुलीन थिएन। त्यस प्रेमीको चतुर युवक-नोकरले बुद्धिमानी, संयम औ प्रत्युत्पन्न-मति प्रदर्शन गरी परिस्थिति सम्हाल्न सफल भयो।

चतुर नोकर-पात्र राख्ने प्रवृत्ति ती पुराना हास्य-नाटकहरूमा पनि थियो जुन नाटकहरूमा स्वभाव-चित्रण औ छल-बलमाथि विशेष जोड़ दिइन्थ्यो, तर प्रस्तुत नाटकको नोकर-पात्र, तरुण कोव्येल र निकोलका चरित्रलाई मोलेयरले निकै माथि उठाएका छन्। यी दुवै यस्ता स्वच्छन्द आत्मा हुन्, जसको दृष्टि सफा छन् औ जो आडम्बर औ आरोपित गाम्भीर्यलाई तोड़छन्। नाटकका अर्का पात्र जहाँ आत्म-प्रवञ्चनामा व्यस्त छन् अनि श्रीमती जूर्दे एकजना इमानदार साहुनीको स्वभावोचित निष्ठुर यथार्थको प्रदर्शन गर्छिन्, त्यहीं तरुणी नोकरनी र तरुण नोकर नाटकलाई हास्यपूर्ण बनाउँछन्। चतुर नोकरको विधान, हास्य-नाटकको अर्को नैतिक विचारसँग सम्बद्ध छ, त्यो के भने एकजना "बुद्धिमान-अनपढ़ वा बालक कुनै मिथ्याभिमानी दार्शनिकभन्दा धेरै विचारवान हुन्छ।" यो विचार एण्डर्सनको कथा 'एम्पेरर्स न्यू क्लथ्स' (सम्राटका नयाँ पहिरन)—मा पनि पाइन्छ।

अन्तमा, संबै सामान्य हुन्छ अनि सब प्रेमी काउण्ट र मार्क्योनेस, बुर्ज्वाकी छोरी अनि त्यसका निम्न-वर्गीय प्रेमी नोकर औ नोकरनी, कुनै पक्षपात बिना नै सुखी बनाइन्छन्। फेरि पनि सम्भव छ यस नाटकले आधुनिक पाठकलाई नैतिकताको दृष्टिले असमंजसमा छाड़िदिन्छन्। जब वर्ग-चेतना औ वर्ग-भेद हिजोआज अनिष्ट संझिइन्छ औ सामाजिक गतिशीलताको प्रशंसा गरिन्छ, हुनुसक्छ कुलीन (सम्भ्रांत) बन्ने बनियाको उच्चाकांक्षामाथि गरिएका व्यंग्य मोलेयरको मिथ्या-प्रतिष्ठाको भावनाका परिचायक हुन् भनी मानिसहरूले सम्झिउन्। तर उनको दृष्टिकोणलाई अर्कै ढंगले बुझाउन सकिन्छ। उनी आफै बनिया-वर्गवाट आएका थिए, औ यद्यपि चौधौं लुईको उनमाथि असीम दयादृष्टि थियो र पनि उनमा आफ्नो वर्गप्रति नयाँ-नयाँ 'सम्भ्रान्त वर्ग'-का झैं तिरस्कृत भाव कहिले थिएन। त्यो छोड़ेर उनको आफ्नो नैतिक दृष्टिकोण माथिल्लो तहको थियो, यसै कारण उनी यति तल उत्रन सकेननन्। उनले बुर्ज्वाको हाँसो उड़ाएका छन्, त्यसको भिन्नै उद्देश्य हुनसक्छ—औ यो उद्देश्य, सबै काल औ समाजमा आजसम्म प्रशंसित भइराखेकै छन्—त्यो यो हो कि मान्छेलाई आफ्नो कुलको स्वभाव र चरित्रगत गुणप्रति सत्यनिष्ठ बन्न आवश्यक छ, न कि त्यसले अर्काको स्वभाव र गुण प्राप्त गर्न व्यर्थै चेष्टा गरोस्। यो भुल्न हुँदैन, प्राचीन कालको वर्ग-चेतनायुक्त समाजका तथाकथित

निम्नवर्गले आफ्नो प्रतिष्ठाको रक्षा खुबै दृढ़ताले गर्थे जस्तो उच्च वर्गकाले गर्थे जस्तो कि प्रूस्त मध्यम वर्गको बारेमा लेख्छन्—"त्यसताक समाज बारे मानिसहरूको दृष्टिकोण हिन्दुहरूकोझैं थियो अर्थात् उनीहरूले समाजलाई विभिन्न वर्गमा विभाजित गरेका थिए, जसले गर्दा मानिसहरूले जन्मन साथै आफ्नो माता-पिताको स्थितिमा आफूलाई पाउँथे।" यस प्रकार जहाँ उनी बताउँछन् मिथ्या-प्रतिष्ठाको भावना पोषण गर्ने लाग्राँदें, एक मध्यमवर्गीय परिवारले नोरमण्डीका आफ्ना सम्पन्न परिचितहरूलाई चिट्ठी पठाउन संकोच मान्छन् त्यहाँ उनी यो पनि भन्छन् कि त्यो मध्यवर्गीय परिवार पनि त्यस चिट्ठीको उपयोग कुनै प्रकारले गर्दैनन्।

वर्ग-प्रतिष्ठाको यो भावना यथार्थमा संस्कृतको त्यस उक्तिसँग मेल खान्छ, जसअनुसार अर्काको धर्म अप्नाउनु भन्दा आफ्नो धर्ममा मर्नु नै श्रेष्यकर हुन्छ। मोलेयरको मनमा यस्तै विचार केही थियो।

**'लें तारतूफ'** फ्रांसेली साहित्यको सर्वाधिक प्रसिद्ध हास्य-नाटक हो औ निश्चय यो सर्वाधिक सफल नाटकहरूमा एउटा गनिन्छ। शुरुदेखि नै उनीहरूको ध्यान यसले आकृष्ट गर्‍यो, विशेष गरी त्यो विवादले गर्दा जुन तरुण राजा चौधौं लुईकै सामु असार्वजनिक रूपमा त्यसका तीन अंक खेलिसकेपछि, उभिएको थियो। यो 12 मई, 1664 को कुरा हो। धार्मिक आडम्बरमाथि गरिएको व्यंग्यले जनसाधारणको धार्मिक भावनालाई चोट पर्नेछ भनी मोलेयरसँग पनि नसोधी लुईले यस नाटकको सार्वजनिक रूपमा प्रदर्शन रोकिदिए। फ्रांसेली पादरी-वर्गका एउटा प्रभावशाली दलले पेरिसको पोपको नेतृत्वमा त्यस पुस्तकलाई धर्मविरोधी घोषित गरी भर्त्सना गरेका थिए।

मोलेयरले यस भूल धारणाको तीव्र विरोध गरे औ प्रतिबन्ध उठाउन भरमग्दूर प्रयास गरे। उनले राजाकहाँ कतिपय स्मृति-पत्र पठाए औ एउटा लामो पत्र प्रकाशित गरी नाटकको रूप अनि आफ्नो उद्देश्य प्रकाश गरे। फ्रांसस्थित पोपदूत, कार्डिनल शिगीसँग उनले अपील गरे औ केही फ्रांसेली पादरीहरूको अनुकूल-मत संग्रह गरे। यस बीच असार्वजनिक रूपमा राजाका भाई 'मेंस्यें' औ 'कोंदे महान्'-का संरक्षणमा यो नाटक खेलियो। एकपल्ट त मोलेयरले छद्म नाममा यस नाटकको सार्वजनिक प्रदर्शन पनि गरे जसले गर्दा पेरिसको संसदले प्रतिबन्ध लगाए और पेरिसको पोपले व्यक्तिगत वा सार्वजनिक रूपमा यो नाटक पढ़ने वा सुन्ने व्यक्तिहरूलाई धर्मभ्रष्ट भनी घोषणा गर्ने चेतावनी पनि दिए। तर पछि मोलेयरको प्रयास सफल भयो औ प्रतिबंधित भएको 5 वर्षपछि 13 फरवरी 1669 मा यो आदेश फिर्ता लिइयो।

त्यसैताकादेखि यो नाटक सफलतासाथ प्रदर्शन हुन लाग्यो। प्रतिबन्ध उठाइन अघि सार्वजनिक प्रदर्शनमा मोलेयरलाई 2,680 पौण्ड प्राप्त भयो। त्यसताक यो एउटा अभूतपूर्व आय थियो। त्यसपछि आजसम्म 'कामेदी-फ्रांसेज'—मा मात्र 'तारतूफ' लगभग 2500 पल्ट खेलियो अनि यसले श्रेष्ठतम् अभिनय-प्रतिभाहरूलाई मञ्चमा आकर्षित गरेका छन्।

मोलेयरले प्रथमपल्ट चरित्रानुरूप योग्यता देखी 'दीँ क्रुआजी' (Dugroisy) लाई मुख्य भूमिकाको लागि चुने, जसले यस नाटकको मञ्च परम्पराको सृष्टि गर्‍यो। त्यहींदेखि यताका अभिनेताहरूको नाम लिँदा सिलवे, लिस्येँ (Lucien), गीत्री, लुई जुवे (Louis Jouvet) औ फेरनाँ लेदूँले यस भूमिकामा भाग लिएका छन्। नोकरनी दोरिनको अभिनय त राशेल औ क्लेरों जस्ता दुःखान्त नाटकहरूमा अभिनय गर्ने अभिनेत्रीहरूले गरेकी छिन्। अझ रमाइलो कुरा के भएको छ भने दुई अपेशादार प्रदर्शनहरूमा स्वयंम् मदाम-दे पोंपादूरले (Madame de Pompadour) यस भूमिकामा खेलेकी छिन्, यद्यपि मोलेयरकी साली, मादलेन बेजारलाई यस भूमिकामा अभिनय गर्न मञ्चमा तयार गरिएको थियो।

साहित्यिक पक्षलाई लिँदा पनि **'लेँ तारतूफ'** बारे यति थुप्रै लेखिएका छन् कि नाटकको मूल प्रभाव औ सौन्दर्यलाई समात्न गाह्रो भएको छ। प्रत्येक युगले त्यसमा छुट्टै व्याख्या देखेका छन् औ यसै कारणले होला तीन शताब्दीको आलोचना औ व्याख्याको राश यसमाथि थुप्रिएका छन्। यी व्याख्याहरूमा यति भिन्नता पाइन्छन् कि हालै एकजना आलोचकलाई 'लेँ तारतूफ अनि उसको अवतार' शीर्षक किताप लेख्ने आवश्यकता पर्‍यो।

**'लेँ तारतूफ'** एकजना यस्ता साहसीको शुरूको सफलता औ शेषमा पराभवको कथा हो, जसले जनतामा प्रभाव जमाउँछ अनि भक्ति र दिव्यताको स्वाँग रची अनुचित लाभ उठाउँछ। सत्रौं शताब्दीको फ्रांसमा यो एउटा प्रचलित विषय थियो जस्तो आज पनि भारतमा विद्यमान छ। धार्मिक भावनाको दृष्टिले फ्रांसको निम्ति सत्रौं शताब्दी महत्त्वपूर्ण युग थियो। यसको आरम्भ 'सें फ्राँस्वा दें साल' (St. Francois de sales) औ सें वें साँ दें पालबाट अनि 'मादाम गीँयों (Madame Guyon) मा अन्त हुन्छ। बीचमा पास्काल औ पोर्ट रायलका जेनसेनवादी आउँछन्। यो शताब्दी बोसुए औ फेनलोंको पनि हो। त्यसताका धर्मको जुन असीम प्रतिष्ठा औ सम्मान थियो, मानिहरूलाई ठग्न ढोंगीहरूलाई सजिलो मात्र नभएर अपेक्षाकृत सुरक्षित काम पनि थियो। यस्ता ढोंगीहरू असंख्य थिए। मोलेयर पुस्तकाकार मुद्रित नाटकको प्रथम संस्करणको भूमिकामा यस्तो लेख्छन्—"यो एउटा यस्तो हास्य-नाटक हो जसलाई लिएर अत्यधिक होहल्ला मच्चिएको छ अनि धेरै कालसम्म जसमाथि अत्याचार भएको छ। यस नाटकले जुन मानिसहरूको प्रतिनिधित्व गर्दछ, तिनीहरूले स्पष्ट गरिदिएका छन्—फ्रांसमा तिनीहरूको अधिकार यस्ता व्यक्तिहरूभन्दा धेरै छ जसलाई हामीले अहिले सम्म मञ्चमा उतारिसकेका छौं। मैले गरेको चित्रण सामन्ती, धुपौरे, डाक्टर सबैले स्वीकारेका छन्, यद्यपि यिनीहरूले अरूले झैं यो देखाउने चेष्टा गरेका छन् कि यिनीहरूले उतारेका चित्रले तिनीहरूलाई निकै मनोरंजन दिएका छन् तर ढोंगीहरूले यस स्वाँग मन पराएनन्। अनायास तिनीहरू विचलित भएका छन्। यिनीहरूको ढोंगको हाँसो उड़ाउने औ यस्ता

इलमको भण्डाफोड़ गर्ने मेरो साहस देखेर यिनीहरू आश्चर्यचकित भएका छन्। यसमा कतिपय इमान्दार व्यक्तिहरू पनि सम्बन्धित छन्।"

"मेरा यस्ता ठूल-ठूला अपराधको निम्ति यिनीहरूले मलाई क्षमा गर्ने सक्तैनन् औ यिनीहरू रिसले मेरो नाटकको विरोधमा खड़्गहस्त भएका छन्। यिनीहरूले चतुराईसँग नाटकको त्यस पक्षमाथि आक्रमण गरेनन् जसले यिनीहरूलाई चोट पुराएका छन्। यिनीहरू निकै चलाख छन् अनि जान्दछन् कस्तो आचरण गरे यिनीहरूको आन्तरिक कुरा नाङ्गिन सक्छ।"

"यिनीहरूले आफ्नो प्रिय बानी अनुसार निजी स्वार्थलाई ईश्वरको नाँउपछि लुकाएका छन् ; **'लेँ तारतूफ'** यिनीहरूको दृष्टिमा यस्तो एउटा नाटक हो जसले धार्मिकताको तिरस्कार गर्दछ। शुरुदेखि शेषसम्म यो हेय छ औ यसमा यस्ता केही छैनन् जुन आगोमा पोल्ने लायक नहोउन्।"

ढोंगीहरू अनि अन्यान्य ती व्यक्तिहरू (जसको चरित्रबारे मोलेयरले व्यंग्य गरेका थिए)—का प्रतिक्रियाहरूको बीचमा भएको अन्तर मोलेयरले राम्ररी देखे। धोखेबाज कुलीन अत्युच्चाकांक्षी बनिया, कंजूस, धोखापाउने लोग्ने, पण्डिता (वा पण्डितम्मन्या), *मानवतादेखि घृणा गर्ने त्यो व्यक्ति जो हरेकपल आफ्नो हृदय चिरेर देखाउन तत्पर रहन्छ,* औ यसै प्रकारका अन्यान्य विषय जुन सँधै हाँसोको सठीक लक्ष्य हुन्छ।

यिनीहरू आफ्ना दुर्बलताहरूको निम्ति व्यंग्यकारको आक्रमणको शिकार हुन्छन्, आफ्नो दुर्गुण अथवा स्वार्थ-बुद्धिले कदाचित होइन र नै। अर्कोतिर ढोंगीहरू आफ्नो स्वाँग कसैले चाल नपाएकोमा ठूलो सफलता ठान्छन्। यस्तो अवस्थामा यिनीहरूतिर कुनै संकेत हुँदा उनीहरूको संकेत खतरामा पर्न सक्छ। जसको जीवन-वृत्ति औ सम्पन्नता हाँसोले गर्दा संकटमा पर्नसक्छ, उनीहरू आफैले गरेको दिल्लगी कहिल्यै मन पराउँदैनन्।

**'लेँ तारतूफ'**—मा मोलेयर सत्रहौं शताब्दीको (जुन फ्रांसेली साहित्यमा 'नैतिक व्यस्तता'-को महान् युग ठानिन्छ) सबभन्दा महान नैतिकतावादीको रूपमा देखिन्छन्। यसरी उनी पास्कल, रोशफूकोँ (Rochefoucauld) औ लँ ब्रुयेर (La Bruyere) का सहधर्मी हुन्। हास्य-नाटकको विषयमा यो नैतिक धारणा, मोलेयरले राजालाई दिएका स्मृति-पत्र, उनीद्वारा प्रकाशित पत्र, अनि उक्त नाटकको प्रथम संस्करणको भूमिकामा छर्लंग पारिएका छन्। यहाँ भूमिकाको अंतिम अंश उद्धृत छ—"हास्य-नाटकको काम मान्छेको दुर्गुणहरूलाई सुधार्नु हो भने यसमा 'सुविधाभोगी वर्ग' हुनै पर्छ भन्ने कुनै तर्क म देख्तिनँ। एउटा राज्यको निम्ति यस्ता 'सुविधाभोगी वर्ग' अर्का व्यक्तिहरूका निम्ति अझ डरलाग्दो हुन्छन्। अनि हामीले के देखेका छौं भने रंगमञ्चमा सुधारको प्रबल शक्ति हुन्छ। गम्भीर नैतिकताको सुन्दरतम् चमक प्रायः व्यंग्य भन्दा थोरै शक्तिशाली हुन्छ अनि अधिकांश मानिसलाई सुधार्न तिनीहरूका दोषहरूको चित्रणभन्दा बढ़ी शक्तिशाली उपाय अरु छैन। संसारको अघि दुर्गुणहरूलाई हाँसोको विषय बनाउनु त्यसमाथि ठूलो आघात

गर्नु हो। मानिसले उलाहना सहजै सहन सक्छ तर व्यंग्य सहन सक्तैन। मानिस भलै दुष्ट बन्न चाहन्छ—तर त्यो व्यंग्यको पात्र बन्न कदाचित चाहँदैन।"

संक्षेपमा, हास्य-नाटकको विषयमा मोलेयरको धारणा यै हो अनि वर्तमान युगमा यो ज्यादै उपदेशात्मक लाग्नसक्छ। तर यो भनिदिन आवश्यक छ—अरु जिनीस झैं उपदेशात्मकताको सम्बन्धमा पनि लोक-रुचि परिवर्तित हुन्छ औ कालान्तरमा यो भिन्नै पनि हुन सक्छ। हाम्रो यस युगले व्यक्तिगत आचरणको सम्बन्धमा उपदेशात्मकताको हँसी उड़ाउँछ तर सामाजिक व्यवहारको सम्बन्धमा अत्यन्त भयंकर औ गम्भीररूपले उपदेशत्मक हुन पुग्छ। हाम्रो सम्पूर्ण नैतिक समझदारी सामाजिक अन्यायमाथि केन्द्रित छ औ व्यक्तिको नैतिक स्तरको समस्यालाई झेल्ने औ समाधान गर्ने प्रवृत्ति हामीमा कमै देखिन्छ, यद्यपि आज यो समस्या सँधैभन्दा अझ उग्र देखिन्छ—अतः विचारयोग्य छ।

सामाजिक नैतिकताप्रति आजको व्यवस्थाले अन्याय औ दुःख दूर गरेको भए पनि यो भन्न सकिन्न यसको निम्ति कुनै मूल्य चुकाउन परेन। सामाजिक न्यायमाथि आज जुन जोड़ दिइन्दैछ, त्यसले उनीहरूलाई (जो तिनीहरूसँग दुःखी भएका छन् औ जसले तिनको निन्दा गरेका छन्) ती जम्मै दोष अर्काको थाप्लोमा थोपर्न प्रेरणा दिएको छ। यसले हामीमा यो प्रवृत्ति जागेको छ कि हामी भलो औ कुभलोलाई समाजका दुइ विरोधी वर्गमा बाँड़िदिन्छौं औ एउटा वर्गलाई सम्पूर्ण रूपले शहीद अनि अर्कोलाई सम्पूर्ण रूपले दानव मानिलिन्छौं। यसरी, यस प्रवृत्तिले वर्ग-द्वेष औ घृणालाई यस्तो उकास्छ जसको कुनै उदाहरण प्राचीन युगमा भेटिन्न। अर्कोतिर व्यक्तिको नैतिकतामाथि जोड़ दिँदा मान्छेलाई आफ्नो भित्री दोष पर्गेल्ने शिक्षा प्राप्त हुन्छ अनि त्यसमा दया उप्जन्छ। आज जब सामाजिक नैतिकताप्रति हाम्रो भावना अघिभन्दा कता हो कता धेरै जागरुक भएको छ, हामी मजासंग व्यक्तिको नैतिकतालाई त्यो महत्व दिन्छौं, जुन कुनैताका साहित्यलाई प्राप्त थियो।

तर, मोलेयरको कलामा नैतिकताको तत्व (जसलाई उनले कहिले बिर्सेनन्) पट्टि ध्यान आकर्षित गर्दा तिनीहरूलाई 'एकले ज्यास्टों' वा 'रोशफूकों' जस्ता उपदेशको रूपमा चित्रित गर्नै पर्छ भन्ने आवश्यकता छैन। उनी एकजना कलाकारको रूपमा पनि त्यतिकै महान् थिए अनि उनका रचनाहरूलाई भलै त्यो **'ले ँ तारतूफ'** झैं अत्यन्त उपदेशात्मक रचना नै किन नहोस् मुख्यरूपले साहित्यिक कला-कृति ठान्नु पर्छ, यद्यपि यो रचना वा मोलेयरका अन्य कुनै पनि रचना 'कला कलाको निम्ति' माथि लेखिएका कुनै 'स्कूली निबन्ध' चाहिँ होइन। आधुनिक धारणा अनुसार कला, मानव-मस्तिष्कको आफै-आफमा पूर्ण क्रिया हो अनि मानिसका अन्यान्य भलाईसँग यसको विरोध अमेट छ। प्राचीन कलाका कुनै पनि महान् कलाकारलाई (जस्तै एस्किलस वा सोफोक्लिज, दांते वा माइकेलञ्जेलो, शेक्सपियर वा मोलेयर) यो कुरा बुझ्न गाह्रो पर्‍यो। यस भेदलाई मानिस कृत्रिम सम्झन्छन् औ यस भेदले यथार्थमा साहित्य औ जीवन बीचमा ठूलो

खाडल खनेका छन् औ यसले आकाश-कुसुम प्राप्त गर्ने इच्छालाई हौसला प्राप्त भएको छ।

मोलेयर एकजना कलाकारको रूपमा सफल भएको कारण नाटकको रूप विधानमा उनको दखल थियो। उनी साहित्यिक नाटकको लेखक होईनन्, तर शेक्सपियर सरह एक अभिनेता, रंगमंच व्यवस्थापक अनि नाटककार थिए। यसै कारण रंगमञ्चमा उनी जीवनलाई जसरी उद्घाटित गर्छन् त्यसमा यस्ता शक्ति औ जीवन जस्तै यथार्थता हुन्छन् जसलाई एकजना शुद्ध साहित्यिक नाटककारले प्रस्तुत गर्ने आकांक्षा राख्न सक्तैनन्।

उनको सफलता आफ्नो हास्य अनि (साधारण) समझदारीमाथि पनि निर्भर गर्छ। यी गुणले उनको नैतिक उद्देश्यलाई एक नयाँ आकर्षण औ वातावरण प्रदान गर्छ अनि मानिसको भाग्यमाथि चिन्ता गर्दै रहँदा अवसादग्रस्त हुनुको सट्टा यिनै उनको भाव-शक्तिको मूलभुत गुण हुन्छन्। समग्रमा उनी यही बुझ्छन्—जीवनमा आशा औ खुशी हुन्छ, औ त्यसमा मिथ्याभिमानीहरू वा नम्रता-प्रदर्शकहरूको निम्ति कुनै ठाउँ छैन। उनको एलमिर, तारतूफको प्रेम आवेदनमा रिसाउँदिनन् तर उ आफ्नो झड़केलो छोरोको अपमानजनित आक्रोशलाई शान्त गर्न यसो भन्छिन्—"यति बिघ्न हल्लाखल्ला मच्चाउने मेरो स्वभाव छैन, आइमाईहरू यस्तो मूर्खतामा हाँस्छन् अनि कहिले-काहीं आफ्ना लोग्नेहरूलाई यस्ता प्रसंग सुनाएर दिक्क दिन्छन्!"

मोलेयरको अर्को बुद्धिवती स्त्री-पात्र दोरिन (Dorine) यस प्रश्नलाई अझ हलुङ्गो बनाउँछे। तारतूफ दोरिनको उरोज देखेर अपमानित भएको भाव व्यक्त गर्छ। यसमा दोरिन भन्छे—"म यति चाँड़ै कसैको नियन्त्रणमा आउन सक्ने होइन। टाउकोदेखि पैतालासम्म तपाईंलाई निर्वस्त्र देख्दा समेत मेरो मन डोल्ने छैन।" यही नै उच्च औ गम्भीर हास्य-नाटकको प्रामाणिक स्वर हो, जुन प्रस्तुत उदाहरणमा एउटा यस्तो संसारको नक्शा उभ्याउँछ जसमा आईमाई चरित्रहीनताको सामान्य शंकामा तरवार, फाँसी वा घरदेखि लखेटिने संकट उठाउँदैनन्।

मोलेयरका प्रसिद्ध चरित्रहरूमा एकजना दोरिन पनि हो, तर त्यो हास्य-नाटकको 'चेरी' मात्र होइन। त्यो सत्रहौं सदीको एउटा यथार्थवादी व्यक्तित्व हो—एकजना फ्रांसेली कृषक आईमाई, जो शहरमा काम गर्छे अनि जो शहरी जीवनको संघर्षहरूमा खेत-बेंसीको तीब्र हावाको गति ल्याउँछे। जुन स्वच्छन्दताले त्यो आफ्नो मालिक अनि परिवारका अन्य सदस्यहरूसित कुराकानी गर्छे त्यसबाट प्राचीनकालको मालिक औ नोकरहरू बीचको आत्मीयता प्रतिविम्बित हुन्छ। त्यस युगमा पनि सामाजिक बनोट कठोर वर्ग-विभाजनले चिह्नित हुँदा-हुँदै पनि मान्छे, इलिम औ वातावरणको भेदले आजको युगभन्दा थोरै विभाजित थिए।

**'लें तारतूफ'**-को अर्को एउटा प्रसंग यहाँ उल्लेखनीय छ। एकजना तरुणीलाई आफ्नो प्रेमीसँग बिहे गर्ने अधिकार हुनुपर्छ भनी मोलेयर चाहन्छन्। यसमा माता-पिताद्वारा

निर्धारित विवाहको निन्दा वाञ्छित छ। ओरगोंले जब तारतूफसँग आफ्नी छोरीको विवाह गरिदिंदैछु, भनी भन्छ, औ जब आमाप्रतिको आज्ञाकारिताको भावले मादिआनको इच्छालाई पंगु बनाइदिन्छ, दोरिनले नै त्यतिबेला विद्रोह गर्ने प्रेरणा दिन्छे–"उहाँलाई भनिदिनोस् एउटा हृदयले अर्कोको निम्ति प्रेम गर्न सक्तैन, अनि तपाईं आफ्नो निम्ति बिहे गर्नु हुँदैछ, उहाँको निम्ति होइन। अनि फेरि जब सबै तपाईंकै निम्ति भइरहेको छ भने लोग्ने तपाईंलाई मन पर्नुपर्छ उहाँलाई होइन अनि उहाँको तारतूफ उहाँको निम्ति यति आकर्षक छ भने उहाँ आफैले कुनै बाधाबिना बिहे गर्न सक्नुहुन्छ।" यस्तो लाग्छ–यसमा कुनै खरोपनरहित इब्सेनको नायिकाको स्वर सुनिन्दैछ।

अन्तमा यस कुरामा ध्यान दिन आवश्यक छ कि मोलेयरको दर्शनको प्रश्नको पनि अस्तित्व छ, यद्यपि यहाँ यसको चर्चा समीचीन छैन। मोलेयरले कलेजमा दर्शनको अध्ययन गरेका थिए–यसमा आफ्नो समयको अरस्तू-दर्शनको प्रतिक्रिया भएको थियो, तर उनी 'कर्टेज्यन' दर्शनतिर आकृष्ट भएनन्। उनको झुकाव एपिक्यूरियन दर्शनतिर थियो जुन उनले गासाँदीसँग प्राप्त गरेका थिए। उनीमाथि गासाँदीको ठूलो प्रभाव परेको थियो। तर मोलेयरलाई कुनै विशेष दर्शनको अनुगामी मान्नै पर्छ भन्ने त्यस्तो कुनै आवश्यकता छैन, यद्यपि उनको निश्चित रूपले आफ्नो जीवन-दर्शन थियो। स्वाभाविक रूपले उनले 'अरूप' लाई मन परांउदैन थिए अनि प्रतिभाको झुकाव समय सापेक्ष थियो। उनको बौद्धिक गठन केही यस्तो थियो जसलाई पास्कलले 'उर्बर-बुद्धि' (Esprit de Finesse) भनेका थिए। **'लें तारतूफ'**-को यस संक्षिप्त परिचयको अन्त्यको निम्ति मोलेयरको सम्मानमा अंग्रेज दार्शनिक सामुएल अलेक्जाण्डरको यस अभिव्यक्ति भन्दा अर्को असल शब्द छैन–"मैले एकजना महान व्यक्ति, महान कलाकार, ज्ञान औ उल्लासको अजस्रस्रोत अनि एकजना अतिप्रिय मित्रप्रति थोरै शब्दमा कृतज्ञता प्रकाश गर्ने प्रयत्न गरेको छु।"

**–स्तानिस्लास ओस्त्रोरोग**

# पहिलो अंक

## दृश्य-1

(श्रीमती पेरनेल, पिलपोत, एलमिर, मारिआन, दोरिन, दामी, क्लेआँत)

**श्रीमती पेरनेल :** हिंड पिलपोत, हिंड; म यहाँबाट निस्किहालूँ।

**एलमिर :** तपाई यति चाँडे हिंडनु हुँदैछ कि हामीलाई तपाईंसँगै हिंड्न कठिन भइरहेछ।

**श्रीमती पेरनेल :** भयो बुहारी, त्यति परसम्म जाइरहनु पर्दैन। मलाई यस्तो शिष्टाचार चाहिन्दैन।

**एलमिर :** तपाई यति चाँडो किन हिंडनु भएको? हामी त आफ्नो कर्त्तव्य पालन गर्दैछौं।

**श्रीमती पेरनेल :** मलाई यस घरको काम कुरो निको लागेन। कसैले मेरो वास्ता गर्ने होइन। कसैले मेरो कुरा सुन्ने होइन। सबै आफ्ना आफ्नै तालमा छन् मानुं यो राजा पेतोको दरबार हो। (राजा पेतो भिखारीहरूको राजाको रूपमा प्रसिद्ध थिए। उनको दरबारमा प्रत्येक मानिस नै 'राजा' थियो। यसरी 'राजा पेतोको दरबार'–ले अराजकताको बोध गराउँदछ।)

**दोरिन :** तर...।

**श्रीमती पेरनेल :** ठिटी, तँ साह्रै कुरौटें र अशिष्ट छेस्। सबै विषयमा तँ सल्लाह दिन्छेस्।

**दामी :** तर...।

**श्रीमती पेरनेल :** अनि मेरो नानी, तँ महालठुवा छस्। यो कुरा तेरी बजैले भन्दैछिन्, सुनिस्। मैले तेरो बाबुलाई खबर दिइसकेको छु। तैंले यस घरमा दुःख बाहेक अरु केही दिने होइनस्।

**मारिआन :** मलाई यस्तो लाग्दैछ...।

**श्रीमती पेरनेल :** हे भगवान! तँ यसकी बहिनी चाहिँ अझ मापाकी छेस्। तेरो चाला बुझ्न झन् साह्रो छ। उखानै छ-'स्थिर पानी भन्दा डरलाग्दो अरु कैही छैन'। यस्तो चालासँग मलाई एकदमै घृणा छ।

**एलमिर** : तर, आमा...।

**श्रीमती पेरनेल :** बुहारी, तिम्रो व्यवहार अनुचित छ भन्दा ननिको नठान। तिमीले यिनको छेऊमा असल आदर्श राख्नु पर्ने हो। यिनको स्वर्गवासी मुमाले यो भन्दा असल व्यवहार गर्थिन्। तिमी अतिव्ययी पनि छौ। आफ्नो लोग्नेलाई खुशी राख्नु राजकुमारी झैं संवारिनु पर्दैन।

**क्लेआँत** : तर श्रीमतीज्यू, तर पनि...।

**श्रीमती पेरनेल :** अनि तपाईं श्रीमान, जो उसको भाई हुनुहुन्छ, म तपाईंहरूलाई सम्मानको दृष्टिकोणले हेर्दछु। तपाईंलाई स्नेह गर्छु अनि तपाईंप्रति श्रद्धा पनि राख्छु। हेर, तिमी मेरी बुहारीको भाई हौ र म तिमीलाई इज्जत गर्छु। तर, म मेरो छोराको ठाँउमा भएको भए म भन्ने थिएँ, तिम्रो यहाँ आउने केही काम छैन।

**दामी** : निस्सन्देह, तपाईंको श्रीमान तारतूफ साह्रै भाग्यवान हुनुहुन्छ......।

**श्रीमती पेरनेल :** उहाँ योग्य व्यक्ति हुनुहुन्छ, उहाँको उपदेश सुन्नुपर्छ। तिमी जस्ती पगलीले उनको खिसी गरेको देख्दा मेरो कंसीरी तात्तिएर आउँछ।

**दामी** : के? अनि यस्तो ठगले हामीमाथि धाक जमाएको म सहन सक्तिनँ।

**दोरिन** : हामीले तिनको आदर्श मान्नु हो भने हामीले गरेका जम्मै दोषयुक्त हुनेछ, किनभने यी आलोचक महोदयले हरेक कुरामा दोषै-दोष देख्नु हुन्छ।

**श्रीमती पेरनेल :** अनि तिनले जुन कुरामा दोष देख्नुहुन्छ त्यो वास्तवमा दोषयुक्त हुन्छ। तिनले तिमीहरूलाई स्वर्गको बाटो देखाउन चाहनु हुन्छ, अनि तिनको आदर गर्न सिकाउनु मेरो छोरोको कर्त्तव्य हो।

**दामी** : हेर्नुहोस् आमा, मलाई त्यसको भलो न बुवाले न त अरु कसैले चितउन लाउन सक्छ। मैले त्यसकोबारेमा यसो भनिनँ भने मान्नुहोस् म आफूलाई धोखा दिइरहेको छु। हर घड़ी त्यसको व्यवहारमा मलाई रीस उठ्छ। एकदिन यस नीचसित मेरो झगड़ा हुने सम्भावना देख्दैछु।

**दोरिन** : सांच्चै एकजना अपरिचित मान्छेले हामीमाथि धाक जमाउनु आउँदा, जसको खुट्टामा जुत्ता थिएन, जसको कपड़ाको मोल नै छः पैसा थियो, त्यस्तो भिखारीले आफ्नो स्थिति भुलेर सबै कुरामा दखल देओस् र मालिक बनोस्। यो हाम्रो अपमान हो।

**श्रीमती पेरनेल :** चुप लाग। तिनले भने झैं काम भए सबै कुरा राम्ररी चल्ने थिए।

**दोरिन** : तपाईंको कल्पनामा त्यो एकजना देवता हो। मान्नुहोस् त्यसका सारा व्यवहार ढोंग मात्र हुन्।

**श्रीमती पेरनेल** : यो मुख त हेर!

**दोरिन** : मत त्यसको वा त्यसको लोराँप्रति विश्वास गर्न अघि दसपल्ट विचार गर्नेछु।

**श्रीमती पेरनेल** : म जान्दिनँ, नोकर भित्री हृदयले कस्तो छ तर मालिकको पवित्रता म दाबी गर्न सक्छु। तिमीहरू तिनलाई घृणा गर्छौ अनि तिनको कुरालाई अवहेलना गर्छौ कारण तिनले तिमीहरूलाई साँचो, खरो कुरा सुनाई दिनुहुन्छ। तिनको हृदय क्रुद्ध हुन्छ। अनि तिनको एक मात्र स्वार्थ ईश्वरको सेवा हो।

**दोरिन** : हो। तर केही समयदेखि कोही घर आओस् त्यो किन चाहन्दैन? कुनै भलाद्मीलाई घर आउँदा धर्ममा के आघात पर्छ? औ टाउको फुट्ने गरी त्यो किन त्यसरी हल्लाखल्ला मच्चाउँछ? यो हामी बीचको कुरा मात्रै हो। त्यसले यसो किन गर्छ तपाईंलाई सोधूँ? मलाई लाग्छ श्रीमतीज्यूसँग त्यो आरिस गर्छ।

**श्रीमती पेरनेल** : चुप लाग, सोच विचार गरेर कुरा गर। यहाँ आउनेहरूको तिनले मात्र खैरो खन्नु हुन्न। दरवाजामा यहाँ हुने तिमीहरूको भीड़ले, ढोका अघि उभ्याएका तिमीहरूको बग्घिहरूले सबै असन्तुष्ट छन्। म मान्दछु यसले कुनै असल क्षति हुने होइन तर मानिसहरूले यस्ता कुराको चर्चा गरून् यो राम्रो कुरा होइन।

**क्लेआँत** : अरे श्रीमतीज्यू, तपाईंहरूलाई बोल्नू मनाही गर्नु हुन्छ? हाम्रो कुरा सुनेर आफ्नो असल मित्रलाई छोड़े अशुभ हुनेछ। हामीले त्यंसो गर्‍यौं भने पनि मान्छेहरूको मुख थुनिन्छ? नराम्रो भन्नेहरूसित कसैले आफुलाई बचाउन सक्तैन। हामीले मूर्खतापूर्ण प्रलापको कुनै वास्ता गर्नु हुँदैन। हामीले इमान्दारीको जीवन निर्वाह गर्नु पर्छ, नराम्रो भन्नेहरूले जे मन लाग्छ गरून्।

**दोरिन** : हाम्रो विरुद्ध भनिने प्रलापहरूमा के हाम्रो छिमेकी दाने र उनको लोग्नेको हात त छैन? जसको आचरण हास्यास्पद छ, त्यसले नै सर्वप्रथम परनिन्दा गर्छ। यस्ताले साह्रै चतुरता साथ पहिले अर्काको प्रेमलीलाको चर्चा गर्छन् औ मज्जा मानी-मानी नूनखोर्सानी थपेर अन्यत्र फैल्याउँछन्। यिनीहरू अर्काको कामलाई आफ्नो रंगीन चश्माले हेर्छन् अनि संसारको सामु आफ्नो कामलाई नै उचित प्रमाण गर्न सकिन्छ भन्ने ठान्छन्। यस्तो कामलाई वास्तविकताको रूप दिने प्रयत्नमा आफ्नो षड्यन्त्रलाई निश्छल देखाउन चाहन्छन्; अथवा अर्काको थाप्लोमा त्यो बदनामी मढ्न चाहन्छन् जसकोमुनी तिनीहरू आफै थिचिएका हुन्छन्।

**श्रीमती पेरनेल :** यी सब तर्कको प्रस्तुत विषयसित कुनै सम्पर्क छैन। सबैले जान्दछन् ओरौंतको जीवन आदर्श हो। उसको सबै चिन्ता ईश्वरनिष्ठ छ। उसले पनि यहाँको गतिविधि एकदम रूचाउँदिनन् भनेर मलाई भनिसकेकी छन्।

**दोरिन :** क्या राम्रो उदाहरण! कति राम्री महिला हुन् तिनी। ठीक हो, तिनको जीवन सीधासादा छ, तर तिनको यो धार्मिक कामको निम्ति तिनको उमरे नै जिम्मेवार छ। सबैले जान्दछन् लाचारीले उनले नम्रता प्रदर्शन गर्छिन्। जबसम्ब तिनले मानिसलाई आकर्षित गर्न सकिन् तबसम्म आफ्नो आकर्षणको तिनले पूरा-पूरा लाभ उठाइन्। अब तिनको आँखाको तेज हराउन साथै त्यो संसारलाई छोड़न चाहन्छिन् जुन संसारले तिनलाई छोड़िदियो अनि आफ्नो थोत्रो आकषर्णको कमजोरीलाई महान ज्ञानको ओढ़नीले ढाक्न चाहन्छिन्। आजकालकी चंचलाहरूको यही चाला छ। आफ्नो प्रेमीहरूलाई आफुदेखि टाढ़ा भएको देख्दा यिनीहरूलाई मर्मान्तिक आघात लाग्छ। यस प्रकार परित्यक्ता हुनु पर्दा, यो अन्धकारमयी निराशामा "ज्ञानी"-को पेशा छोड़ी यिनीहरूलाई अरु आउँदैन। फेरि यी राम्री आईमाई यति कठोर हुन्छिन् कि हर चीजमा यिनले दोष देख्छिन्, कसैलाई क्षमा गर्दिनन्। अर्काको कामको तीव्र निन्दा गर्छिन्, कुनै सिद्धान्तको आधारले होइन तर ईर्ष्याले गर्दा; किनकि तिनी यो सहन सक्तिनन् मानिसले त्यो आनन्द उपभोग गरून् जसको निम्ति वार्द्धक्यले तिनको शक्ति हरेको छ।

**श्रीमती पेरनेल :** तिमीहरूलाई यस्तो कल्पित कथा मन पर्छ। बुहारी, म तिम्रो घरमा छु यसर्थ चुप लाग्न बाध्य छु। कारण श्रीमतीज्यूलाई त दिन भरिनै गफ गर्नु छ। र पनि समयमा आफ्नो कुरा भन्छु। म मान्छु, मेरो छोराले यो भक्त मानिसलाई घरमा राखेर अति ठूलो बुद्धिमानी गरेको छ। ईश्वरले आवश्यकता परेर नै तिनलाई यहाँ पठाएका छन् जसले तिमीहरूको भ्रष्ट हुन लागेको बुद्धिलाई सुमार्गमा ल्याउन सकून्। तिमीले आफ्नो आत्म-शुद्धिको निम्ति नै उसको कुरा सुन्नु पर्ने हो किनकि उनले त्यही कुरामा मात्र दोष देखाउँछन् जुन वास्तवमा दोष-मुक्त छन्। मानिसको यहाँ आउनु-जानु, यो नाच-रंग, बातचीत सब शैतानका कार्य हुन्। यस्तो मौकामा कुनै पवित्र कुरा सुन्न सकिँदैन। सब व्यर्थ आलाप र सुरहीन राग हुन्छ।

कहिले-काँही आफ्नो छिमेकी पनि यस्तो मौकामा सामेल हुन्छ अनि तिललाई ताड़ बनाउँछन्। असल मानिसको बुद्धि पनि यस्तो भीड़भाड़बाट उत्पन्न भ्रान्तिमा बिग्रन्छ। केही क्षणमा हजारौं दूषित कथा फैलिन्छन्, जस्तै एक डाक्टरले त्यो दिन ठीके भने; सब मिलाएर एक अतिनै राम्रो 'बेबिलोनको धरहरा'[1] बनिन्छ; किनभने प्रत्येक व्यक्ति इच्छानुसार बक्ने गर्छ। अँ त यस प्रसंगलाई ल्याउने कुरालाई नै लियौं (क्लेआँतपट्टि इशारा गरेर) लौ श्रीमानलाई हेर, दाह्रा किट्न लागेका छन्। जाऊ ती मूर्खहरूलाई खोज जो हाँसोका पात्र छन्; (एलमिरलाई) अनि बिना...। बुहारी अब बिदा, अब केही भन्न चाहन्न, सम्झ अब मेरो मनमा तिम्रो निम्ति आधा प्रेम पनि छैन अनि म यहाँ खुट्टा पनि राख्ने छुइनँ।

(पिलपोतलाई एक चड़कन लगाउँदै)

तँ हिंड्, ठाड़ै सपना देख्छेस् र मुख बाउँछेस्। तेरो कान रातो पारिदिउँला, फोहरी! हिंड।

## दृश्य-2

(क्लेआँत, दोरिन)

**क्लेआँत** : अब म त्यसकोपछि जान्न, फेरि कतै त्यो मसित झगड़ा गर्न नआइपुगोस्। कतै बुढ़िया....।

**दोरिन** : ओहः राम्रै भयो, उनले तपाईंको कुरा सुनेनन् नभए उनले आफै तपाई क्षीणबुद्धिको हुनु भएको छ भन्थे। अनि फेरि उनको अहिले यति उमेरनै कहाँ भएको छ कसैले उनलाई बुढ़िया भनोस्।

**क्लेआँत** : बिना कारण हामीमाथि जंगिनु भयो। उता उनी आफ्नो तारतूफप्रति आसक्त भए झैं अनुभव हुन्छ।

**दोरिन** : अरे, यो त केही होइन। उनको छोरा त तारतूफ भन्दा ज्यान दिन चाहन्छन्, अनि उनीहरूलाई देख्नु भो भने तपाई भन्नु हुन्छ "यो कत्ति नराम्रो?" हाम्रो यहाँ बिद्रोहको दिनमा उनलाई बुद्धिमान हुने यश मिलेको थियो, अनि उनले साहस गरेर आफ्नो राजकुमारको सेवा गर्नु भएको थियो, तर जहिलेदेखि उनको मगजमा तारतूफ

---

1. एन. कोसेंको 'ला कर सेंत' मा एक ठाँउमा छ : 'दानवहरूले बावेलको धरहरा बनाउन चाहे, तर आईमाईहरू...गफको धरहरा बनाउँछन्।'—अनु.

बसेका छन् त्यसताकदेखि उनी मूर्ख सरि हुनुभएको छ। उनले त्यसलाई आफ्नो भाई भन्नुहुन्छ, अनि आफ्नी आमा, छोरा, छोरी र स्वास्नीलाई भन्दा सय गुणा प्रेम गर्नु हुन्छ। आफ्नो सम्पूर्ण गोप्य कुराको निम्ति तारतूफलाई नै एकमात्र विश्वासपात्र मान्नु हुन्छ। त्यसलाई नै आफ्नो सम्पूर्ण कामको निर्देशक मान्नु हुन्छ। उनले त्यसलाई प्यार गर्नु हुन्छ, म्वाई खानु हुन्छ, अनि म ठान्छु कुनै प्रेमिकाप्रति यति माया देखाउन सकिन्न जति उनले तारतूफको निम्ति देखाउनु हुन्छ। खाना खाँदा पनि उनले त्यसलाईनै विशिष्ट स्थान दिनु हुन्छ। बड़ो आनन्दले छः छः जनाको खाना खाएको हेरिरहन्छिन्। उनी चाहनु हुन्छ सबै चीजको असल अंश चैं त्यसैलाई नै दिया जावस् अनि त्यसले डकारे भनेपनि उनले भन्नु हुन्छ भगवानले तपाईंको भलो गरून्"। अर्थात् उनी त्यसकोपछि पागल हुनहुन्छ, त्यो नै उनको सबै कुरा हो; उनको आदर्श हो। उनी सर्वदा त्यसको प्रशंसा गर्नु हुन्छ, सबै कुरामा त्यसको नै उदाहरण दिनु हुन्छ। त्यसको सानो भन्दा सानो कार्यलाई लीला सम्झनु हुन्छ, अनि, त्यसको प्रत्येक शब्दलाई ब्रह्मवाक्य। तारतूफ, जो आफ्नो शिकारलाई राम्ररी चिन्दछन् औ जसलाई आफ्नो सुखोपभोगको चिन्ता छ, सैकड़ौं ढोंग रचेर उनीमाथ आफ्नो धाक जमाउँछ। आफ्नो यस ढोंगद्वारा त्यसले उनसित धेरै रकम हत्याएको छ, अनि त्यो सम्झन्छ हाम्रो दोष देखाउने त्यसलाई पूरा-पूरा अधिकार छ। यहाँसम्म कि त्यसको मूर्ख नोकर पनि आफूलाई बुद्धिमान ठान्छ र हामीलाई अर्ती दिन खोज्छ। आँखामा बर्बरता लिएर त्यसले हामीलाई हेर्छ औ हामीलाई उपदेश दिन्छ। हाम्रो रिबन, लीला (रूज) र मूश[1] त्यसले फ्याँकिदिन्छ। दुष्टले त्यो दिन फ्ले रँ द सें, मा एउटा रूमाल राखेको देख्यो र त्यसको धुजैधुजा पारिदियो अनि भन्न लाग्यो शैतानको शृंगार वस्तुलाई पवित्र वस्तुसित मिलाएर हामीले एक भयंकर अपराध गरिरहेका छौं।

1. यूरोपका आईमाइहरू कालो रंगको रेशमी कपड़ाको टुक्रालाई शृंगारको रूपमा अनुहारमा व्यवहार गर्छन्। सत्रौं/अठारौं सदीमा यो यूरोपमा खूब प्रचलित थियो। अंग्रेजीमा यसलाई 'पेच' भन्दछन्।—अनु.

## दृश्य-3

(एलमिर, मारिआन, दामी, क्लेआँत, दोरिन)

**एलमिर** : (क्लेआँतसित) तिमी भाग्यशाली छौ किनभने उनले हामीलाई दैलोमै दिनु भएको आदेश तिमीले सुन्न पाएनौ। तर मैले आफ्नो पतिलाई आउँदै गरेको देखेकी छु। उहाँले मलाई देख्नु भएन, यसर्थ माथि गएर म उहाँलाई प्रतीक्षा गर्नेछु।

**क्लेआँत** : म एकछिन पर्खनेछु व्यर्थको कुरासित जोगिनु उनलाई 'नमस्ते' मात्र भन्नु छ।

**दामी** : उहाँसित मेरी बहिनीको विवाहको निम्ति अलिक कुरा गरिहेर्नुहोस्। तारतूफले यसको विरोध गर्नेछ भन्ने मलाई शंका छ, किनकि मेरो बाबूलाई उ अनेक प्रकारले टाली रहन्छ अनि यस विषयमा म कति चासो लिन्छु त्यो तपाईंलाई थाह छ। मेरी बहिनी र वालेर माझ त्यही प्रेम-भावना रह्यो भने तपाईंलाई थाहै छ मलाई पनि वालेरकी बहिनी प्रिय छ अनि प्रयोजन पर्‍यो भने...।

**दोरिन** : उहाँ भित्र आउनु हुँदैछ।

## दृश्य-4

(ओरगों, क्लेआँत, दोरिन)

**ओरगों** : ओहो! नमस्ते भाई।

**क्लेआँत** : तपाईंसित फेरि भेट भएर म खुशी छु, म बाहिर जान लागेको थिएँ। यसबेला गाउँ उति मोहक बन्न सकेको छैन।

**ओरगों** : दोरिन...। दाई, पर्खनुहोस्। तपाईंलाई अलिक कष्ट हुनेछ। पहिले मलाई यहाँको समाचार बुझ्नु दिनुहोस् र निश्चिन्त हुन सकूँ। यी दुई दिन राम्ररी त काटियो? के-के भयो? मानिसहरू कस्ता छन्?

**दोरिन** : अस्ति मालिकनीलाई साह्रो ज्वरो आयो। टाउको कस्तो दुखेको नी।

**ओरगों** : अनि तारतूफ?

**दोरिन** : तारतूफ? उहाँ त सञ्चै, मोटा-तगड़ा नै हुनुहुन्छ। अनुहारमा नवीनता छ अनि ओंठ रगत जस्तो रातो छ।

**ओरगों** : बिचरा!

**दोरिन** : साँझमा मालिक्नी झण्डै लड़नु भयो, केही पनि खानु भएन, टाउको दुखेर कस्तो हुनु भयो!

**ओरगों** : तारतूफ चाहिं?

**दोरिन** : उहाँले त केक र मासु मालिक्नीकै छेउमा मज्जाले डमकाउनु भयो।

**ओरगों** : बिचरा!

**दोरिन** : रात छर्लंगै बित्यो तर एकैछिन् आँखा झिमिक्क गर्न सकिनन्। तापले गर्दा सुत्न सक्नु भएन अनि उज्यालो हुँदासम्म हामीले उहाँको छेउमा बसेर रात बिताउनु पर्‍यो।

**ओरगों** : तारतूफ चाहिँ?

**दोरिन** : खाने टेबलदेखि उठेर मीठो निद्रासाथ त्यो आफ्नो गरम ओछ्यानभित्र पस्यो औ भोलिपल्टसम्म निश्चिन्त भएर सुत्यो।

**ओरगों** : बिचरा!

**दोरिन** : अन्तमा, हाम्रो कुरा सुनेर उहाँले रगत निकाल्नु लगाउनु भयो, अनि चाँड़ै उहाँलाई केही आराम भयो।

**ओरगों** : तारतूफ चाहिँ?

**दोरिन** : त्यसले फेरि हिम्मत गर्‍यो, जस्तो हुनुपर्ने थियो। सबै दुःखबाट आफूलाई आश्वस्त पार्‍यो अनि मालिक्नीले निकाल्न लगाउनु भएको रगतको क्षति-पूर्तिको लागि खाने बेलामा चार गिलास रक्सी धोक्यो।

**ओरगों** : बिचरा!

**दोरिन** : अहिले दुवै आरामसँग छन्। मालिक्नीलाई भन्छु-त्यो स्वस्थ हुँदा तपाईं कति खुशी देखिनु हुन्छ।

## दृश्य—5

(ओरगों र क्लेआँत)

**क्लेआँत** : भेनाज्यू, उनले तपाईंकै सामु तपाईंको हाँसो उड़ाइ रहेकी छिन्। यद्यपि म रिस उठाउन चाहन्न, र पनि म भन्छु, उनले ठीकै गर्दैछिन्। के कसैमा यस्तो सनक देख्नु भएको छ? के एकजना मानिसको जादूले तपाईं विस्मृत हुनु सम्भव होला र? त्यसको दुर्भाग्यको दिनमा, त्यसलाई यहाँ ल्याएर सुखी तुल्याएपछि तपाईं...?

**ओरगों** : पख, साला नानी, तिमीलाई थाह छैन, तिमी कसको विषयमा बोल्दैछौ।

**क्लेआँत** : तपाईं यसो भन्नुहुन्छभने ठीकै छ। म त्यसलाई जान्दिनँ तैपनि, त्यो कस्तो मानिस हो, त्यै जान्नलाई...।

**ओरगों** : सालो, उनलाई जानेर तिमीलाई अपार खुशी हुनेछ, अनि तिमी

असीम आश्चर्यमा पर्नेछौ। उनी यस्तो मानिस हुनुहुन्छ...जो...अहा ...एकजना मानिस..., अर्थात् एकजना मानिस। उनको उपदेश मान्नेले अपार शक्ति पाउँछ, उसलाई यस संसार फोहोर जस्तो लाग्छ। हो, उनीसित कुराकानी गरेर म पनि एकदम फेरिएकोछु। कुनै विषयमा आसक्ति नदेखाउनू भनेर उनी मलाई सिकाउँछन्। उनले सबै बन्धनबाट मेरो आत्मालाई मुक्त गराउँनु हुन्छ अनि सालो, सन्तान, आमा र स्वास्नी मरेकी देख्दा मलाई एकरत्ती चिन्ता हुने छैन।

**क्लेआँत** : यी सब मानव भावनाहरू हुन्, भेनाज्यू?

**ओरगों** : ओहो! जुन रूपमा उनीसित मेरो पहिलो भेट भएको थियो तिमीले पनि त्यै रूपमा देखेको भए तिम्रो पनि उनीसित मेरो जस्तै मैत्री हुने थियो। उनी प्रतिदिन पुरै सभाको ध्यान आकृष्ट गर्नु हुन्थ्यो। यत्रो भक्तिले उनले ईश्वरसम्म आफ्ना प्रार्थना पुर्‍याउनु हुन्थ्यो। उनले दीर्घश्वास लिनु हुन्थ्यो, भावाभिभूत हुनुहुन्थ्यो, अनि प्रतिपल नम्रताले पृथ्वीलाई म्वाई खानु हुन्थ्यो, अनि जब म बाहिर निस्कन लाग्थें, उनी झट्ट म भन्दा अघि ढोकामा आएर मलाई पवित्र जल[1] दिन उभिनुहुन्थ्यो। उनको चाकरबाट जसले उनको सम्पूर्ण गतिविधिको अनुकरण गर्थे—उनको र उनको गरीबीको विषयमा थाहा पाएपछि म उनलाई केही दिने गर्थे, तर उनले सर्बदा नम्रतासाथ त्यसबाट केही मलाई फर्काउनु चाहनु हुन्थ्यो। उनले भन्नु हुन्थ्यो, "धेरै भयो, प्रयोजनको दोबर बेसी भयो, म तपाईंको दयाको योग्य छुइनँ।" तर जब फिर्ता लिन चाहन्नथें उनले मेरै आँखाअघि त्यो गरीबहरूमा बाँडिदिनु हुन्थ्यो। अन्तमा ईश्वरको प्रेरणाले मैले घर ल्याएर राखें अनि त्यसपछि यहाँ चारैरितर सुखै-सुख छ। उनले हर चीजको गुनासो गर्नु हुन्थ्यो, यतिसम्म कि मेरी स्वास्नीमा पनि साह्रै रूची राख्नु हुन्थ्यो...मेरो इज्जतको खातिर। कस-कसले मेरी स्वास्नीसित आँखा जुधाउँथे उनले मलाई भन्नु हुन्थ्यो। अनि म भन्दा उनी यस्ताहरूसित बढ़ी रिसाउँथे। उनको धार्मिक उत्साह कहाँसम्म बढेर जान्थ्यो, तिमी अड़कल लगाउन सक्तैनौ। जाबो सानो कुराको निम्ति उनले आफूलाई पापीको संज्ञा दिनुहुन्थ्यो, सानो भूलमा उनी डरले काम्नु हुन्थ्यो। त्यसदिन प्रार्थना गर्दै एउटा जुम्रा समातेर रीसले मार्नु भएकोमा आफुलाई उनले ठूलो दोषी ठहराए।

1. फ्रेञ्चमा 'लो बेनित' (*L; eau benite*) जसको अर्थ 'मंत्राभिषिसिञ्चित जल' हुन्छ।—अनु.

**क्लेआँत** : तर भेनाज्यू, मलाई त तपाईं पागल हुनु भएको जस्तो लाग्छ। तपाईं के भन्न चाहनु हुन्छ? यी सब खेलांची हुन्...?

**ओरगों** : सालो, यी कुराहरूवाट अधार्मिकता प्रकट हुन्छ। तिम्रो मनमा यो कुराले जरा हालेको जस्तो लाग्छ, मैले तिमीलाई दसपल्ट सम्झाएको छु यसो गरेर तिमीले ईश्वरीय कोपको भागी हुनु पर्नेछ।

**क्लेआँत** : तपाईंहरू जस्तोको यही एउटै राग छ। सबै तिनीहरू जस्ता अन्धा हुन् भन्ने चाहन्छन्। असल ज्ञान हुनु अधार्मिकता हो? व्यर्थको आडम्बरदेखि न झुक्नेहरू पवित्र वस्तुको सम्मान गर्दैनन्, तिनमा आस्था राख्दैनन्। हेर्नुहोस्, तपाईंको कुनै भाषणसित म डराउँदिन। म जान्दछु म के बोलिरहेको छु, अनि ईश्वरले मेरो हृदयको कुरा जान्दछन्। हामी तपाईंहरूको रीति-थीतिका ठेकादारको दास होइनौं। नक्कली बहादुर जस्तै नक्कली भक्त पनि हुन्छन्। साँचो बीरहरू जस्ता यशको आह्वानमा चिच्याएको सुनिन्दैनन् त्यस्तै राम्रो र साँचो भक्त, जो ढोंगी छैनन् त्यस्ताको पदचिन्हमा हामी हिंड्न सकौं। तपाईं ढोंग र साँचो भक्तिमा कुनै भेद गर्नु हुन्न र? तपाईं दुवैलाई एउटै भाषाले अभिहित गर्नुहुन्छ? तपाईं आडम्बर र सच्चाईलाई एकै ठान्नुहुन्छ, औ भ्रमलाई यथार्थ ठान्नुहुन्छ? तपाईं छाँयालाई सत्य सम्झिनु हुन्छ? नकली पैसालाई चाहिँ खाँटी? मान्छे पनि, धेर जसो, अचम्मकै हुन्छन्। हामी कहिल्यै तिनीहरूलाई असली स्वरूपमा देख्दैनौं। यस्ताको बुद्धिको सीमा साह्रै संकुचित हुन्छ। हरेक चरित्रलाई यस्ताले अतिरंजित गरेर नै अभिनय गर्छन्। यस्ताले प्रायः सबै असल चीज बिगार्छन्, कारण यस्ताले अति गर्छन् अनि त्यसलाई धेरै अघि सम्म घिसार्न चाहन्छन्, तर भेनाज्यू, मैले यी सब त्यसै भनें मात्र है।

**ओरगों** : हो, तिमी निस्सन्देह एकजना यस्तो डाक्टर हौ जसलाई सबैले आदर गर्छन्। संसारको ज्ञान भण्डार तिमीमा नै अटाएको छ। तिमी मात्र एकजना ज्ञानी र द्रष्टा हौ। तिमी ब्रह्मवाणी हौ अनि यस युगको 'केटो'[1] तिम्रो तुलनामा सबै मान्छै मूर्ख छन्।

**क्लेआँत** : होइन भेनाज्यू, म कुनै पूज्य डाक्टर होइन, न सबै ज्ञान-भण्डार ममा अटाएको छ। तर एक शब्दमा भन्नु हो भने ममा त्यो ज्ञान छ, जसले साँचो र झूठोमा फरक बताउँछ। म जान्दिनँ ती को हुन्

---

1. फ्रेन्चमा 'का तों' एकजना रोमनेली थियो जसले 186 मा रोमको नागरिक जीवनमा सरलपना ल्याउन कठोर नियम निर्धारित गरेका थिए। आज 'केटो' शब्द कठोर नियम-कानून अथवा बुद्धिमान व्यक्ति अथवा यस्ता हुन चाहनेहरूको पर्याय भएका छन्।

जसको आदर साँचो भक्तहरू भन्दा बढ़ी गर्नुपर्छ, म जान्दिनँ कुन चैं यस्तो चीज छ संसारमा, जुन साँचो धर्मको पवित्र भावना भन्दा धेरै उच्च र धेरै सुन्दर छ। र साथै म यो पनि जान्दिनँ बाहिरी आडम्बरपूर्ण झूटो धार्मिक उत्साह भन्दा घृणित अरू के हुन सक्छ? म जान्दिँन यी नाङ्गा, ढोंगी, भाड़ाका भक्तहरू भन्दा धेरै हेय के हुन सक्छन् जो आफ्नो अपवित्र र धोखापूर्ण भाषणद्वारा मानिसमा धाक जमाउँछन् अनि जुन जिनीसलाई, मानिसले पवित्र ठान्दछन् त्यस्तालाई यिनले इच्छानुसार त्यस्तै ठट्टा गर्दछन्। यी स्वार्थका दास हुन् जो धर्मलाई पेशा बनाउँछन्, धर्मको सौदा गर्छन्। यी आँखाको गति र आडम्बरको भावावेशले, यश र सम्मान किन्न चाहन्छन्। यस्ता मानिसले असाधारण गतिशीलतासाथ, स्वर्गको माध्यमबाट यही मर्त्यलोकमा आफ्नो लागि बेसी नै माग्छन्। यी धार्मिक उत्साहको आगोमा रापिन्दै र प्रार्थना गर्दै, प्रतिदिन आफ्नोलागि सम्पति जम्मा गर्छन् अनि पूरै दरबारमा, एकान्तताको उपदेश दिन्छन्। यी आफ्नो पेशा र पापको माझ समन्वय स्थापना गर्न जान्दछन्। यिनमा वासनाको उत्कटता छ। यी बदलाको भावनामा चुर्लुम्म, आस्थाहीन र ढोंगले भरिएका हुन्छन्। कुनै मानिसलाई बबार्द गर्न मन लागे आफ्नो बदलाको भावनालाई ईश्वरेच्छाको च्यादर ओढ़ाई दिन्छन्। यी आफ्नो क्रोधमा यति भयावह छन् कि ती वस्तुलाई हाम्रो विरुद्ध हतियारको रूपमा प्रयोग गर्छन् जंसलाई हामी पूजा गर्छौं, यिनको 'भक्ति-भाव' जसको हामी प्रशंसा गर्छौं, धार्मिक छुराले हाम्रो हत्या गराउने प्रेरणा दिन्छ। यस्ता ढोंगी धेरै देखा पर्छन्। हृदयले जो भक्त छन् तिनलाई चिन्न सजिलो छ। हाम्रो यस शताब्दीले, भेनाज्यू, हाम्रो आँखाको सामु कति सम्माननीय उदाहरण प्रस्तुत गर्छ। अरिस्तोंलाई हेर्नुहोस्, पेरिआँद्रलाई हेर्नुहोस्, ओरोंत, आलसिदामा, पोलिदोर र क्लिताँद्रलाई हेर्नुहोस्। यिनीहरू कसैको यशमा कुनै आलोचना हुन सक्तैन। यिनीहरू सब सद्‌गुणको खोक्रो दावा गर्ने होइनन्। यिनमा त्यो असह्य ढोंग छैन। यिनीहरूको भक्ति मानवताले ओतप्रोत र मान्य छ। यिनीहरूले हाम्रो सबै काममा दोष देख्दैनन्। यस्ता मानिसले यस्तो दोषान्वेषणलाई मिथ्याभिमान-प्रदर्शन सम्झन्छन्। यिनीहरू ठूल-ठूला कुराहरू अर्काको निम्ति छोड़ेर आफ्नो राम्रो व्यवहारबाट नै हाम्रा नराम्रो व्यवहारप्रति संकेत गर्छन्। यिनीहरू नराम्रो मखुण्डोको समर्थन गर्दैनन् अनि यिनीहरूको आत्मा अरूको भलाईमा नै उन्मुख रहन्छ। यिनीहरूमा

दलबन्दी छैन, षड्यन्त्रको योजना गर्दैनन्। यिनीहरू मात्र पापलाई घृणा गर्छन्। ईश्वरीय इच्छाको पूर्तिमा यिनीहरू उत्साहको यत्रो अधिकता देखाउँदैनन् जति स्वयम् ईश्वरको इच्छा हुँदैन। यिनीहरू मेरा आर्दश हुन्, यिनीहरूले झैं बाँच्नु पर्छ, यिनीहरूको उदाहरण जनसमक्ष राख्नुपर्दछ। साँचों भन्नुहो भने, तपाईंको त्यो व्यक्ति त्यस्ता छैनन्। तपाईं साँचो विश्वासको साथ उनको उत्साहको प्रशंसा गर्नुहुन्छ, तर म सम्झन्छु, तपाईं झूठो आडम्बरमा फँस्नु भएको छ।

**ओरगों** : सालोज्यू, तपाईंको कुरा सकियो?

**क्लेआँत** : हो।

**ओरगों** : म तपाईंको नम्र सेवक हूँ।

(त्यो जान खोज्छ)

**क्लेआँत** : एउटा कुरा भेनाज्यू, यस तर्कलाई छोडौं। थाह छ, तपाईले वालेरसित उसलाई जुवाईं बनाउने प्रतिज्ञा गर्नु भएको थियो।

**ओरगों** : हो।

**क्लेआँत** : अनि तँपाईले त्यो मधुर सम्बन्धको दिन पनि निर्णय गर्नु भएको थियो ?

**ओरगों** : ठीक हो।

**क्लेआँत** : उसो भए उत्सवलाई किन टार्नु ?

**ओरगों** : म जान्दिनँ।

**क्लेआँत** : तपाईंको मनमा अरू कुनै कुरा छ र ?

**ओरगों** : होला।

**क्लेआँत** : के तपाईं आफ्नो बचन तोड़न चाहनुहुन्छ?

**ओरगों** : म यो भन्न सक्तिनँ।

**क्लेआँत** : म सम्झन्छु, कुनै यस्तो बाधा त छैन जसले तपाईंलाई आफ्नो प्रतिज्ञा पूरा गर्न रोक्छ?

**ओरगों** : यो त स्थितिमा निर्भर गर्छ।

**क्लेआँत** : एउटा कुरा भन्न यत्रो भूमिकाको के प्रयोजन ? वालेरले मलाई तपाईंसित यस सम्बन्धमा कुरा गर्नु भनेको छ।

**ओरगों** : ईश्वरले भलो गरून्।

**क्लेआँत** : उसलाई म के भनूँ त ?

**ओरगों** : तिम्रो जे इच्छा।

**क्लेआँत** : तर तपाईंको उद्देश्य जान्नु पनि त जरूरी छ। तपाईंको उद्देश्य के छ?

**ओरगों** : जे ईश्वर चाहन्छन्, म त्यही काम गर्न चाहन्छु।

**क्लेआँत** : सोझो कुरा भन्नुहोस् न। वालेरलाई तपाईंले बचन दिनु भएको छ। त्यस बचनलाई तपाईं पालन गर्नुहुन्छ कि हुन्न ?

**ओरगों** : फेरि भेटौंला।

**क्लेआँत** : (मनमनै) मलाई डर छ, त्यसले आफ्नो प्रेमको बाटोमा कष्ट सहनु पर्छ। मैले त्यसलाई केही हुँदैछ भनेर सूचित गर्नु पर्छ।

# दोस्रो अंक

## दृश्य-1

(ओरगों, मारिआन)

**ओरगों** : मारिआन!

**मारिआन** : हजुर बुवा।

**ओरगों** : यहाँ आइज, मलाई तँसित केही कुरा गर्नु छ। (उ छेऊको सानो कमरामा हेर्न लाग्छ।)

**मारिआन** : के हेर्नु हुँदैछ?

**ओरगों** : कसैले हाम्रो कुराकानी त सुनिरहेको छैन, त्यही हेर्दैछु। यस सानो ठाँउमा लुकेर कुरा सुन्न सम्भव छ। अब हामी छौं। मारिआन, मैले सँधै तेरो स्वभावलाई मधुर पाएको छु अनि सँधै नै मेरो प्रिय छेस्।

**मारिआन** : पिताको यस प्यारको निम्ति म कृतज्ञ छु।

**ओरगों** : ठीक छ छोरी, तर यस प्यारको पात्र हुनको लागि, तैले सँधै मलाई खुशी राख्ने चेष्टा गर्नु पर्छ।

**मारिआन** : म पनि यसलाई आफ्नो सबभन्दा ठूलो सम्मान मान्दछु।

**ओरगों** : हाम्रो पाहुना, तारतूफको विषयमा तेरो के विचार छ ?

**मारिआन** : कसको ? मेरो ?

**ओरगों** : अँ, तेरो। राम्ररी सोंच विचारेर जवाफ दिनु।

**मारिआन** : ओहो, जे तपाईं चाहनु हुन्छ, म त्यही भन्नेछु।

**ओरगों** : बुद्धिमानीको कुरा यै हो। फेरि भन छोरी, उसको व्यक्तित्वमा एउटा प्रकाश छ, त्यसले तेरो हृदयलाई छुन्छ, अनि मैले उनलाई तेरो पतिको रूपमा चुनें भने तँ सुखी हुन्छेस्। कि के भन्छेस् ?

(मारिआन छक्क परेर पछि सर्छे)

**मारिआन** : हँ !

**ओरगों** : के कुरा छ ?

**मारिआन** : तपाईंले के भन्नु भयो ?

**ओरगों** : के ?

मारिआन : के मैले भूल गरें ?

ओरगों : किन ?

मारिआन : बुवा, तपाईं के चाहनु हुन्छ ? प्रेम गर्छु भनेर म कसलाई भनूँ, यसैलाई रोज्नू भनेर मैले कसलाई चाहनु ?

ओरगों : तारतूफलाई।

मारिआन : बुवा, म यस्तो के ही चाहँदिनँ, यो पक्का हो। यस्तो झूठो कुरा तपाईंलाई भनूँ, के तपाईं चाहनु हुन्छ ?

ओरगों : तर म चाहन्छु, यो सत्य होस् अनि मैले यस विषयमा फैसला गरिसकेको छु भनेर तैंले यति जान्नु पर्याप्त छ।

मारिआन : के हजुर बुवा, के तपाईं...?

ओरगों : हो मेरी छोरी, म चाहन्छु, तेरो बिहेको सूत्रले तारतूफलाई आफ्नो परिवारमा जोड़न सकूँ। उ नै तिम्रो पति हुनेछ भनी मैले निश्चय गरिसकेको छु। यद्यपि तैंले प्रतिज्ञा गरेकी छेस्, म....।

## दृश्य-2

(दोरिन, ओरगों, मारिआन)

ओरगों : यहाँ के गरिरहेकी छौ ? तिमी यसरी यहाँ हाम्रो कुरा सुन्न आएकी छौ भन्ने तिमीलाई खुबै उत्साह छ।

दोरिन : यथार्थमा मलाई थाह छैन यस विवाहको विषयमा अहिले मैले जे सुनें—त्यो कल्पना मात्र हो वा उड़न्ते कुरा हो, तर मैले मात्र सम्झें।

ओरगों : उसो भए यो कुरा विश्वास लाग्दो छैन ?

दोरिन : यति सम्म कि महाशय, तपाईंको मुखबाट यो कुरा सुनेर पनि मैले पत्याएकी छुइनँ।

ओरगों : अनि तिमीलाई कसरी विश्वास दिलाउनु, त्यो मलाई थाह छ।

दोरिन : हो, हो, हामीलाई, तपाईंले एउटा राम्रो कथा सुनाउनु हुनेछ।

ओरगों : म त्यही भन्नेछु जुन चाँड़ै हुनेवाला छ।

दोरिन : बगमफूसे कुरा।

ओरगो : मैले ठट्टा गरेको होइन, मेरी छोरी।

दोरिन : छाड़, आफ्नो बुवाको कुरामा विश्वास नगर्नु होस्। उहाँले ठट्टा गर्नु हुँदैछ।

ओरगों : म भन्दै छु...।

दोरिन : होइन, तपाईं जे मनलाग्छ भन्नुहोस्, कसैले तपाईंलाई पत्याउने छैन।

**ओरगों** : उसो भए मेरो रीस... ...।

**दोरिन** : लौ हेर्नुहोस्, हामी तपाईंलाई विश्वास गर्छौं, तपाईंनै बुझ्नु होस् आफ्नो काम। कसो महाशय, बुद्धिमान मानिसको अनुहार लिएर, अनि अनुहारमा लामा दाढ़ी पालेर पनि, तपाई यति पागल हुनुहुन्छ, तपाईं चाहनु हुन्छ कि... ...।

**ओरगों** : सुन ठिटी, म भन्दैछु तिमीले यस घरमा यस्तो स्वच्छन्दता पाएकी छौ, जुन मलाई राम्रो लाग्दैन।

**दोरिन** : विन्ती महाशय, नरिसाई कुरा गर्नुहोला। तपाईंले यो चाल चलेर मानिसहरूको हाँसो उड़ाउँनु चाहनु भएको छ? तपाईकी छोरी एकजना ढोंगीको लायक हुन सक्तिन, तिनले सोंच्ने अरू कुराहरू पनि छन्। यो छोडेर यस सम्बन्धमा तपाईंले के पाउनुहुनेछ ? तपाईंको यत्रो सम्पत्ति छ, र पनि एकजना भिखारीलाई जुवाँई किन रोज्नु हुन्छ ?

**ओरगों** : चुप लाग। उनीसित केही छैन भने पनि उनी सम्मानको पात्र हुन्। उनको दरिद्रतामा पनि निस्सन्देह उच्चाशय छ। यसले उनलाई सांसारिक भावनादेखि माथि उठाउँछ, कारण उनलाई पार्थिव वस्तुको थोंर वास्ता छ। अनि स्वयंलाई आफ्नो सम्पत्तिवाट वंचित गरेर सनातन सुखपटि मन लगाएका छन्। मेरो सहायताले उनलाई आफ्नो कष्टवाट मुक्ति पाउने मौका मिल्नेछ, अनि फेरि उनले आफ्नो सम्पत्ति पनि पाउन सक्नेछन्। उनी आफ्नो जन्मथलोमा आफ्नो जमींदारीको निम्ति प्रसिद्ध छन्, अनि त्यसैपनि उनी भलाद्मी देखिन्छन्।

**दोरिन** : हो, उनले नै यसो भन्नु हुन्छ। तर महाशय, उनको धार्मिकतासित यस अभिमानको कुनै मेल छैन। जसलाई एक पवित्र जीवनको सरलता प्यारो छ, उसले आफ्नो नाम र कुलको गर्व नगर्नु पर्ने। भक्तिको नम्र वृत्तिको महत्त्वाकांक्षासित कुनै सम्पर्क छैन। के काम यस अहंको ? तर म जे भनिरहेकी छु, त्यो तपाईंलाई नराम्रो लागिरहेको होला। उनको व्यक्तित्वको विषयमा बिचार गरौं, उनको कुलीनताको कुरा छोड़ौं। यस्ती केटीलाई उनी जस्ता मानिसलाई सुम्पिएर तपाईंले कम झंझट उठाउनु पर्छ ? तपाईंले अलिकति पनि उचितानुचितको विचार गर्नुपर्ने होइन ? यस सम्बन्धको परिणामको अन्दाज लगाउन सक्नु हुन्न ? विवाहको विषयमा केटीहरूको रूचिको विचार गरेनौं भने, बुझ्नुहोस्, हामी उसको चरित्र भ्रष्ट हुने झमेला उठाउँदैछौं। कुनै केटीको निम्ति, चरित्र रक्षा गरेर बाँच्नु यस

कुरामाथि निर्भर गर्छ हामीले उसलाई कस्तो पति दिदैछौं। जुन पुरूपहरूलाई मानिसले औंला उठाउँछन् तिनीहरू नै प्रायःजसो स्त्रीको चरित्रहीनताको निम्ति दायी हुन्छन्। एक खास किसीमको पतिसित कुनै स्त्री सच्चरित्र रहून् भन्नै कुरा साह्रै कठिन हो। जुन मानिसले आफ्नो छोरीको निम्ति यस्तो वर खोज्छन्, जसलाई उनको छोरीले घृणा गर्छे, उ नै आफ्नो कृत्यको निम्ति ईश्वरकहाँ उत्तरदायी हुन्छन्। यसर्थ राम्ररी सोंच्नुहोस्, तपाईंको यस निश्चयले तपाईंलाई कुन संकटमा पार्न सक्छ ?

**ओरगों** : मैले यससित बाँच्ने उपाय सिक्नु पर्नेछ भन्ने देख्दैछु।

**दोरिन** : तपाईंले मेरो सल्लाह मान्नुमा नै असल छ।

**ओरगों** : यस अनर्गल कुरामा हामी आफ्नो समय नष्ट नगरौं, मेरी नानी। म जान्दछु, तिमीलाई के चाहिन्छ ? म तिम्रो पिता हूँ। वालेरसित तिम्रो विवाहको वचन मैले नै दिएको थिएँ, तर उसको आकर्पण जुवाप्रति छ भन्ने मैले सुनें अनि उ अधार्मिक छ, किनभने उसलाई कहिल्यै गिरजामा देखिनँ।

**दोरिन** : के तपाई चाहनु हुन्छ उ पनि त्यहाँ त्यसैबेला उपस्थित हुन पुगून् जुन बेला मानिसहरू भेला हुन्छन् जसलाई प्रदर्शन प्यारो छ ?

**ओरगों** : म यस विपयमा तिम्रो सल्लाह लिन चाहन्नँ। जे पनि होस्, धर्मको विपयमा तारतूफ सबभन्दा असल छ, अनि यो सम्पति नै सबभन्दा ठूलो हो। यो विवाहले तिम्रो सबै इच्छा पूरा हुनेछ अनि जीवनमा माधुर्य र आनन्द मात्र हुनेछ। तिमी एकार्काप्रति प्रेम र विश्वास लिएर बाँच्नेछौ, दुई बालखहरू झैं, दुई परेवाहरू जस्तै। तिमीहरूमा कुनै अप्रिय विवाद हुने छैन अनि तिमी उसलाई जस्तो चाहन्छौ बनाउन सक्छ्यौ।

**दोरिन** : यसले ? म विश्वास दिलाउँछु यसले उनलाई मूर्ख मात्र बनाउने छ।

**ओरगों** : कति मुख चलाउँछे यो।

**दोरिन** : म भन्छु, उनले सबै कुरा विचार गरिसकेका छन्, अनि उनको लागि तपाईंकी छोरीको चरित्र भन्दा महत्वाकांक्षा बढ़ी मूल्यवान हुनेछ।

**ओरगों** : चुप लाग, बीचमा बोल्ने नगर। जुन कुरासित तिमीलाई कुनै मतलब छैन, त्यसमा टाउको नदुखाऊ।

**दोरिन** : महाशय, तपाईंको भलोको कुरा पो भन्दैछु।

**ओरगों** : तिमीलाई यत्रो चासोको प्रयोजन छैन। चुप लाग, सुन्यौ ?

**दोरिन** : यदि कसैले तपाईंसित प्रेम नगर्दी हुन् त... ...।

**ओरगों** : कसैले मसित प्रेम गरून् म चाहन्दिनँ।

**दोरिन** : अनि म तपाईंलाई चाहन्छु महाशय, तपाईंको अनिच्छा भए तापनि।
**ओरगों** : अरे!
**दोरिन** : तपाईंको इज्जत मलाई प्यारो छ अनि सबैले तपाईंको खिल्ली उड़ाउन्, यो म सहन सक्तिनँ।
**ओरगों** : तिमी चुप लाग्दिनौ?
**दोरिन** : यो सम्बन्ध गराउन दिनु तपाईलाई लाजको कुरा हुनेछ।
**ओरगों** : चुप लाग्दिनौ, सर्पिनी? तिम्रो ठूलो मुख छ... ...।
**दोरिन** : अरे, तपाईं भक्त भएर रिसाउनु हुन्छ?
**ओरगों** : हो, यस्तो प्रलापले मेरो रीस उम्लिन्छ। तिमी चुप लाग, म यही चाहन्छु।
**दोरिन** : यस्तै नै होस्! तर, केही न भने पनि यस विषयमा म कम्ती सोच्दिनँ।
**ओरगों** : जे मन लाग्छ सोंच, तर खबरदार मलाई केही नभन। वा...भयो (आफ्नी छोरीतिर फर्केर) मैले साह्रै बुद्धिमानीसाथ तिम्रो कुरालाई तौलेको छु।
**दोरिन** : बोल्न नपाएकीले मेरो कंसीरी तात्तिएर आउँदैछ। (ओरगों उपटि फर्किनसाथ त्यो चुप लाग्छे।)
**ओरगों** : तारतूफ अभिमानी छ। उ यस्तो छ कि ... ...।
**दोरिन** : हो, उसको राम्रो थुतुनो छ।
**ओरगों** : तिमीले उसको अरू गुणहरू नदेखे तापनि... ... (हात खोकिलामा राखेर उ दोरिनलाई हेर्छ।)
**दोरिन** : कुमारीज्यूलाई के नै सुख मिलेको छ? म उसको ठाँउमा भए कुनै पनि मानिसले जबरजस्ती मसित विवाह गर्न नसक्ने। नारीले इच्छानुसार बदला लिन सक्छे भन्ने कुरा विवाहपछि म त्यसलाई देखाइदिन्थें।
**ओरगों** : उसो भए तिमी मेरो कुराको पर्वाह गर्दिनौ?
**दोरिन** : के भयो? म त तपाईंसित बोलेकी छुइनँ।
**ओरगों** : के गर्दैछौ त?
**दोरिन** : म आफूसितै कुरा गरिरहेकी छु।
**ओरगों** : (अलग्गै) ठीक छ। यसको असत्य अशिष्टताको निम्ति मैले थप्पड़ लगाउनु पर्ने?

(उ थप्पड़ चलाउने उपक्रम गर्छ। जब-जब उ दोरिनपटि हेर्छ दोरिन उभ्भिन्छे र चुप लाग्छे।)

**ओरगों** : तिमीले मेरो निश्चय मान्नु पर्ने। विश्वास गर, जुन पति मैले तिम्रो

निम्ति रोजेको छु... ...(दोरिनसित) अब किन तिमी आफूसित कुरा गर्दिनौ?

**दोरिन** : मैले आफूसित केही भन्नु छैन।

**ओरगों** : अरे, एउटा सानो कुनै शब्द।

**दोरिन** : मेरो इच्छा नै छैन।

**ओरगों** : साँच्चै? म पनि देख्दैछु।

**दोरिन** : मेरो के मूर्खता हुनेथियो?

**ओरगों** : हो, मेरी छोरी, तिमीमा आज्ञाकारिता हुनु पर्ने अनि मेरो छनोटको पूरै आदर गर्नु पर्ने।

**दोरिन** : (कुदेर जाँदै) यस्तो पतिलाई म बुढी औंली देखाउँछु।
(उसले दोरिनलाई एक थप्पड़ लगाउन खोज्छ, तर उ भाग्छे।)

**ओरगों** : तिमीसित यहाँ एउटा महामारी छ छोरी, त्यसले मेरो कन्सिरी तात्तिएर आउँछ। अब ममा कुरा गर्ने शक्ति छैन। यसको मूर्खतापूर्ण कुराले मेरो ब्रह्माण्डमा आगो सल्केको छ। दम लिनको लागि केही क्षण बस्नु पर्‍यो।

## दृश्य-3

(दोरिन, मारिआन)

**दोरिन** : के तिमीलाई बोल्नु आउँदैन, अनि मैले तिम्रो पक्षमा कुरा गर्नु पर्छ? तिमीलाई यो मूर्खतापूर्ण प्रस्ताव सह्य छ जसले गर्दा उसको विरुद्ध एउटा शब्द पनि बोल्दिनौ?

**मारिआन** : यस्ता अत्याचारी पिताको विरुद्ध म के गर्न सक्छु?

**दोरिन** : जे पनि होस्, तर यो टर्नुपर्छ।

**मारिआन** : के?

**दोरिन** : त्यै, अर्थात् हृदय अरु कसैको खुशीको निम्ति प्रेम गर्दैन; अनि तिमी आफ्नो निम्ति विवाह गर्दैछौ, उनको निम्ति होइन। विवाह जब तिम्रो हुन लागेको छ, लोग्ने पनि तिमीलाई सुहाउँदो हुनुपर्छ, उनलाई होइन। यदि तारतूफ उनलाई यत्ति मन पर्छ भने उनले खुशीसाथ कुनै अड़चन बिना विवाह गर्न सक्नु हुन्छ।

**मारिआन** : पिताको ममाथि यति अधिकार छ, उनको अघि केही बोल्ने मलाई साहस नै हुँदैन।

**दोरिन** : तर यो सोंच, वालेरले तिम्रो निम्ति पाइला अघि सारिसकेको छ। तिमी उसलाई हृदयदेखि चाहन्नौ?

मारिआन : ओह! मेरो प्रेमप्रति कति ठूलो अन्याय गरिरहेकी छौ। दोरिन, के तिमीलाई यो पनि सोध्नुपर्छ? के यस विषयमा सौ पल्ट मैले तिमीलाई आफ्नो मनको कुरा भनिनँ? तिमी जान्दिनौ उसको निम्ति मेरो मनमा कति प्रेम छ?

दोरिन : म के जानूं, तिमी मुखले मात्र यसो भन्छौ अनि हृदयले चाहिँ तारतूफलाई।

मारिआन : ममाथि सन्देह गरेर तिमीले अन्याय गरिरहेकी छौ दोरिन, मैले आफ्नो भावनाहरू स्पष्ट रूपमा व्यक्त गरेकी छु।

दोरिन : उसो भए, के तिमी उनलाई चाहन्छौ?

मारिआन : हो, हृदयबाट नै।

दोरिन : अनि देख्दा उनले पनि तिमीलाई हृदयबाट नै चाहेको छ।

मारिआन : म त यही नै जान्दछु।

दोरिन : उसो भए तिमीहरू दुवै विवाहको निम्ति उत्सुक छौ?

मारिआन : निश्चय नै।

दोरिन : तर त्यो अर्को सम्बन्धको विषयमा तिमी के भन्न चाहन्छौ?

मारिआन : मलाई विवश गराइयो भने म आत्महत्या गर्नेछु।

दोरिन : अति उत्तम, यो एक यस्तो उपाय छ जसको विषयमा मैले सोंचेकी नै थिइनँ। मरेर नै त सबै झंझटबाट मुक्ति पाइन्छ। उपाय उत्तम छ। मलाई त यस्तो कुरा सुनेर रीस उठ्छ।

मारिआन : दोरिन, तिमी यत्रो रीस किन गर्छ्यौ? तिमीलाई मानिसको दुःखसित कुनै सहानुभूति छैन।

दोरिन : मलाई व्यर्थको कुरा गर्नेहरूसित, अनि अवसर आएपछि चुपलाग्नेहरूसित कुनै सहानुभूति छैन।

मारिआन : उसो भए आफ्नो अप्ठ्यारोलाई म के गरूँ?

दोरिन : प्रेममा हृदयको दृढ़ता चाहिन्छ।

मारिआन : वालेरको निम्ति उसो भए मेरो हृदयमा प्रेम छैन? मेरो पितासित मंगनी गरेर मलाई लैजाने उसको कर्त्तव्य होइन?

दोरिन : तर यदि तिम्रो पिता पागल हुनु भएको छ, उहाँमाथि तारतूफको भूत चढ़ेको छ, अनि यस विवाहको विषयमा गरिएको प्रतिज्ञा उहाँले तोड़नु हुन्छ भने यसको दोष तिम्रो प्रेमीमाथि हुन्छ?

मारिआन : पिताको यस अभिमानपूर्ण अस्वीकृति खुला तिरस्कारले मानिसहरूलाई मेरो हृदयमा कति चोट पर्‍यो भन्दै सुनाई हिड़ौं। भलै वालेर कत्ति नै असल मानिस होउन्—एक स्त्रियोचित शील र एकजना छोरीको कर्त्तव्य लत्याएर त म निस्कन सक्तिनँ। संसारमा आफ्नो प्रेमको

ढोल पिट्दै हिड्दौं भन्ने तिमी चाहन्छौ?

दोरिन : होइन, होइन म केही चाहन्न। म हेर्दैछु, तिमी श्रीमान तारतूफकी हुन चाहन्छौ, यसबाट तिमीलाई विमुख गराउन चाहनु मेरो भूल हुनेछ। तिमीहरूको इच्छाहरूको विरोध गर्ने मेरो के हक छ? यो सम्बन्ध स्वयम् उत्तम छ। वाह, श्रीमान तारतूफ! क्या प्रस्ताव गर्नु भयो? वास्तवमा श्रीमान तारतूफ कुनै साधारण व्यक्ति होइनन् अनि उनको अर्धाङ्गिनी हुन पाउनु कम सौभाग्यको कुरा होइन। सबैले उनको यश गाउँछन्। उ आफ्नो घरमा कुलीन छन्, हेर्दा असल छन्, कान राता छन् अनि रंग खुलेको छ। तिमी यस्तो पतिसित धेरै सुखी हुनेछौ।

मरिआन : हे भगवान!

दोरिन : यस्ता पतिको पत्नी हुन पाउँदा तिमी कत्ति आनन्दित हुनेछौ?

मारिआन : उफ! यस्ता कुराहरू नभन, म हाथ जोड्छु। यस विवाहको विरुद्ध मलाई मदत गर। लौ, म हारें। म सब गर्न तयार छु।

दोरिन : होइन, छोरीले आफ्नो पिताको आज्ञा मान्नै पर्छ; भलै उनले आफ्नो छोरीको निम्ति कुनै बाँदर नै किन नरोजून्। तिम्रो भाग्य त धेरै राम्रो छ, तिमीलाई के कुराको दुःख? तिमी डोलीमा चढ़ेर उनको सानो शहरमा जानेछौ जहाँ थुप्रै काका र भाईहरू पाउनेछौ, उनीहरूको स्वागत गरेर तिमीलाई अति सुख मिल्ने छ। तिमीलाई उच्चवर्गीय समाजमा लगिने छ। तिमी न्यायाधीशकी स्वास्नीसित भेट गर्नेछौ, विधायककी स्वास्नीसित भेट गर्नेछौ अनि उनीहरूले चौकीमा *(यो आफुभन्दा निम्नस्तरकाहरूलाई बसाइने साधनको रूपमा प्रयुक्त हुन्छ)* तिम्रो स्वागत गर्नेछन्। फेरि कारनिवालमा नाच हुनेछ, बैण्डबाजा, ढँटुवारे र कठपुतली हुनेछन् यद्यपि तिम्रो लोग्ने... ...।

मारिआन : उफ्! तिमीले मलाई मार्न लागिरहेकी छौ। बरु सल्लाह दिएर मलाई मदत गर।

दोरिन : म तिम्री दासी हूँ।

मारिआन : अरे दोरिन, म माथि दया गरेर... ...।

दोरिन : यो विवाह भयो भने मात्र तिमीले शिक्षा पाउनेछौ।

मारिआन : मेरी राम्री ठिटी!

दोरिन : होइन।

मारिआन : मेरा व्यक्त अभिलाषाहरू... ...।

दोरिन : होइन, तारतूफ तिम्रो पति हुनु, अनि उनीसितै रहू।

**मारिआन** : तिमी जान्दछ्यौ, मैले सँधै तिमीलाई विश्वास गरेकी छु। यसो गर कि मलाई....................... ।

**दोरिन** : होइन, तिमी तारतूफ[1] सित रहेर धोखा खाइरहू।

**मारिआन** : लौ त, मेरो दुर्भाग्यसित तिमीलाई कुनै सहानुभूति छैन भने मलाई अब आफ्नो निराशासित छोड़ी देऊ। यसै निराशाले नै मेरो मनलाई शक्ति देला। म जान्दछु मेरो दुर्भाग्यको अहिले पनि एउटा अचुक औषधि छ।

(त्यो जानको लागि फर्किन्छे।)

**दोरिन** : लौ पख, फर्केर आऊ, ठीक छ, म अब रिसाउने छुइनँ। सबै कुरा छोड़ेर मैले तिमीप्रति सहानुभूति देखाउनु पर्ने।

**मारिआन** : हेर, यसरी मेरो बलि दिइयो भने दोरिन, म त सेरिने छु, भनिदिंदैछु।

**दोरिन** : किन चिन्ता गर्नु? हामी यस्तो अनिष्टलाई कुशलतासाथ रोक्न सक्छौं।...तर लौ, श्री वालेर तिम्रो प्रेमी यतै आउनु हुँदैछ।

## दृश्य-4

(वालेर, मारिआन, दोरिन)

**वालेर** : मैजाँ, मैले अहिले एउटा खुशखबर सुनें जुन मलाई थाहै थिएन।

**मारिआन** : के कुरा हो ?

**वालेर** : कि तपाईं तारतूफसँग विवाह गर्ने लाग्नु भएको छ।

**मारिआन** : यो साँचो हो, मेरो पिताले यस्तै निर्णय गर्नु भएको छ।

**वालेर** : तपाईंको पिताले, मैजाँ?

**मारिआन** : हो, उहाँले आफ्नो बिचार बदलिनु भएको छ। अहिले उहाँले मलाई यो नयाँ प्रस्ताव दिनु भएको छ।

**वालेर** : के? साँच्चै?

**मारिआन** : हो, अनि यस निश्चयमा उहाँ दृढ़ हुनुहुन्छ। उहाँले यस विवाहको विषयमा साह्रै दृढ़तासाथ आफ्नो निश्चय प्रकट गर्नु भएको छ।

**वालेर** : मैजाँ साहेब, तपाईंको मनले के चाहन्छ?

**मारिआन** : म जान्दिनँ।

**वालेर** : के तपाईं भित्री मनले भन्नु हुँदैछ तपाई केही जान्नु हुन्न?

**मारिआन** : अहँ!

---

1. मूलमा Tartuffe शब्दको प्रयोग भएको छ। Tartuffier को अर्थ धोखा दिनु, ढोंग गर्नु हुन्छ।

**वालेर** : अहँ?
**मारिआन** : तपाई, मलाई के सल्लाह दिनु हुन्छ?
**वालेर** : मेरो सल्लाह छ उसलाई तपाई स्वीकार गर्नुहोस्।
**मारिआन** : तपाईं यै सल्लाह दिनु हुन्छ?
**वालेर** : हो।
**मारिआन** : हृदयबाट नै?
**वालेर** : निरसन्देह! चुनाव सर्वोत्तम अनि विचार गर्ने लायक छ।
**मारिआन** : ठीक छ, श्रीमान, उसो भए म त्यसै गर्नेछु।
**वालेर** : यसो गर्दा तपाईंलाई कुनै ठूलो कष्ट पनि हुने छैन।
**मारिआन** : जति कष्ट सल्लाह दिंदा तपाईंलाई भयो होला।
**वालेर** : मैञाँ, मैले यो सल्लाह तपाई खुशी होस, भनेर दिएँ, त्यति न होला।
**मारिआन** : अनि तपाईंको खुशीको निम्ति यसलाई स्वीकार गरूँ।
**दोरिन** : हेरौं, दुवैमा को सफल हुने हो?
**वालेर** : त यसरी नै प्रेम गरिन्छ? धोखा थियो, यो जब तपाईंले...।
**मारिआन** : विन्ती, यस विषयमा अब केही नभन्नु होला। उसलाई पतिको रूपमा स्वीकार गर्नु भनेर तपाईंले मलाई स्पष्ट भन्नु भएको छ जो मेरो निम्ति चुनिएका छन्, अनि म स्पष्ट रूपमा भन्छु म उसलाई स्वीकार गर्छु, किनभने तपाईंले राम्रो सल्लाह दिनु भएको छ।
**वालेर** : मेरो यस कुराको बहानाले तपाईले छुट्टी लिने चेष्टा नगर्नु होला। तपाईंले पहिले नै निश्चय गरिसक्नु भएको थियो, अब एउटा निहूँ खोजेर आफ्नो बचन-भंग भएकोलाई उचित ठहराउनु होला।
**मारिआन** : अँ, ठीक हो। तपाईं ठीकै भन्नु हुँदैछ।
**वालेर** : निश्चय, अनि तपाईंको मनमा मप्रति साँचो प्रेम कहिल्यै थिएन।
**मारिआन** : हो, हो, सोच्न सक्छु, तर मेरो अपमानित आत्माले तपाईको यस उद्देश्यलाई असफल गराउनेछ। मैले आफ्नो हृदय र आफ्नो हात कहाँ दिनु पर्छ, त्यो मलाई थाहा छ।
**मारिआन** : अनि के? म यसमा शंका नै कहाँ गर्छु अरू गुणहरूले प्रेरित उत्कट भावनाहरू...।
**वालेर** : अरे, छोड़। ममा यी गुणहरू कम छन्। तपाईंले यसलाई प्रमाणित पनि गर्नु भएको छ। तर मलाई आशा छ म मुक्त हुनेसाथ मलाई यस्ती अर्की केटी मिल्नेछ जसले मप्रति सहानुभूति राख्नेछ, जसले मेरो यस क्षतिको पूर्तिमा लाजको अनुभव गर्ने छैन।
**मारिआन** : धेरै नोक्शान भाछैन, अनि यस परिवर्त्तनले तपाईंलाई पर्याप्त सन्तोष मिल्नेछ।

**वालेर** : म सकभर चेष्टा गर्नेछु, तपाईं विश्वास राख्नुहोस्। कसैले भुलून् यो मेरो प्रतिष्ठाको विरुद्ध हुन जान्छ। यस्तो बिर्सनेलाई मैले पनि कोशिश गरेर बिर्सनुपर्छ। यसमा सफल न भए तापनि कमसेकम बिर्सने बहाना त गर्नैपर्छ। हामीलाई त्याग्नेहरूसित प्रेम गर्नु पनि नीच कर्म हो जसलाई माफ गर्न सकिन्न।

**मारिआन** : यी त महान् र प्रशंसनीय भावना हुन्।

**वालेर** : पक्कै हो, अनि सबैले यसको समर्थन गर्नुपर्छ। मेरो हृदयमा तपाईंको निम्ति प्रेम जगाई राख्न किन चाहनु हुन्छ? तपाईं चाहनु हुन्छ मेरै सामु तपाईंलाई अर्काको बाहुमा आलिङ्गनबद्ध भएको म हेरीरहूँ। जुन हृदयलाई तपाईंले अस्वीकार गर्नु भयो, त्यो म अरू कसैलाई नदिउँ।

**मारिआन** : होइन, होइन, बरू म त तपाईंको हृदय अरू कसैले पाउन् भन्ने चाहन्छु। अहिलेसम्म यस्तो भई हालून् भन्ने चाहन्थें।

**वालेर** : तपाईं यस्तो चाहनु हुन्छ?

**मारिआन** : हो!

**वालेर** : यो मेरो ठुलो अपमान हो, मैजाँ, म तपाईंलाई यस्तै गरेर देखाई दिउँला।

(उ जानलाई पाइला सार्छ, तर फेरि फर्किएर आउँछ।)

**मारिआन** : अति असल!

**वालेर** : यदि याद राख्नुहोस्, यस सीमासम्म पुग्नलाई तपाईंले नै मलाई बाध्य गर्नु हुँदैछ।

**मारिआन** : हो!

**वालेर** : अनि तपाईंले भन्नु भएकोले नै मैले यस्तो निश्चय गरेको हूँ।

**मारिआन** : हुन्छ, यस्तै होस्।

**वालेर** : (जानलाई एक पाइला अघि सार्छ) ल, तपाईंले चाहनु भएको पाउनु हुनेछ।

**मारिआन** : हवस्।

**वालेर** : तपाईंले अन्तिम पल्ट मलाई हेर्नु हुँदैछ।

**मारिआन** : अँ! अँ!

**वालेर** : पक्कै हो?

(उ जान्छ र ढोकाबाट फर्केर आउँछ।)

**मारिआन** : के भयो?

**वालेर** : के तपाईंले मलाई बोलाउनु भयो?

**मारिआन** : मैले? तपाईं सपना देख्नु हुँदैछ?

वालेर : उसो भए जाँदैछु, मैआँ विदा। (उ विस्तारै जान्छ।)

मारिआन : विदा महाशय।

दोरिन : मलाई त लाग्छ तपाईंहरू व्यर्थको कुरामा लाग्नु भएको छ। कुरा कहाँसम्म बढ्नेछ भनी हेर्नलाई मैले अहिलेसम्म तपाईंहरूलाई तर्क गर्न दिएँ। अब भयो, श्रीमान वालेर।
(उ वालेरको पाखुरा समातेर रोक्छे, अनि वालेर उदेखि फुत्किने नाटक गर्छ।)

वालेर : अरे। तिमी के चाहन्छ्यौ, दोरिन?

दोरिन : यता आउनुहोस्।

वालेर : होइन, होइन, मलाई साह्रै चोट लागेको छ। यहाँको इच्छा पूरा गर्न मलाई नरोक।

दोरिन : पर्खनुहोस्।

मारिआन : मलाई देखेपछि उहाँलाई दुःख लाग्छ। मेरो उपस्थिति देखि नै उहाँ भाग्नु हुँदैछ। पन्सिए राम्रो हुनेछ।
(उ वालेरलाई छाड़ेर मारिआनपटि दौड़न्छे)

दोरिन : लौ खा, अर्को पनि हिंडिन्। तपाईं/कहाँ जानु हुँदैछ?

मारिआन : मलाई छोड़।

दोरिन : तपाई फर्किनु पर्छ।

मारिआन : होइन, दोरिन। व्यर्थनै तिमी मलाई रोक्ने चेष्टा गर्दैछौ।

वालेर : (एक्लै) म देख्दैछु, मलाई हेर्न पनि यहाँलाई कष्ट हुँदैछ, राम्रो हुन्छ ; म नै उहाँको सामुन्नेबाट पर सरे असल हुनेछ।
(मारिआनलाई छोड़ेर दोरिन वालेरतिर कुद्छे)

दोरिन : फेरि? मलाई यो राम्रो लाग्दैन। यो नाटक छोड्नुहोस्, अनि दुवै यहाँ आउनुहोस्।
(उ दुवैलाई समात्छे)

वालेर : तर, तिमी के चाहछ्यौ?

मारिआन : तिमी के गर्न लागेकी?

दोरिन : तपाईंहरू दुवैलाई मिलाएर सब ठीक-ठाक गर्न चाहन्छु। (वालेरसित) तपाईंहरू के बौलाहा हुनुहन्छ र यसरी लड़ाई गर्नु हुन्छ?

वालेर : तिमीले सुन्यौ, यहाँले मसित कस्तो कुरो गुर्न भयो?

दोरिन : अनि मैआँ, तपाईं बौलाही हुनु भएको? यसरी रिसाउनु हुन्छ?

मारिआन : तिमीले देखिनौ, यहाँले मसित कस्तो व्यवहार गर्नु भयो?

दोरिन : (वालेरसित) यी दुवैको बौलट्टीपन हो। तपाईंलाई छोड़ी उनलाई

अरु कसैकी हुने इच्छा छैन, म यस कुराको साक्षी हूँ। (मारिआनसित) तपाईंको पति हुनु बाहेक श्रीमान वालेरको अरु कुनै कामना छैन, म कसम खाएर भन्छु।

**मारिआन** : (वालेरसित) मलाई यस्तो सल्लाह उसो भए किन दिनु भयो?

**वालेर** : यस्ता विषयमा तपाईंले मेरो सल्लाह नै किन माग्नु भयो?

**दोरिन** : तपाईंहरू दुवै नै बौलाहा हुनुहुन्छ। खोइ, दुवैले हात यता ल्याउनु होस् (वालेरसित) पहिले तपाईंनै आफ्नो हात बढ़ाउनु होस्।

**वालेर** : (दोरिनलाई हात दिंदै) मेरो हातको मोल नै के छ र?

**दोरिन** : (मारिआनसित) उफ्! आफ्नो हात त दिनुहोस्।

**मारिआन** : (आफ्नो हात दिंदै) यसो गर्दा के लाभ?

**दोरिन** : हे भगवान, चाँड़ै अघि आउनुहोस्न! तपाईंहरू एकार्कालाई यति प्रगाढ़ प्रेम गर्नु हुन्छ, जसको कल्पना गर्न सकिन्न।

**वालेर** : कसैसित यति घृणा न देखाउनु होला। कम-से-कम, मानिससित त यति घृणा नगर्नुहोस्।

(मारिआन बाहिरपट्टि हेरेर मुस्कुराउँछे)

**दोरिन** : साँचो भनूँ, प्रेम गर्नेहरू बौलाहा हुन्छन्।

**वालेर** : र पनि, मलाई तपाईंसित गुनासो पोख्ने कारण छ? साँचो भनूँ भने तपाईंले मसित यस्तो कठोर कुरा गर्नु निर्दयता (क्रुरता) होइन?

**मारिआन** : अनि तपाई? कृतघ्न पुरुषमा एकजना तपाई हुनुहुन्न?

**दोरिन** : अब यो विषय यहीं थाती राखी सोचौं। यो अभिशप्त विवाह टाल्ने बरु कुनै उपाय सोचौं।

**मारिआन** : भनन त, हामीले के योजना गर्ने?

**दोरिन** : हामी सबै उपाय काममा लगाउनेछौं। तपाईंको पिताले आफ्नै हाँसो गराउनु हुँदैछ, यी सब फोस्रा कुरा मात्र हुन्। देखाउनलाई तपाईंले उहाँको सनक मानिलिए नै असल हुनेछ जसले संकट पर्दा अनिश्चित समयसम्म तपाईंको विवाह टार्न सकिओस्। यसरी समय पाएर हामी सबै कुरा ठीक गर्न सक्छौं। कहिलेकाँही तपाई अकस्मात् बिमार हुनुहोस्, अनि यसरी विवाह ढिलाई गर्न सकिन्छ। कहिले-काँही तपाई अपशकुनको पनि चर्चा गर्नुहोस्। मुर्दा देखें, काँच फोरें, वा सपनामा हिलो देखें भनी भन्दिनोस्। तर सबभन्दा राम्रो यो हुन्छ तपाईंको अरुसित वा उनीसित विवाह नभएसम्म तपाई 'हुन्छ' नभन्नुहोस्। सफलताको निम्ति कहिल्यै कसैले तपाईंहरू दुवैलाई सँगै गफ्फिएको नदेखे अझ उत्तम। (वालेरसित) तपाईंले चाँड़े आफ्नो साथीहरूलाई भनेर यहाँको पितालाई आफूले

दिएको बचन पालन गर्नैपर्छ भनी दबाव दिनुहोस्। हामी उहाँको भाई र सानीमालाई पनि आफ्नो पक्षमा पार्नेछौं। लौ, विदा।

**वालेर** : (मारिआनसित) हामी जे पनि प्रयत्न गरौं, साँचो भन्नु हो भने मेरा सबै आशा तपाईमा केन्द्रित छ।

**मारिआन** : (वालेरसित) पिताको इच्छाको निम्ति म दायी छुइनँ, तर जहाँसम्म मेरो प्रश्न छ मन वालेरको छोड़ेर अरु कसैकी हुन्नँ।

**वालेर** : तपाईंको कुराले मलाई सन्तोष भयो। उहाँले जे चेष्टा गरे पनि...।

**दोरिन** : उफ्! प्रेमगर्नेहरू व्यर्थको कुराले कहिल्यै अघाउँदैनन्।

**वालेर** : (एक कदम अघि बढ़ाउँछ अनि फर्किएर)...अन्तमा...!

**दोरिन** : कति बकबक गर्नुहुन्छ तपाई पनि। तपाई यताबाट जानुहोस् अनि तपाईं उताबाट।

(उ दुवैलाई धकेल्छे।)

# तेस्रो अंक

## दृश्य-1

(दामी, दोरिन)

**दामी** : ममाथि अहिल्यै चट्याङ परोस्, मलाई मानिसले नीच ठानुन् तर कुनै सम्मानको विचार वा कुनै शक्तिले मलाई केही गर्न सक्दैन।

**दोरिन** : भगवानको लागि नरिसाउनु होला। तपाईंको पिताले यो कुरा त्यसै भनेका हुन्। जो सोचिन्छ सबै गरिन्दैन औ योजना र त्यसको कार्यान्वयनमा धेरै फरक हुन्छ।

**दामी** : यस मानिसको षड्यन्त्रलाई तोड्न अनिवार्य छ अनि त्यसको कान फुकिदिनु पर्‍यो।

**दोरिन** : (शांतिसित) तारतूफसित वा पितासित आफ्नी सानीमालाई छिनाफाना, गर्न दिनुहोस्। तारतूफमाथि उनको केही प्रभाव छ। उनी जे भन्छन्, तारतूफ त्यो मान्छन्। हुन सक्छ, उसको मनमा उनको निम्ति कुनै कोमल भावना छ, ईश्वर गरुन् त्यो सत्य होस्। यो राम्रै हुने थियो। तपाईंकै कामको निम्ति उनले त्यसलाई बोलाउनु भएको छ। त्यस विवाहको विषयमा त्यसको मनको कुरा बुझ्न उहाँ चाहनु हुन्छ, जसको निम्ति तपाईं यति चिन्ता गर्नुहुँदैछ। उनले यस बारे त्यसको विचार बुझ्नु हुनेछ अनि त्यसलाई भन्नुहुनेछ आफ्नो यो योजना पूरा गर्ने चेष्टा गर्दा त्यसलाई कस्तो-कस्तो झंझट आई पर्न सक्छ। त्यसको नोकरले मलाई त्यो पूजामा बसेकोछ भनेकोले मैले त्यसलाई भेट्न सकिनँ। तर, त्यसकै नोकरले त्यो नीच तल ओर्लनै लागेको छ भन्यो। यसर्थ, तपाईं बाहिर जानुहोस्, विन्ती मलाई त्यसको प्रतीक्षा गर्न दिनोस्।

**दामी** : म पनि यस वार्तालापमा यहाँ बस्न सक्छु?

**दोरिन** : अहँ हुँदैन। उनीहरू दुइजना मात्र हुनेछन्।

**दामी** : म त्यसलाई केही भन्ने छुइनँ।

**दोरिन** : तपाईं किन ठट्टा गर्नु हुन्छ? म जान्दछु, तपाईं कसरी उत्तेजित

हुनुहुन्छ अनि यसरी सबै काम बिग्रने सम्भावना हुन्छ। तपाईं बाहिर जाइहाल्नुहोस्।

(दामी मञ्चको पुच्छरमा स्थित एउटा सानो कमरामा लुक्छ।)

## दृश्य-2

(तारतूफ, लोराँ, दोरिन)

**तारतूफ** : (दोरिनलाई हेर्दै) लोराँ, मेरा 'हेर' र 'दिसिप्लिन'[1] बन्द गरि राख, अनि ईश्वरसित प्रार्थना गर, उहाँले तिमीलाई प्रकाश दिउन्। कसैले सोधे भन्नु मलाई जे भीक्षा प्राप्त हुन्छ, त्यो कैदीहरूमा बाँड्न गएको छु।

**दोरिन** : क्या ढोंग औ मिथ्याभिमान!

**तारतूफ** : तपाईंलाई के चाहिएको छ?

**दोरिन** : तपाईंलाई यो भन्न आएकी हूँ...।

**तारतूफ** : (खल्तीबाट रुमाल निकाल्छ) भगवानको निम्ति केही बोल्नु भन्दा पहिले रुमाल लिनुहोस्।

**दोरिन** : किन?

**तारतूफ** : ती नांगा स्तनहरूलाई छोप्नुहोस्। म त्यो हेर्न सक्तिनँ। यस्तो चीजले आत्मालाई चोट पुर्‍याउँछ, अनि दूषित विचार मनमा आउँछ।

**दोरिन** : उसो भए, तपाईं आकर्षणअघि साह्रै कमजोर हुनुहुन्छ, अनि तपाईंमाथि मासुको ठूलो प्रभाव रहेछ? साँच्चै मैले बुझ्न सकिनँ, कुनचैं आगोले तपाईं यसरी सल्किनु हुँदैछ। म यति चाँड़ै यस्तो भावनाले अभिभूत हुदिनँ। तपाईं सिरदेखि पैताला सम्म नाङ्गो हुनु होस्, तपाईंको नांगो छालाले ममा कुनै लोभ जगाउन सक्तैन।

**तारतूफ** : तपाईं अलिक शिष्टतासँग कुरा गर्नुहोला, नत्र म अहिल्यै हिंड़ने छु।

**दोरिन** : होइन, होइन, म तपाईंलाई छोड़र जाँदैछु, आराम गर्नुहोस्। मलाई तपाईंसित मात्र दुईटा कुरा गर्नुछ। मालिकनी अहिले तल्लो कमरामा आउनु हुनेछ। अनि कृपा गरेर तपाईं उहाँसित अलिबेर कुरा गर्नुहोला भनी उहाँले भन्नु भएको छ।

**तारतूफ** : ओहो! बड़ा खुशीसाथ।

**दोरिन** : (स्वयम्) कति नरम भइहाल्यो। अझै मेरो अड़कल सही प्रमाण हुन्छ।

---

1. 'हेर' और 'दिसिल्पिन' तप गर्दा लगाइने उपवस्त्र औ दण्ड हुन्।

**तारतूफ** : उहाँ चाँड़ै आउनु हुँदैछ?

**दोरिन** : मलाई लाग्छ, म उहाँ आएको शब्द सुन्दैछु। हो, उहाँ नै हुनुहुन्छ। म तपाईं दुवैलाई सँगै छोड़ेर जाँदैछु।

## दृश्य-3

(एलमिर, तारतूफ)

**तारतूफ** : ईश्वर तपाईंप्रति सदा कृपालु रहून् अनि तपाईंको शरीर र आत्मालाई स्वास्थ्य प्रदान गरुन्। उनले तपाईंको जीवनमा यति आशीर्वाद छरुन्, जति उनको प्रेमले प्रेरित नम्रातिनम्र भक्त चाहन्छन्।

**एलमिर** : म यस पवित्र निमित्त कृतज्ञ छु। अँ, चौकी लिनुहोस्, बसेर आरामसँग कुरा गर्न सकौं।

**तारतूफ** : (बसेर) कसो, तपाईंको बिमारी जाति भयो?

**एलमिर** : (बसैरै) अँ। ज्वरो आएर उत्रियो पनि।

**तारतूफ** : मेरो प्रार्थनामा ईश्वरको कृपा प्राप्त गर्ने शक्ति नै थिएन। तर मैले एउटा पनि यस्तो प्रार्थना गरिनँ, जसमा तपाईंको स्वस्थताको कामना थिएन।

**एलमिर** : तपाईंले मेरो निम्ति साह्रै चिन्ता गुर्नभयो।

**तारतूफ** : तपाईंको प्रिय स्वास्थ्यको निम्ति जति नै चिन्ता गरे पनि थोरै हुन्। तपाईंको स्वास्थ्यको निम्ति म आफ्नो स्वास्थ्य पनि त्याग्न तैयार हुन्थें होला।

**एलमिर** : तपाईं ईसाई धर्मको दयाको शिक्षालाई पराकाष्ठामा पुर्‍याउनु हुन्छ। तपाईंको यस कृपाकोलागि सँधै म ऋणी छु।

**तारतूफ** : तपाईंको निम्ति मैले जति गर्नु पर्ने थियो त्यति गर्न सकिन हुँला।

**एलमिर** : म तपाईंसित एउटा गोप्य कुरा गर्न चाहन्छु, मलाई खुशी छ यहाँ हामीलाई कसैले देखिरहेको छैन।

**तारतूफ** : म पनि साह्रै खुशी छु, श्रीमतीज्यू। साँच्चै नै यो खुशीको कुरा हो तपाईं मसित एक्लै हुनुहुन्छ। मैले ईश्वरसित यस्तो अवसर प्रदान गर्ने प्रार्थना गरेको थिएँ अनि आज उहाँले मलाई त्यो अवसर दिनु भयो।

**एलमिर** : म तपाईंसित एउटा कुरा गर्न चाहन्छु, म आशा गर्छु तपाईं हृदय खोलेर कुरा गर्नु हुनेछ, केही लुकाउनु हुन्न।

(दुवैको कुरा सुन्न, दामी सामु नआई, त्यो सानो कोठाको ढोका अलिकति खोल्छ, जसमा त्यो लुकेको छ।)

तारतूफ : म पनि एउटै कृपा चाहन्छु, त्यो हो म आफ्नो हृदय खोलेर तपाईंको अघि राखिदिउँ। म कसम खान्छु, मैले तपाईंकोमा आउने-जानेहरूको बारेमा जुन हल्ला मचाएको थिएँ, त्यो यसकारण होइन कि मलाई तपाईंसित कुनै घृणा छ, तर यस निम्ति कि म तपाईंप्रति उठ्ने आफ्नो भावनाको उत्साहमा थिएँ, ममा यो पवित्र भावना...।

एलमिर : म पनि यो अनुभव गर्छु अनि मलाई विश्वास छ, तपाईंलाई मेरो भलाईको चिन्ता छ।

तारतूफ : (एलमिरको औंलाको अग्रभाग दबाउँदै) निश्चय नै श्रीमतीज्यू, अनि मेरो भक्ति यति छ कि...।

एलमिर : उफ! कति साह्रो दबाउनु हुँदैछ।

तारतूफ : उत्साहको वेगमा यसो भयो। तपाईंलाई कुनै प्रकारको कष्ट दिने मेरो उद्देश्य थिएन। बरु म...।

(उसले एलमिरको घुँडामा हात राख्छ)

एलमिर : हात किन राख्नु हुँदैछ?

तारतूफ : तपाईंको पोशाकलाई छाम्दै छु। कपड़ा नरम रहेछ।

एलमिर : दया गरेर छोड़नोस्, मलाई साह्रै कुत्कुती लाग्छ।

(उ आफ्नो चौकी पछि सार्छे, तारतूफ आफ्नो चौकी उतिर बढ़ाउँछ।)

तारतूफ : वाह! 'लेस' कति अद्भुत छ? हिजआज त मानिसले आश्चर्यजनक काम गर्छन्। यति राम्रो बनिएको बस्तु आजसम्म देखेको छुइनँ।

एलमिर : हो, तर अब आफ्नो कुरा गरौं। भन्छन्, मेरो पतिले आफ्नो बचन तोड़ेर तपाईंलाई आफ्नो छोरी दिन चाहँदै हुनुहुन्छ। भन्नुहोस्, के यो सत्य हो?

तारतूफ : उहाँले मलाई दुई शब्द भन्नु भयो, तर सत्य मान्नुहोस श्रीमतीज्यू, मैले लिएको दीर्घश्वास, त्यो त्यस सुखको निम्ति होइन; मेरो सम्पूर्ण इच्छाहरू जुन आनन्दमा केन्द्रित छन्, त्यसको मधुर आकर्षण म अन्यत्रै देख्छु।

एलमिर : त्यो त्यसकारण कि तपाईं पृथ्वीको वस्तुलाई प्रेम गर्नु हुन्न।

तारतूफ : मेरो छातीमा ढुंगाको हृदय पनि त छैन।

एलमिर : म त सम्झन्छु, तपाईंको जम्मै निश्वास ईश्वरको निम्ति छन् अनि यहाँको कुनै चीजले तपाईंलाई आकर्षित गर्न सक्तैन।

तारतूफ : जुन प्रेमले हामीलाई सनातन सौन्दर्यसित बाँध्छ, त्यसले क्षणिक सौन्दर्यप्रति उत्पन्न हुने हाम्रो प्रेमलाई दबाउँदैन। हाम्रो इन्द्रियहरू ईश्वरद्वारा निर्मित पूर्ण कृतिहरूमाथि हठात् मुग्ध हुन्छन्। ईश्वरको प्रतितिम्ब तपाईं जस्तोमा देखिन्छ अनि तपाईंमा त उनले आफ्नो

महान् आश्चर्य झल्काई दिएका छन्। उनले तपाईंको अनुहारमा यस्तो सौन्दर्य छरिदिएका छन् कि आँखा चकित हुन्छन् औ हृदय मुग्ध हुन्छ। तपाई जो परिपूर्ण हुनुहुन्छ, तपाईंलाई देखेर म प्रकृतिको, स्रष्टाको प्रशंसा नगरि सक्तिनँ। यो सर्वश्रेष्ठ चित्र देखेर, जसमा चित्रकारले आफ्नै चित्र बनाएको छ, मेरो हृदय उत्कट प्रेमले अभिभूत हुन्छ। यो गुप्त प्रेम शैतानको कुनै चाल होला भनेर पहिले त म डराउँथे। तपाईंलाई आफ्नो मुक्तिको बाधक ठानी मैले तपाईंको दृष्टिबाट भाग्ने अठोट गरिसकेको थिएँ। तर मलाई थाह भयो सुन्दरी, यो प्रेम दूषित हुन सक्तैन। मैले यस प्रेमलाई पवित्रतासित समन्वय गरें, अनि मैले त्यसमा हृदय अर्पण गरें। म मान्दछु, यो मेरो दुस्साहस हुन सक्ला। म तपाईंलाई आफ्नो हृदय होइन तपाईंमा नै मेरो आशा, सुख र शान्ति छ। तपाईंमा नै मेरो दुःख र आनन्द निर्भर गर्छ। अन्तमा मैले सुखी हुनु छ वा दुःखी, तपाईंले नै यो फैसला गर्नु होला।

**एलमिर** : तपाईंको यो भाषण त साह्रै मज्जाको छ, साँचो भन्नु हो भने अलिक आश्चर्यजनक पनि। मलाई लाग्छ, तपाईंले आफ्नो हृदय अझै सावधानीसाथ राख्नु पर्ने, अनि यस्तो कुरामा बरु अर्कै सोच्नु पर्ने थियो। तपाईं जस्तो भक्त, जसको सर्वत्र चर्चा छ...।

**तारतूफ** : अरे! भक्त हूँ भन्दैमा म मान्छे होइन? त्यो कुरा होइन। तपाईंको स्वर्गीक सौन्दर्य देख्न पाइनुसाथै हृदय कुनै बिचार नगरी त्यसको पछि कुद्न लाग्छ। म जान्दछु, मेरो मुखबाट निक्लेका यी कुराहरू अचम्म लाग्दा हुन्। तर श्रीमतीज्यू, म कुनै देवता होइन। तपाईंलाई मेरो स्वीकारोक्तिसित कुनै गुनासो छ भने यसकोलागि तपाईं आफ्नो आकर्षक रूपलाई दोष्यानुहोस् अनि मानव सौन्दर्यलाई जुन दिनदेखि चम्किएको देखेको छु, त्यस क्षणदेखि तपाईं मेरो हृदयकी रानी हुनुभएको छ। तपाईंको दिव्य दृष्टिको प्रबल माधुर्यले मेरो कठोर हृदयले खड़ा गरिराखेको पर्खाललाई तोड़िदियो। उपवास, प्रार्थना, आँसु—सबलाई बेकम्मा बनाइदियो त्यसले, अनि मेरो सबै इच्छाहरूलाई तपाईंको आकर्षणतिर फर्काइदियो। मेरो आखाँ र निःश्वासले हजारपल्ट तपाईंलाई प्रष्टयाएको छ, अब आफूलाई अझै स्पष्ट पार्नलाई म वाणीको सहारा लिइरहेको छु। हे सुन्दरताकी देवी! तपाईंले आफ्नो यस दासको दुःखप्रति अलिकति दया-दृष्टि गर्नु भयो, तपाईंले मलाई अलिकति सान्त्वना दिनु भयो, म अधमप्रति अलिकति झुकाउ देखाउने कृपा गर्नु भयो भने मेरो तपाईंप्रति यस्तो भक्ति हुनेछ जो अरु कसैप्रति छैन। मसित

तपाईंको प्रतिष्ठा संकटमा पर्नेछैन, अनि मबाट तपाईंले कुनै बेइज्जतीमा पर्ने डर मान्नुपर्दैन। दरबारका ती मंजनुहरूमाथि नारीहरू पागल हुन खोज्छन्। ती साह्रै हल्ला-खल्ला गर्दै काम गर्छन् अनि उनिहरूको कुरा अनर्गल हुन्छ। ती सँधै आफ्ना सफलताको शेखी गर्ने गर्छन्। कुनै पनि कृपा पाएपछि ती सबैलाई सुनाउँछन्। तिनको असंयत वाणीलाई मानिसले पत्याउँछन्, त्यसले त्यो वेदीलाई नै अपवित्र पार्छ जहाँ तिनीहरूको हृदयको पूजा हुन्छ। तर हामी जस्ताको प्रेम संयत हुन्छ अनि यो निश्चित हो कि हामीसित कुरा सँधै गुप्त रहन्छ। हामी आफ्नो प्रतिष्ठाको निम्ति जुन सावधानी अपनाउँछौं, त्यसले आफ्नो प्रेमिकाको निम्ति सुरक्षाको काम गर्नेछ। हामी जस्तोको हृदय पाएर नारीहरू बदनामी विना प्रेम पाउन सक्छन् अनि बिना डरमा आनन्द।

**एलमिर** : म तपाईंको कुराहरू सुन्दैछु। तपाईंको भाषणले साह्रै सशक्त शब्दमा मलाई तपाईंको आशय सम्झाइदिएको छ भन्ने म आफ्नो पतिलाई तपाईंको यो उत्कट प्रेमको कुरा भन्न सक्छु? तपाईंलाई डर लाग्दैन, अनायास यस्तो प्रेमको कथा सुनाएर तपाईंप्रति उहाँको जुन प्रेम छ, त्यो बदलिन सक्छ?

**तारतूफ** : म जान्दछु, तपाईं साह्रै दयालु हुनुहुन्छ अनि तपाईंले मेरो यस दुस्साहसलाई क्षमा गर्नु हुनेछ। मानवको दुर्बलताको विचार गरेर तपाईंले यी उद्दीप्त प्रेमभावनाहरूलाई क्षमा गर्नु हुनेछ जसले तपाईंलाई दुःख पुर्‍याएको छ। ऐनामा आफ्नो अनुहार हेर्नु भएको बेला थाह लाग्नेछ, मानिस अन्धा हुँदैनन् अनि त्यो रगत-मासुले बनेको हुन्छ।

**एलमिर** : अरू सायद यसलाई अर्कै दृष्टिले हेर्दा हुन्, तर म संयमले काम लिनेछु। म आफ्नो पतिलाई यो कुरा भन्ने छुइनँ, तर बदलामा म तपाईंसित एउटा कुरा चाहन्छु, तपाईंले स्पष्टरूपले, अनि छल-कपट बिना मारिआनको बिहे वालेरसित सम्पन्न गराउनमा जोड़ दिनु हुनेछ। अर्काको धनमा धनी हुन चाहनु हुने अनुचित अधिकार तपाईंले त्याग्नु पर्नेछ।

## दृश्य-4

(दामी, एलमिर, तारतूफ)

**दामी** : (लुकेको त्यो कोठाबाट निस्केर) होइन श्रीमतीज्यू, होइन। सबैलाई यो कुरा बताउनु पर्छ। म त्यो ठाँउमा थिएँ जहाँदेखि मैले सबै

सुनिरहेको थिएँ। ईश्वरले मानौं कृपा गरेर मलाई यहाँ आउन प्रेरित गरेका थिए जसले गर्दा त्यसको ढोंग र दुष्टतादेखि बदला लिने बाटो खुलोस्, औ म आफ्नो पितालाई धोखाबाट बचाउन सकूँ, अनि यस नीचको हृदयलाई नाङ्गो पारेर त्यसको समक्ष राखूँ, त्यो जसले तपाईंसित प्रेमको कुरा गर्छ।

**एलमिर** : होइन दामी, यतिनै पर्याप्त छ। अब उसो यो धेरै सावधान हुनेछ, अनि आफूलाई मेरो कृपाको योग्य बनाउने चेष्टा गर्नेछ। कारण मैले त्यसलाई बचन दिइसकेकी छु। यसर्थ त्यस्तो केही नगर जसले मेरो बचन भंग होस्। हल्ला-खल्ला गर्नु मेरो स्वभावमा छैन। यस्तो मूर्खतामा नारीहरू हाँस्छन् अनि आफ्नो पतिलाई व्यर्थको कष्ट पुर्‍याउन चाहन्नँ।

**दामी** : यस्तो व्यवहारको निम्ति तपाईंको आफ्नो कारण छ अनि अन्यथा व्यवहार गर्नलाई मेरो आफ्नो कारण छ। यसलाई छोड्नु मात्र ठट्टा हुनेछ। यसको कट्टरपनद्वारा उत्पन्न मिथ्याभिमानले धेरैपल्ट मेरो उचित क्रोधमाथि विजय पाएको छ, अनि यसले हाम्रो यहाँ धेरै अव्यवस्था फैलाएको छ। यस ठगले धेरै दिनसम्म मेरो पितालाई शासन गरेको छ। यसले मेरो र वालेरको प्रेमलाई पनि आघात गरेको छ। यो आवश्यक छ कि मेरो पिताको आँखा खुलोस् र उहाँले यसको यस धोखालाई हेरुन्। यसको निम्ति ईश्वरले मलाई ठूलो मौका दिएका छन्, अनि म उनलाई धन्यवाद चढाउँछु। यो मौका साह्रै राम्रो छ, यसलाई छोड्न सकिन्न। हाथ लागेर पनि यसको उपयोग नभए यस्तो मौका मैले नपाएकै वेश।

**एलमिर** : दामी...।

**दामी** : होइन, मैले आत्मविश्वास बढ़ाउनु पर्छ। मेरो आत्मा चरमानन्दमा छ। बदला लिने आफ्नो खुसी मैले छोड्ने तपाईंको यो उपदेश व्यर्थ छ। अब निःसंकोच म यस रहस्यलाई खोल्नेछु, अनि यसैले मलाई सन्तोष हुनेछ।

## दृश्य-5

(ओरगों, दामी, तारतूफ, एलमिर)

**दामी** : बुबा, हामी तपाईंको यस आगमनमा तपाईंलाई एउटा एकदमै ताजा घटना सुनाउने छौं, सुनेर तपाईंलाई धेरै आश्चर्य हुनेछ। तपाईंले आफ्नो माया-ममताको राम्रो मोल पाउनु भएको छ, अनि महाशयले

तपाईंको कृपाको राम्रो पुरस्कार दिएका छन्। तपाईंप्रति यहाँको जुन ठूलो उत्साह छ, त्यो भखरै प्रकट भएको छ। यो उत्साह तपाईंको इज्जत लिलाम गरेर नै शान्त हुने थियो। मैले यहाँलाई अहिले पर्कें, यहाँ श्रीमतीज्यूसित आफ्नो गर्हित प्रेमको कुरा गर्नु हुँदै थियो। श्रीमतीज्यू नरम स्वभावकी हुनुहुन्छ, उहाँको बुद्धि पनि प्रौढ़ छ, यसर्थ यो कुरा रहोस् भन्ने सकभर उहाँ चाहनु हुन्थ्यो, तर म यस्तो दुस्साहस सहन सक्तिनँ अनि सोचें, यो कुरा तपाईंसित गुप्त राख्नु तपाईंप्रति अपराध गरे बराबर हुनेछ।

**एलमिर** : हो, म सम्झन्छु यस्तो व्यर्थको कुराले पतिको आराममा बाधा पुग्नु हुँदैन। यस्तो कुरामा इज्जत रहँदैन। हामीले आफ्नो बचाऊ गर्न सक्नु नै पर्याप्त छ। यो मेरो विचार हो अनि दामी, यदि तिमीमाथि मेरो कुनै अधिकार भए तिमीले यो सब भन्न सक्ने नै थिएनौ।

## दृश्य-6

(ओरगों, दामी, तारतूफ)

**ओरगों** : हे भगवान, मैले अहिले जो सुनें के त्यो साँचो पनि हुनसक्छ?

**तारतूफ** : हो, मेरो भाई, म दुष्ट हूँ, म दोषी हूँ। म एकजना अभागी पापी हूँ, अन्यायमा डुबेको। म एक यस्तो नीच हूँ, जस्तो कहिल्यै भएन। मेरो जीवनको एक-एक क्षण दागले भरिएको छ। मेरो जीवन, अपराधको पहाड़ र फोहोरको राश छोड़ी अरु केही होइन। मलाई लाग्छ, दण्ड स्वरूपनै ईश्वरले मलाई अहिले अपमानित गराइरहेका छन्। मप्रति भलै कस्तै दोषरोप होस् र आफ्नो बचाउको चेष्टा गर्ने छुइनँ। जुन तपाईंलाई भनिएका छन्, त्यो पत्याउनु होस्, आफ्नो क्रोधलाई जगाउनु होस् र मलाई एक अपराधी घोषित गरेर घरदेखि लखेटिदिनु होस्। मैले यो भन्दा पनि ठूलो धिक्कार सहनु पर्ने हो।

**ओरगों** : (आफ्नो छोरासित) अरे दुष्ट, तँ आफ्ना झुट्टा कुराले यहाँको सद्गुणको पवित्रतालाई नष्ट गर्न चाहन्छस्?

**दामी** : के भन्नु भो? यस ढोंगीको देखावटी नम्रताबाट तपाईं झुट्टा...?

**ओरगों** : चुप लागू नाथे।

**तारतूफ** : ओहो! उहाँलाई बोल्न दिनुहोस्। तपाईंले व्यर्थै दोष्याउनु हुँदैछ। तपाईंले उहाँको कुरा पत्याउनु नै असल हो। यस्तो कुरा भएर पनि तपाईं किन मलाई कृपा गर्नु हुँदैछ? तपाईंलाई त थाहै छ म के-के गर्न सक्छु? तपाईं मेरो बाहिरी रूपलाई किन पत्याउनु हुन्छ? तपाईं

जे पनि देख्नु हुन्छ, के त्यतिमै तपाईंले मलाई भलादमी ठान्नु हुन्छ? होइन, होइन, तपाईं मेरो बाहिरी रूपबाट धोखा खानु हुँदैछ। म त्यही हूँ जुन यहाँहरूले ठान्नु हुन्छ। संसारले मलाई राम्रो सम्झिन्छन्, तर सोझा र साँचा कुरा यही हुन्, म बेकामको छु।

(दामीसित बोल्दै।)

मेरो प्यारो नानी! भन म धोखेबाज हूँ, बदनाम हूँ, पतित हूँ। भन म एक चोर हूँ, हत्यारा हूँ। मलाई अझ अश्लील गाली सुनाऊ। म अस्वीकार गर्दिनँ। यो सब मेरोलागि उचित छ। यो लज्जाजनक अपराधको यै फल हो भन्ने म सम्झनेछु।

**ओरगों** : (तारतूफसित) भाई, धेरै भयो। (आफ्नो छोरालाई) पाजी, यसरी तेरो हृदय पग्लिदैन?

**दामी** : के भन्नु भो? यसको उपदेशले तपाई यति विघ्न धोखामा पर्नु हुनेछ कि...?

**ओरगों** : चुप लाग् नीच। (तारतूफलाई) उठ मेरो भाई, विन्ती छ। (आफ्नो छोरालाई) पापी!

**दामी** : त्यो...।

**ओरगों** : चुप लाग्।

**दामी** : मलाई रीस उठ्दै छ। मानिसले सम्झन्छन् कि म...।

**ओरगों** : एक शब्द पनि बोलिस् भने तेरो हात भाँचिदिन्छु।

**तारतूफ** : ईश्वरको निम्ति नरिसाउनु होस्। म कठिन भन्दा कठिन दुःख सहनेछु तर मेरो निम्ति यिनलाई कुनै चोट नलागोस्।

**ओरगों** : (आफ्नो छोरासित) कृतघ्न!

**तारतूफ** : यिनलाई त्यसै छोड़िदिनु होस। आवश्यक भए म घुँड़ा टेकेर यिनको निम्ति क्षमा...।

**ओरगों** : (तारतूफलाई) अरे, तपाईं ठट्टा गर्नु हुँदैछ? (आफ्नो छोरालाई) पाजी, यहाँको दया हेर।

**दामी** : तर...।

**ओरगों** : चुप।

**दामी** : के म...।

**ओरगों** : म भन्दैछु चुप लाग। म जान्दछु, यो दोषारोपकोपछि तिम्रो कस्तो दुर्भावना छ। तिमीहरू सबै यहाँलाई घृणा गर्छौ, औ म देख्छु, स्वास्नी, छोरी र नोकर सबै यहाँको विरुद्ध भएको छौ। आफ्नो घरबाट यी भक्त मानिसलाई लखेट्नलाई सबै प्रकारको उपायहरू दुस्साहसपूर्वक उपयोग गरिन्दैछ। तर यहाँलाई निकाल्ने जति चेष्टा

हुनेछ, म त्यत्तिनै चेष्टा गर्नेछु कि यी यहाँ रहून्। आफ्नो परिवारको अभिमान टूटाउनलाई म चाँडै आफ्नी छोरी यहाँलाई सुम्पनेछु।

दामी : उसो भए, तपाई चाहनु हुन्छ, मारिआनले जबर्जस्ती यहाँसित विवाह गरोस्?

ओरगों : हो, नीच। अनि तिमीहरूलाई देखाउन आजको रात नै। म तिमीहरूलाई केही ठान्दिनँ। म तिमीहरूलाई बताउँला, मेरो आज्ञा पालन गर्न जरुरी छ किनभने म नै एकमात्र मालिक हूँ। नीच, यहाँ आइज, आफ्नो वचन फिर्ता ली अनि यहाँको खुट्टामा परेर माफ् माग।

दामी : को, यस दुष्टको खुट्टामा, जो आफ्नो जालसाजले।

ओरगों : ओहो! मान्दैनस्, यहाँलाई गाली गर्छस्। नीच, अरे एउटा डंठा ल्याओ, एउटा डंठा (तारतूफसित) मलाई न रोक्नुहोस्। (आफ्नो छोरालाई) अहिले यसै घड़ी, यस घरबाट निस्की अनि फेरि मेरो घरमा पाइला नटेक्लास्।

दामी : ल, म निस्किने छु, तर...

ओरगों : चाँडै निस्किहाल। पाजी, तँलाई मेरो उत्तराधिकारबाट बंचित गर्छु, अनि तँलाई श्राप दिन्छु।

## दृश्य-7

(ओरगों, तारतूफ)

ओरगों : यस्ता देवतुल्य मानिसको यस्तो अपमान।

तारतूफ : हे ईश्वर, जसले मलाई दुःख दिए, त्यसको निम्ति तिनीहरूलाई क्षमा गर्नुहोला। (ओरगोंसित) मानिसहरू मेरै भाईको सामुने मलाई कलंक लगाउने चेष्टा गर्दा मलाई कति पीड़ा हुन्छ?

ओरगों : उफ्!

तारतूफ : यस कृतघ्नताको विचार-मात्र मेरो निम्ति यति ठूलो यातना हो कि...। मलाई जुन त्रासको अनुभव हुन्छ...। मेरो हृदय गह्रौं भएकोले म बोल्न सक्तिनँ। मलाई लाग्छ, म मर्नेछु। (उ आँखामा आँसु लिएर ढोकापट्टि कुद्छ, जुनबाट उसले आफ्नो छोरालाई लखेटेको हुन्छ।)

ओरगों : पाजी, मलाई दुःख छ कि मैले आफ्नो हात रोकें अनि तँलाई त्यसै क्षण मारिनँ। (तारतूफसित) आश्वस्त हुनुहोस् भाई दुःख नमान्नुहोस्।

तारतूफ : छोडनुहोस् यी अप्रिय झगड़ालाई। देख्दैछु कि म कति ठूलो

अशान्तिको कारण बनिन्दैछु। म सम्झन्छु दाई, मैले यहाँबाट जानु नै पर्छ।

**ओरगों** : किन? तपाईं ठट्टा गर्नुहुँदैछ?

**तारतूफ** : मानिस मसित घृणा गर्छन् अनि हेर्छु मप्रति तपाईंको मनमा सन्देह जगाउने चेष्टा हुँदैछ।

**ओरगों** : के भयो त? तपाईं आफै हेर्नुहुँदैछ, म यिनीहरूको कुरा सुन्छु?

**तारतूफ** : तिनीहरूले यस कुरालाई अघि बढ़ाउने छन्, यसमा सन्देह छैन अनि शायद, जुन कुरालाई अहिले अविश्वसनीय भनेर टार्नुहुँदैछ, पछि आफै पत्याउनु होला।

**ओरगों** : होइन भाई, कहिल्यै यो हुँदैन।

**तारतूफ** : अरे दाई, स्वास्नीमानिसले सजिलैसँग आफ्नो लोग्नेलाई वशमा पार्न सक्छिन्।

**ओरगों** : होइन, होइन।

**तारतूफ** : मलाई चाँड़ै यहाँबाट निस्किन दिनुहोस् अनि फेरि यिनीहरूलाई ममाथि आक्रमण गर्ने अवसर नै पाउने छैन।

**ओरगों** : होइन, तपाईं यहीं बस्नु हुनेछ। यो मेरो जीवन-मरणको प्रश्न हो।

**तारतूफ** : उसोभए मलाई उत्पीड़न सहने के आवश्यकता छ? तैपनि तपाईं चाहनु हुन्छ भने...।

**ओरगों** : उफ्!

**तारतूफ** : यस्तै होस्, भो अब न बोल्नुहोस्। मलाई थाहा छ मैले कस्तो व्यवहार गर्नुपर्छ। इज्जतको प्रश्न साह्रै नाजुक हुन्छ। मित्रताको हक छ कि म अफवाह नफैल्याउँ, यस्तो केही नगरुँ जसले सन्देह उत्पन्न होस्। म तपाईंकी श्रीमती देखि टाढ़ा रहनेछु अनि तपाईं देख्नु हुन्न कि म...।

**ओरगों** : होइन? जे भए पनि तपाईंले भेट्दै गर्नुहोस्। मानिस रिसाउन् यसैमा मलाई खुशी लाग्नेछ। म चाहन्छु, मानिसहरूले तपाईंलाई हरघड़ी उसितै देखून्। यति मात्र होइन, यिनीहरूलाई देखाउन म तपाईंलाई आफ्नो उत्तराधिकारी बनाउनेछु। म अहिल्यै गएर ऐन बमोजिम आफ्नो जम्मै सम्पत्ति तपाईंको नाममा लेखिदिन्छु। एकजना असल र स्पष्टवादी मित्र, जसलाई म आफ्नो जुवाईं बनाउँदैछु, मलाई आफ्नो छोरा, स्वास्नी र इष्टमित्रहरूभन्दा धेरै प्यारा छन्। के तपाईं मेरो यो प्रस्ताव स्वीकार गर्नु हुन्न?

**तारतूफ** : ईश्वर जे चाहन्छन, सबै त्यस्तै होऊन्।

**ओरगों** : बिचराहरू! हिंड़नोस् चाँड़ै गएर उत्तराधिकार-पत्र तयार गरौं। अनि फेरि ईर्ष्या र घृणाका बेलून फुट्दै गरुन्।

# चौथो अंक

## दृश्य-1

(क्लेआँत, तारतूफ)

**क्लेआँत** : हो, मानिसहरूमा यसको चर्चा छ, तर ममाथि विश्वास गर्नोस्, यस अपचर्चाले जुन बदनामी फैलिन्दैछ, त्यसले तपाईंको इज्जत बढ़ाउँदैन। भाग्यवश मैले तपाईंलाई भेटें महाशय, अनि म दुई शब्दमा आफ्नो विचार भन्न चाहन्छु। जुन कुरा फैलाइन्छ, म त्यसमाथि विचार गर्दिनँ। म त यसलाई टार्न चाहन्छु अनि विषयलाई त्यसको गहिराईसम्म पुगेर हेर्छु। मानिलिऔं, दामीले बुद्धिमानी गरेन, अनि त्यसले तपाईंलाई मिथ्या आरोप लगायो। तर त्यसको अपराधलाई क्षमा गरिदिने एकजना ईसाईको कर्त्तव्य होइन? अनि आफ्नो हृदयमा सल्कँदै गरेको प्रतिशोधको आगो निभाओस्, फेरि यस झगड़ाले गर्दा पिताले पुत्रलाई घरबाट निकालिदिएको सहन सक्नु हुन्छ? सानो-ठूलो सबै यस घटनाले क्षुब्ध भएका छन् भनेर स्पष्टसँग तपाईंलाई भन्दैछु। मलाई विश्वास गर्नु भए, तपाईंले यस विषयलाई शान्त गर्न सक्नुहुन्छ अनि कुरा सीमादेखि बाहिर जाने छैन। आफ्नो क्रोध ईश्वरलाई सुम्पिदिनुहोस् अनि पुनः पुत्रलाई पिताको आशीर्वाद प्राप्त गर्न दिनुहोस्।

**तारतूफ** : अफसोच्! म पनि हृदयले यस्तै होस् भन्ने चाहन्थें। मैले तिनीप्रति मनमा कुनै खोट राखिनँ अनि तिनलाई सबै कुराको निम्ति क्षमा गर्छु। म तिनलाई कुनै दोष दिन्नँ, बरु तिनीहरूको अन्तःकरणले सेवा गर्न चाहन्छु। तर ईश्वरको यस्तो इच्छा हुनै सक्तैन, अनि फेरि उनले यहाँ प्रवेश गर्नु भए मैले यहाँबाट जानु पर्छ। उनको यस्तो व्यवहारपछि—जसको कुनै उदाहरण देखिएको छैन—उनको र मेरो बीचमा कुनै सम्बन्ध भए बदनामी फैलिने छ। ईश्वर नै जान्दछन्, मानिसहरूले झट्टै के सोच्नेछन्। भन्नेछन्, यै मेरो नीति हो, अनि दोषी पनि हूँ। तैपनि आफ्नो विरुद्ध आरोप लगाउनेहरूलाई क्षमा

गर्नमा म उत्साह देखाउँछु, यसो पनि भन्लान्—म उनीसित डराउँछु, उनलाई खुशी पार्न चाहन्छु,. अनि चुपचाप उनको मुख बन्द गर्न चाहन्छु।

**क्लेआँत** : तपाई मसित झुट्टा बहाना लाउनु हुँदैछ, अनि तपाईंका सबै तर्क मगजको व्यायाम मात्र हुन्। तपाईं ईश्वरको इच्छालाई आफ्नो थाप्लोमा किन राख्नु हुन्छ? दोषीलाई दण्ड दिनु ईश्वरलाई हाम्रो सहायताको प्रयोजन हुन्छ? दण्ड दिने भार ईश्वरमा नै रहनदिनु होस्। तपाईं केवल क्षमा सोच्नुहोस्। ईश्वरले अपराधको क्षमाको निम्ति आफै व्यवस्था मिलाउनेछन्। यदि तपाईं ईश्वरीय आज्ञाको अनुकरण गर्नु हुन्छ भने, मानवीय न्यायपटि एकदमै ध्यान नदिनुहोस्। यस डरले कि मानिसहरूले के सोच्ने छन् हामी एउटा राम्रो काम गर्ने श्रेय किन छोडौं? होइन, होइन। हामी सँधै त्यही गरौं जुन ईश्वरको व्यवस्था हो, अनि फाल्तु कुरामा मगज किन दुखाउनु?

**तारतूफ** : मैले पहिलेनै तपाईंलाई भनी सकें श्रीमान, मैले हृदयले तिनलाई क्षमा गरिसकें, अनि यो ईश्वरीय व्यवस्थाको कुरा हुन गयो, तर आजको बदनामी र अपमानपछि, म उनीहरूसँग रहूँ, सायद ईश्वरले आज्ञा नदेलान्।

**क्लेआँत** : अनि उनी यो आज्ञा दिन्छन् श्रीमान, एकजना पिताको भ्रममा ध्यान दिउन् अनि उनको भेंट स्वीकार गरुंन् जसमाथि ऐन बमोजिम तपाईंको कुनै अधिकार हुनै सक्तैनं?

**तारतूफ** : मलाई चिन्नेहरू कदापि संझन्दैनन् कि यो एक स्वार्थी व्यक्तिको काम हो। यस संसारको समस्त सम्पत्ति मेरो निम्ति कुनै आकर्षण होइन। यसको झूठो चमकले म अचम्भित हुन्न। अनि साँचो भन्नु हो भने, यम पिताको त्यो भेंट स्वीकार गर्न निश्चय डराउँछु यसकारण कहीं यस सम्पंति दुष्टहरूको हात नलागोस्, यसको दोषपूर्ण उपयोग गर्नेहरूले नपावस्, तर मेरो उद्देश्य चाहिँ यसको उपयोग ईश्वरीय कामको निमित्त छिमेकीहरूको लागि होस्।

**क्लेआँत** : अरे महाशय, यस्ता 'सूक्ष्म' चिन्ताहरू छाड्नुहोस्। यसले एकजना वैधानिक उत्तराधिकारीलाई गुनासो हुनसक्छ। सबै संकट भए तापनि तपाईं कुनै चिन्ता बेगर उसलाई आफ्नो सम्पतिको मालिक हुन् दिनुहोस्। सोंच्नुहोस्, कति राम्रो हुनेछ कि उसले आफ्नो सम्पतिको दुरुपयोग गरोस्, हुनसक्छ, मानिसले तपाईंलाई यो दोषारोप गरून् कि तपाईंले उसको सम्पति हत्याउनु भयो। तपाईंले

यो सुझाउ मान्नु भए कति असल हुने थियो। आखिर साँचो धार्मिकतामा कुनै यस्तो सूत्र छ, जसमा एकजना साँचो उत्तराधिकारीलाई लुट्न सकिन्छ? अनि, ईश्वरले तपाईंको मनमा एक अपार बाधा खड़ा गरिदिएका छन् जसले गर्दा तपाईं दामीसित बस्न चाहनु हुन्न। न्याय बुद्धिको विरुद्ध छोरा घरबाट खेदिनु भन्दा एकजना ज्ञानी व्यक्तिले झैं तपाईं यहाँबाट इज्जतसाथ बिदा हुनु भए असल नहोला? विश्वास गर्नुहोस् महाशय, यही तपाईंको बुद्धिमानी हुनेछ।

**तारतूफ** : महाशय, साढ़े तीन बज्यो। मैले माथि गएर धार्मिक कर्म गर्नुछ। यति चाँड़ै विदा लिएकोमा क्षमा गर्नुहोला।

**क्लेआँत** : (एक्लै) ओहो!

## दृश्य-2

(एलमिर, मारिआन, दोरिन, क्लेआँत)

**दोरिन** : (क्लेआँतसित) कृपया यहाँको सहायतार्थ तपाईंले पनि हाम्रो साथ दिनु होला, महाशय। यिनको आत्मालाई मर्मान्तिक पीड़ा भइरहेको, छ, अनि आज राति यिनको पिताले जुन निश्चय गर्नु भएको छ, त्यसले यिनी हरघड़ी निराश रहनु हुन्छ। उहाँ अहिले आउनु हुनेछ, मेरो विन्ती छ, हामी सबै मिलेर कोशिश गरौं अनि शक्तिले वा उद्यम गरेर हामीलाई हैरान बनाउने षड्न्त्रको जरा उखेलौं।

## दृश्य-3

(ओरगों, एलमिर, मारिआन, क्लेआँत, दोरिन)

**ओरगों** : ओहोः! तपाईंहरू सबैलाई यहाँ भेला भएको देखेर मलाई खुशी लागको छ। (मारिआनलाई) मैले यस कागजको माध्यमबाट तिम्रो निम्ति यस्तो चीज ल्याएको छु जसले तिमी खुशी हुनेछौ। तिमीले मेरो आशय बुझ्यौ होला।

**मारिआन** : (घुँड़ा टेकेर) बुबा, उसलाई जसले मेरो दुःख बुझ्दछन्, भगवानको नाममा अनि त्यो जम्मै चीजको नाममा, जसले तपाईंको हृदयलाई द्रवित गर्न सक्छ, पिताका अधिकारलाई तपाईं अलिक नरम पार्नुहोस्, अनि इच्छाहरूलाई यस आज्ञाकारिताको बन्धनबाट मुक्त पारिदिनोस्। यस कठोर निश्चयले मलाई बाध्य नगर्नुहोला। म

ईश्वरसित गुनासो गरूँ कि मैले तपाईंको आज्ञा पालन गर्नु पर्दैछ। तपाईंले मलाई जुन जीवन दिनु भएको छ त्यसलाई दुःखी न बनाउनु होला। आफ्नो आशानुरूप आफूले प्रेम गरेको व्यक्तिको नबनूँ भन्ने चाहनु हुन्छ भने तपाईंको अघि घुँडा टेकेर प्रार्थना गर्छु, कम से कम मलाई यस्तो व्यक्तिको पत्नी हुने अवस्थाबाट बचाउनु होला, जसलाई म घृणा गर्छु। ममाथि आफ्नो अधिकारको प्रयोग गरेर मलाई निराशाको अंधकारमा नढकेल्नू होला।

**ओरगों** : (आफूलाई द्रवित भएको बुझेर) मेरो मन, दृढ़ बसे, मानव दुर्बलतामा न आए।

**मारिआन** : उहाँप्रति तपाईंको हृदयमा जुन प्रेम छ त्यसमा मलाई कुनै दुःख छैन, तपाईं त्यो प्रेममा डुबिरहनु होला, उसलाई आफ्नो सम्पति दिनुहोला, पर्याप्त नभए मेरो सम्पति पनि दिइहाल्नु होला। म हृदयबाट नै यो चाहन्छु औ तपाईंलाई मेरो सम्पति सुम्पन्छु। तर, मलाई पनि सामेल गर्ने गरी यस सीमा-सम्म नबढ़नुहोला, जसले गर्दा ईश्वरले दिएका शेष दुःखी दिन म कुनै "कन्वेन्ट"—मा बिताऊँ।

**ओरगों** : लौ कुनै पिताले आफ्नो पुत्रीको प्रेमको विरोध गर्छ, उ सन्यासिनी हुने कुरा गर्छे। उठ, तिम्रो मन जति यस प्रस्तावको विरोध गर्छ उतिनै यो प्रस्ताव तिम्रो निम्ति उचित सिद्ध हुनेछ। यस विवाहद्वारा तिमीले आफ्नो इन्द्रियलाई संयम गर्नुपर्छ अनि भविष्यमा यस विषयमा मेरो गिदी नखाऊं।

**दोरिन** : तर के ...?

**ओरगों** : तिमी चुप लाग त। तिमी आफ्नो दर्जाको मानिसहरूसित कुरा गर। म चेतावनी दिन्छु तिमीले एक शब्द बोल्ने साहस नगर।

**क्लेआँत** : यदि उत्तरमा तपाईंले मेरो एक सल्लाह मान्नुहुन्छ भने...।

**ओरगों** : मेरो भाई, तपाईंको सल्लाह संसारको सबभन्दा राम्रो सल्लाह हो। त्यसमा तर्क हुन्छ, अनि म त्यसको औधि सम्मान गर्छु। तर ममाथि यति कृपा गर कि मैले त्यसको उपयोग गर्नु नपरोस्!

**एलमिर** : (आफ्नो लोग्नेसित) म जे देख्दैछु त्यो बुझ्न सकेकी छुइनँ कि म के भनूँ? तपाईंको अन्धोपन देखेर छक्क परिरहेकी छु। हामीले आज जे बतायौं, त्यो पनि मिथ्या हुन्छ भने हामीले बुझ्नु पर्‍यो तपाईंमाथि त्यसको जादू कति परेको रहेछ, अनि तपाईंले त्यसको पक्षपात गर्नु हुँदैछ।

**ओरगों** : म तिम्रो दास हूँ, तर म देखेर नै चिन्दछु। मेरो दुष्ट छोराप्रति तिम्रो जुन सहानुभूति छ, त्यो म जान्दछु। त्यसले उस गरीबसित बदमाशी

गर्‍यो तर डरले तिमीले त्यसलाई झुट्टा ठहर्‍याएनौ। तिमी यति शान्त थियौ कि तिमीमाथि विश्वास गर्न सकिन्दैन थियो। कुनै कुरा भए त उद्विग्न देखिने थियौ।

**एलमिर** : उसो भए, के कसैको प्रेम-भावनाको अभिव्यक्तिले नै, हाम्रो प्रतिष्ठाले यति तीव्रतासथ फैलिनु पर्थ्यो? के आँखामा फिलुङ्गो र मुखमा गाली नबोकी हामी यसको उत्तर दिन सक्तैनौं? मलाई यस्तो कुरामा हाँस उठ्छ र यस विषयमा हल्ला गर्नु मन पर्दैन। म चाहन्छु, बुद्धिमत्तासाथ हामी यस विषयमा नम्रता देखाऔं। म ती अशिष्ट "ज्ञानीहरू" जस्तो छुइनँ जसको आफ्नो प्रतिष्ठाको रक्षा गर्ने हथियार पंजा र दाँत हुन्, जो कुनै कुरा हुनसाथ मानिसको मुख बिगार्न तैयार रहन्छन्। भगवानले मलाई यस्तो बुद्धिमतादेखि बचाउन्, म यस्तो सद्‌गुण चाहन्छु जो निर्मम नहोस्। म सन्झन्छु, एक बुद्धियुक्त र उदासीनतापूर्ण अस्वीकृतिले कुनै प्रेम-प्रस्तावलाई अस्वीकार गर्न थोरै शक्ति राख्दैन।

**ओरगों** : जे पनि होस्, म यो विषयलाई राम्ररी बुझ्छु, अनि धोखामा कहिल्यै पर्ने छैन।

**एलमिर** : तपाईंको कमजोरीमा मलाई फेरि आश्चर्य लाग्छ। तपाईंलाई साँचो भनिएको हो भनी तपाईंलाई प्रमाण गरि दिए तपाईंको अविश्वास कहाँ जाला?

**ओरगों** : देखाउने?

**एलमिर** : हो।

**ओरगों** : कुरा मात्रै हो।

**एलमिर** : के भयो त? मैले गरें अनि तपाईंले आफ्नो आँखाले देख्नु हुँदा चाहिँ?

**ओरगों** : उड़न्ते कुरा।

**एलमिर** : कस्ता मान्छे हुनुहुन्छ? कम से कम हुन्छ त भन्नुहोस्। तपाईंले हामीलाई पत्याउनु नै होस् भन्दिनँ, तर मानिलिनु होस् कुनै ठाँउमा तपाईंलाई केही देखाई दिए त्यस भला मानिसलाई तपाईं के भन्नुहुनेछ?

**ओरगों** : त्यस अवस्थामा म भन्ने छु...। केही भन्ने छुइनँ, कारण यस्तो हुनु नै सक्तैन।

**एलमिर** : तपाईंको यो भ्रान्त धारणा धेरै समय सम्म रह्यो, अनि तपाईंले मलाई धोखा दिने आरोप समेत लगाई सक्नु भएको छ। कुरालाई अघि बढ्न नदिएर मेरो सन्तोषको निम्ति यो आवश्यक भएको छ।

म त्यो सब कुरा तपाईंलाई देखाइ दिउँ, जुन मैले तपाईंलाई भनेकी छु।

**ओरगों** : ठीक छ, म तिम्रो कुरा मान्छु। म तिम्रो चतुराई हेर्नेछु। हेर्छु, कसरी तिमी आफ्नो बचन पुरा गर्छौ।

**एलमिर** : (दोरिनलाई) उसलाई यहाँ बोलाएर ल्याऊ।

**दोरिन** : उ साह्रै चलाख छ, अनि उसलाई वशमा गर्न पनि कठिन होला।

**एलमिर** : होइन। जोसित कसैले प्रेम गर्छ, उसैबाट नै त्यो सहजतासाथ ठगिन्छ। आत्म-प्रेमले आत्म-प्रवंचनातिर लैजान्छ। (मारिआन र क्लेऑंतसित) उसलाई तल ओर्लनु भन्नुहोस् र तपाईहरू यहाँबाट जानुहोस्।

## दृश्य-4

(एलमिर, ओरगों)

**एलमिर** : उ त्यो टेबलको नजीक हिंड्नुहोस् अनि तपाईं त्यसमुनी लुक्नुहोस्।

**ओरगों** : किन?

**एलमिर** : तपाईं ठीकसँग लुक्नुहोस्, यो जरूरी छ।

**ओरगों** : यो टेबलमुनी किन?

**एलमिर** : हे भगवान, छोड्नुहोस् त। मेरो दिमागमा एउटा कुरा आएको छ, तपाईं त्यसको परीक्षा गर्नुहोस्। म भन्दैछु, तपाईं त्यहाँ लुक्नुहोस् अनि लुकेपछि, एउटा कुरा याद राख्नुहोला कसैले तपाईंलाई नदेखोस्, तपाईंको शब्द नसुनोस्।

**ओरगों** : मान्नुपर्छ, यस विषयमा म साह्रै खुकुलो हुँदैछु। मैले हेर्नु छ, तिम्रो योजना के छ?

**एलमिर** : मलाई लाग्छ, दोषारोप गर्ने तपाईंलाई मौका मिल्ने छैन। (टेबलमुनि लुकेको तोग्नेसित) हेर्नुहोस्, म छक्क पर्दो कुरा शुरू गर्नेछु। तपाईं कुनै किसिमको बदनामीको अनुभव नगर्नुहोला। मलाई आवश्यक परेको कुरा बोल्ने आज्ञा दिनुपर्छ। किनकि मैले बचन दिएकी छु, म तपाईंलाई आफ्नो कुराको विश्वास गराई छाड्नेछु। कारण म बाध्य भएकी छु, रसिलो कुरा गरेर यस ढोंगीको मुखुण्डो उतार्नेछु। म त्यसको प्रेमको दुष्कामना भड्काउनु छु, अनि त्यसको दुस्साहसलाई पूर्ण स्वाधीनता दिनेछु। म यी सबै तपाईंको निम्ति गर्दैछु, त्यो भन्दा बढ़ी, त्यसलाई मूर्ख बनाउन चाहन्छु। जबसम्म तपाईंलाई पत्यार हुने छैन, तबसम्म म त्यसको इच्छाको उत्तरमा बोल्ने बहाना

गरिरहन्छु। तपाईंलाई पत्यार हुने साथ म चुप लाग्नेछु, कुरा त्यतिनै हुनेछ जति तपाईं चाहनु हुन्छ। तपाईं कुरा धेरै अघि बढ़ेको जसै देख्नु हुनेछ, अनि आफ्नो भूल अनुभव गरिसक्नु भएपछि त्यसको वासनालाई रोकेर आफ्नो स्वास्नीको रक्षा गर्ने तपाईंको कर्त्तव्य हुनेछ। यो तपाईंको नै भलोको कुरा हो, अनि तपाईंले यस बारे निश्चय पनि गरिहाल्नु होस्। लौ, त्यो आउँदै छ। चुप रहनुहोला। देखा नपर्नुहोला।

## दृश्य-5

(तारतूफ, एलमिर, टेबलमुनी ओरगों)

**तारतूफ** : मैले सुनें, तपाईं मसँग कुरा गर्न चाहनु हुन्छ।

**एलमिर** : हो, तपाईंसँग अलिक गोप्य कुरा गर्नु छ, तर सुन्न अघि यो ढोका बन्द गर्नुहोस्, चारैतिर हेर्नुहोस् कोही एकाएक भित्र नपसुन्। हामीसँग केहीक्षण अघि जस्तो घटना नदोहोरियोस्। म कहिल्यै यस्तो परिस्थितिमा परेकी थिइनँ। तपाईंलाई लिएर दामीले मेरो मनमा ठूलो डर जन्माइदिएको थियो। तपाईंले देख्नु नै भयो उसको चाल व्यर्थ पार्न र उसको रीस ठण्डा पार्न मैले कति चेष्टा गरें। यो ठीक हो म यस्तो उलझनमा परेकी थिएँ कि उसलाई झुट्टा बनाउने मलाई सम्झना नै भएन। तर ईश्वरेच्छाले सबै ठीक भयो, अब हरेक कुराको विश्वास भएको छ। तपाईंप्रति यहाँ जुन सम्मान छ, त्यसले आँधी शांत भयो अनि मेरो लोग्नेले तपाईंप्रति कुनै दुर्भावना राख्न सक्नै हुन्न। अनि बाहिर फैलाइने उड़न्ते कुराको उत्तरमा उहाँ हामी दुवैलाई सँधै एकैसाथ भएको चाहनु हुन्छ। यसैकारण बदनामीदेखि नडराइकन म तपाईंसित यस बन्द कोठामा एक्लै छु। तपाईंको प्रेमको उत्तरमा, सायद चाँडै नै, म आफ्नो हृदय खोल्ने हिम्मत गरिरहेकी छु।

**तारतूफ** : श्रीमतीज्यू तपाईंको यस भाषा बुझ्न साह्रै कठिन छ। एकक्षणअघि तपाईं अर्कै ढंगले बोल्नु हुँदैथियो।

**एलमिर** : ओहो! तपाईं यस्तो अस्वीकृतिले रिसाउनु भयो। लाग्छ, तपाईं नारी-हृदय बारे थोरै जान्नु हुन्छ। तपाईंलाई रत्ति थाह रहेनछ, हाम्रो के मनसाय हुन सक्छ। हामी जब साह्रै खुकुलोसँग आफूलाई बचाउने चेष्टा गर्छौं, यस्ता अवसरमा लाजशरम हाम्रो कोमल भावनासित ठोक्किन्छ। प्रेममा जसरी पनि हामी विजय प्राप्त गरौं,

त्यसलाई स्वीकार गर्दा हामीलाई लाज लाग्छ। पहिले त्यसको प्रतिकार गर्छौं, तर हाम्रो रँग-ढँगले हामीले आत्म-समर्पण गरेका बुझिन्छ। प्रतिष्ठाको प्रश्नले नै मुखबाट हाम्रो इच्छाहरू व्यक्त हुँदैन, अनि हामी यसप्रकारले अस्वीकृति जनाउँछौं कि त्यसबाट हाम्रो पूर्ण स्वीकृति व्यक्त भएको हुन्छ। लाजै नमानीकन म तपाईंसित धेरै खुलस्तसँग आफ्नो यस इच्छा व्यक्त गरिरहेकी छु। तर कुरा निक्लिसकेपछि सोध्छु, यदि मलाई तपाईंको प्रेम स्वीकार नभए म दामीलाई रोक्ने चेष्टा गर्ने थिएँ, यति शान्तिसँग तपाईंको प्रेमको कुरा सुनिरहन्थें, अनि त्यस विषयमा म त्यस्तै बाटो अपनाउने थिएँ? तर मैले नै एक प्रकारले निश्चित भइ सकेको बिहे रोक्ने जोड़ गरें। यस बाहेक अरू के हुन सक्छ कि तपाईंमा मेरो दिलचस्पी छ। अनि यस विवाह-बन्धनले मलाई दुःख हुनेछ, किनकि मैले चाहेको हृदय दुई फ्याक हुन्छ।

**तारतूफ** : निश्चय नै श्रीमतीज्यू, यो साह्रै खुशीको कुरा हो कि यस्तो शब्द त्यो मुखबाट सुन्दैछु जोसित मलाई प्रेम छ। यी शब्दहरूका मोहले मेरो सम्पूर्ण इन्द्रियहरूमा एक यस्तो अज्ञात माधुर्य फैलाएको छ, यसअघि जुनसँग म अपरिचित थिएँ। तपाईंलाई खुशी राख्नुनै मेरो एकमात्र सोंचाई हो। मेरो हृदयको चरमसुख तपाईंको इच्छा पालन हो। तर तपाईंको आज्ञा भए मात्र म भन्ने छु। अहिले पनि मेरो हृदयलाई आफ्नो यस सौभाग्यमा शंका छ। यी शब्दहरू सायद एउटा चाल हुनसक्छ जसले गर्दा यो हुने विवाह छोड़िदिऊँ। म तपाईंलाई स्पष्ट भन्छु, म यी मीठा कुरा तबसम्म पत्याउँदिन जबसम्मलाई कुनै कृपा देखाउने छैन, जसकोलागि म ठूलो सास फेर्छु। यसप्रकार तपाईंको हृदयमा मेरो निम्ति कोमल भावना पनि छ भन्ने मेरो मनमा विश्वास जम्नेछ।

**एलमिर** : (आफ्नो पतिलाई सचेत गर्न उ खोक्छे) के तपाईं यति वेगले अघि बढ़ेर मेरो मनको कोमलता शेष गर्न चाहनु हुन्छ? तपाईंको निम्ति मेरो मनमा जुन मीठो भावना मैले व्यक्त गरें, के यो तपाईंको निम्ति पर्याप्त छैन, के यस विषयले सीमा पार नगरे सन्तुष्ट हुनु हुन्न?

**तारतूफ** : म कुनै सुखको जति कम भागी हुन्छु, त्यसको त्यतिनै कम आशा राख्छु। हाम्रो इच्छा, कठिन कुराले नै पूरा हुन्छ। सुखको सम्भावनामा त्यसैनै शंका उठ्छ, अनि म चाहन्छु सुख भोगेर नै त्यसलाई पत्याउँ। म तपाईंको कृपाको निम्ति अति अयोग्य छु भन्ने सम्झन्छु औ म आफ्नो यस साहसको सुफलमा सन्देह गर्छु। म कुनै

कुरा पत्याउने छुइनँ श्रीमतीज्यू, जबसम्म साँचो रूपले तपाईं मेरो प्रेमलाई आश्वस्त गराउनु हुन्न।

एलमिर : भगवान, कति अत्याचारी प्रेम छ तपाईंको, अनि मेरो बुद्धि पनि कति संकटमा परेको छ। मनमा यसको कति भयानक प्रतिक्रिया छ। यो बलपूर्वक आफूले चाहेको वस्तु पाउन चाहन्छ। किन, तपाईंको हठी स्वभावबाट कुनै रक्षा छैन? के तपाईं सास लिने फुरसत पनि दिन चाहनु हुन्न? यो कति अशोभनीय हो कि तपाईंले आग्रह गरेको वस्तु तुरन्तै मिलोस्? यस प्रकारको दबाऊले तपाईं मेरो त्यो कमजोरीको लाभ लिन चाहनु हुन्छ जुन मैले व्यक्त गरेकी छु।

तारतूफ : तर तपाईं मप्रति दया-दृष्टि राख्नु हुन्छ भन्ने ठोस प्रमाण दिन अस्वीकार किन गर्नु हुन्छ?

एलमिर : तर ईश्वरलाई अप्रसन्न नगरिकनै, जसको तपाईं सर्वदा चर्चा गर्नु हुन्छ, कोही तपाईंको इच्छामा सहमत कसरी हुनसक्छ?

तारतूफ : मेरो इच्छाहरूको पूर्तिमा ईश्वर बाधा भए यस्तो बाधा दूर गर्न मेरो निम्ति साधारण कुरा हो। यसले तपाईंको प्रेम बाधाग्रस्त नहुनु पर्ने।

एलमिर : तर ईश्वरको न्यायको कुरा भनेर हामीलाई साह्रो डर देखाइन्छ त।

तारतूफ : म यस्तो फेद-न टुप्पोका चिन्ताहरू हटाउन सक्छु, श्रीमतीज्यू। मलाई यस्तो धारणाहरू हटाउने कला याद छ। यो साँचो हो कि ईश्वर कतिपय उपभोगहरू निषेध गर्छन् (यो एक दुष्ट बोल्दै छ) तर उसित कतिवटा समझौता गर्न सकिन्छ। यो ज्ञानको कुरा हो कि हामी आफ्नो अन्तरात्माको मापदण्ड आश्यकतानुसार कम-बेसी गरौं अनि कुनै कामको खराबीलाई हामी आफ्नो उद्देश्यको पवित्रताले ठीक गरौं, यी रहस्यरूसित म तपाईंलाई परिचित गराई दिनेछु, तपाईं मेरो पछि-पछि मात्र हिंड्नुहोस्। मेरो इच्छा पूरा गरिदिनु होस् कुनै कुरासित नडराउनु होस्। यो पाप म आफूमाथि लिन्छु। (एलमिर जोरले खोक्छे) तपाईं साह्रो खोक्नु हुँदैछ, श्रीमतीज्यू।

एलमिर : हो, यसले मेरो ज्यान लिंदैछ।

तारतूफ : के तपाईं अलिकति मुलहटीको रस लिनुहुन्छ?

एलमिर : यो बड़ा कठिन सर्दी हो। मलाई लाग्छ, संसारको कुनै रसले यो जाति हुने छैन।

तारतूफ : यो त साँच्चै चिन्ताको कुरा हो।

एलमिर : यति साह्रो कि म भन्नै सक्तिनँ।

**तारतूफ** : जे पनि होस्, तपाईंको सन्देहात्मक धारणाको सहजै उपचार हुनसक्छ। तपाईं निश्चिन्त रहनुहोस्, कुरा गुप्त रहने छ। खराबी यसैमा छ कि कुरा फैलाइयोस्। मानिसमा फैलिएको नराम्रो कुरा नै अपराध हो। चुपचाप गरेको पाप, पाप हुँदैन।

**एलमिर** : (फेरि खोकेर टेबल ठोक्दै) मलाई लाग्छ, अब तपाईंको प्रस्ताव मान्ने निश्चय गर्नै पर्छ। यो आवश्यक छ कि सबै कुरा मानूँ, यसको कम्तीमा मानिस खुशी हुने छैन न उनीहरूलाई विश्वासनै हुनेछ। यस सीमासम्म जानु असलमा अनिष्ट हो, तर म आफ्नो आत्माको विरुद्ध हो साहस गर्छु। किनकि मानिसले जिद्दी गरिरहेका छन् कि म यस सीमासम्म पुगूँ, किनकि नदेखी हाम्रो कुरा पत्याउन सक्दैनन् र धेरै विश्वासिलो प्रमाण चाहन्छन्। यसर्थ मैले निश्चय गर्नुपर्छ, मानिसलाई खुशी राख्नुपर्छ। यदि यस उपभोगमा कुनै दोष भए तिनीहरूनै दायी छन् जसले मलाई यस बाटोमा धकेलिरहेका छन्। निश्चय नै यो मेरो अपराध हुने छैन।

**तारतूफ** : हो श्रीमतीज्यू, म जिम्मावारी लिन्छु, अनि यी कुरा...।

**एलमिर** : दया गरी त्यो दैलो खोल्नुहोस्न, हेनुहोस् त मेरो लोग्ने दलानमा त हुनुहुन्न?

**तारतूफ** : तपाईं उहाँको चिन्ता किन गर्नुहुन्छ? उहाँ एक यस्तो मानिस हुनुहुन्छ, जसलाई हामी नाख समातेर हिंड़ाउन सक्छौं। हाम्रो मिलजुललाई उहाँ आफ्नो इज्जत ठान्नुहुन्छ। मैले उहाँलाई यस्तो बनाएको छु कि उहाँ सबै कुरा देखेर पनि कसैमा विश्वास गर्न सक्नुहुन्न।

**एलमिर** : र पनि दया गरेर एकक्षणकोलागि तपाईं निस्किएर सबैतिर राम्ररी हेर्नुहोस्न।

## दृश्य-6

(ओरगों, एलमिर)

**ओरगों** : (टेबल मुनीबाट निस्किँदै) वास्तवमा म मान्छु यो एक घृणित व्यक्ति हो। मैले सोच्नै सकिनँ। मलाई रिंगटा लाग्दैछ।

**एलमिर** : किन, यति चाँड़े निस्किनु भयो? तपाईं मानिसको ठट्टा गर्नु हुन्छ? टेबल मुनी पस्नुहोस्, अहिले बेला भएको छैन। निश्चितरूपले सब कुरा हेर्न अन्तसम्म लुक्नुहोस्। साधारण अड़कलमा विश्वास नगर्नुहोस्।

ओरगों : होइन, यति ठूलो पापी त नरकमा पनि नहोला।

एलमिर : यति चाँड़ै पत्याउनु राम्रो होइन। हार मान्न अघि मज्जासाथ विश्वास गर्नुपर्छ। चाँड़ो नगर्नुहोस्, कहीं धोखा नहोस्।

(उ आफ्नो लोग्नेलाई आफ्नोपछि लुकाउँछे)

## दृश्य-7

(तारतूफ, एलमिर, ओरगों)

तारतूफ : (ओरगोंलाई नदेखेर) श्रीमतीज्यू, सबै मेरो इच्छाको अनुकूल छ। मैले सबैतिर आफ्नै आँखाले हेरें, कोही पनि देखिन्दैन, अनि मेरो प्रसन्न मन...। (उ बाहु फैलाएर एलमिरलाई आलिंगन गर्न खोज्छ। एलमिर पछि सर्छे, तारतूफले ओरगोंलाई देख्छ।)

ओरगों : (उसलाई रोक्दै) धेरै राम्रो। तपाईं आफ्नो प्रेमसित धेरै अघि बढ़नु हुँदैछ। तपाईंले यति उत्ताउलो नहुनु पर्ने। वाह! तपाईं एकजना भलादमी हुनुहुन्छ भनी मलाई देखाउनु हुन्थ्यो। तपाईंको मन वासनाको वशमा भएको छ। तपाईं मेरी छोरीसित विवाह गर्ने हुनुहुन्थ्यो। अनि मेरी स्वास्नीमा पनि आँखा गाड़नु हुन्छ। म धेरै बेरदेखि सोच्दै थिएँ तपाई यस्तो आचरण पनि गर्न सक्नु हुन्छ? अनि सोच्दै थिएँ तपाईं आफलाई सम्हाल्नु हुन्छ, तर यो त प्रमाणको पराकाष्ठा भयो। मलाई निश्चय भयो, म कुनै प्रमाण चाहन्नँ।

एलमिर : (तारतूफलाई) मैले यो सब आफ्नो स्वभावको विरुद्ध गरें, तर मलाई यस्तो गर्न बाध्य गराइयो।

तारतूफ : के तपाईं ठान्नु हुन्छ?

ओरगों : दया गरी नचिच्याउनु होस्। झट्टै यहाँबाट बिदा लिनुहोस्।

तारतूफ : मेरो उद्देश्य...।

ओरगों : यी बेकारका कुराहरू हुन्। तपाईंले अहिले नै घर छोड़नु पर्छ।

तारतूफ : 'तपाई निस्कनुपर्छ' तपाईं त मालिकले झैं बोल्नु हुँदैछ। म भनौं यो घर मेरो हो, अनि तपाईंलाई यो पनि भनी राखौं, कुनै नीच चाल चलेर मसित व्यर्थमा झगड़ा मोल लिइएको छ। मेरो बेइज्जती गर्दा तपाईंले आफ्नो स्थिति बुझ्नु भएन। यस धोखालाई तोड़न र त्यसको मज्जा चखाउन, ईश्वरप्रति गरिएको अपराधको बदला लिन अनि जसले मलाई यहाँबाट निस्किनु भन्दैछन्, ती सबलाई पश्चातापमा पर्न मसित पर्याप्त साधन छन्।

## दृश्य-8

(एलमिर, ओरगों)

**एलमिर** : यो सब के हो, उ के भन्न चाहन्छ?

**ओरगों** : अरे, म त हैरान छु। यो हाँस्ने कुरा होइन।

**एलमिर** : किन?

**ओरगों** : उसको कुराले अहिले म आफ्नो भूल अनुभव गरिरहेको छु। मैले उसलाई उत्तराधिकार-पत्र बनाई दिएको छु, त्यसैले भाउन्न छुटेको छ।

**एलमिर** : उत्तराधिकार-पत्र...?

**ओरगों** : हो, त्यो विधि पूरा गरिएको छ। तर यो छोड़ेर पनि अर्को कुरा छ, जसले म झन् चिन्तित छु।

**एलमिर** : त्यो के?

**ओरगों** : तिमीले सबै थाह पाउने छौ, माथि एउटा डिब्बा छ-छैन चाँड़ै गइ हेर त।

# पाँचौं अंक

## दृश्य-1

(ओरगों, क्लेआँत)

**क्लेआँत** : कहाँ कुद्न चाहनु हुन्छ?

**ओरगों** : उफ्! के म जानूँ?

**क्लेआँत** : मलाई लाग्छ, यस स्थितिमा हामीले आपसमा सल्लाह गरी सोच्नु पर्छ। हामीले के गर्नु पर्ने हो?

**ओरगों** : डिब्बाको निम्ति साह्रै हैरान छु; अरु चीज भन्दा मलाई यसैको साह्रो चिन्ता छ।

**क्लेआँत** : के डिब्बा कुनै महत्वपूर्ण रहस्यसित संबद्ध छ?

**ओरगों** : मेरो अभागी मित्र आफै आएर, गुप्तरूपले डिब्बा मेरो हातमा दिएर गएको थियो। भाग्दा यसलाई मकहाँ नै राखिछाड़ेको थियो। जाँदा-जाँदै मलाई भनेको थियो, त्यही कागजमा नै उसको जीवन र सम्पति निर्भर गर्छ।

**क्लेआँत** : उसो भए, यो कागज अरुको हातमा किन पर्न दिएको?

**ओरगों** : यो मेरो अन्तरात्माको प्रेरणाले भयो। मैले सीधै त्यस विश्वासघातीलाई पत्याएँ। उसको तर्कले मलाई विश्वास भएको थियो कि डिब्बा उसकैमा राख्नु उचित हुनेछ, कारण मैले सोचें, जाँच हुँदा म अस्वीकार गर्नेछु अनि यस उपायको आढ़मा सत्यको विरुद्ध कसम खाँदा मेरो अन्तरात्मा पूर्णतः आश्वस्त रहने छ।

**क्लेआँत** : तर तपाईं नराम्रो फँस्नु भएको छ, कम-से-कम भावले त त्यस्तै बुझिन्छ। मेरो धारणा छ, तपाईंले उत्तराधिकार-पत्र बनाउँदा र त्यसको रहस्योद्घाटन गर्दा थोरै बुद्धिमत्ताले काम लिनु भएको छ। यस्तो लेखा पढ़ी गरेर तपाईं ठूलो फेरमा पर्नसक्नु हुन्छ। यस मानिसलाई घरबाट निकाल्नु झन् ठूलो मूर्खता भएको छ जब उसकै हात माथि छ। तपाईंले कुनै अप्रत्यक्ष उपाय खोज्नु पर्ने थियो, जो अहिलेको भन्दा नरम हुन्थ्यो।

**ओरगों** : के? हार्दिक धार्मिकताको आड़मा यस्तो कपटी मन? यस्तो

दुष्टात्मा? मैले त्यसको त्यति बेला स्वागत गरें जब उ भीख मांग्ने अवस्थामा थियो, जब उसित कोही थिएन। अब भयो। अब म धार्मिकता लिएका मानिसहरूदेखि टाढ़ा रहने छु। मलाई भविष्यमा यस्तासित घृणा हुनेछ, अनि म यस्ता राक्षस भन्दा पनि अझ डरलाग्दो हुन सक्छु।

**क्लेआँत** : लौ, यही तपाईंको उत्ताउलोपना हो। आफूलाई नियन्त्रित गर्न सक्नुहुन्न। कहिल्यै ठीकसँग कुरा गर्न सक्नुहुन्न, अनि सँधै एक अतिदेखि अर्को अतिमा पुग्नु हुन्छ। तपाईले आफ्नो भूल बुझ्नु भयो, र अड़कल गरिहाल्नु भयो कि तपाईं झूठो धार्मिकताको प्रभावमा पर्नु भएको थियो। यो पनि कुनै बुद्धिमानी हो कि तपाई आफ्नो एक भूल सुधार्न अर्को ठूलो भूल गर्नुहोस्, र एक झुठो र नीच व्यक्तिसित तपाईं सबै सत् व्यक्तिहरूलाई मुछ्नु होस्? किनभने एक बाठोले धार्मिकताको स्वाँग गरेर निर्लज्जतासाथ तपाईंमाथि प्रभाव जमायो। यसर्थ तपाईं ठान्नुहुन्छ, कि सबै उ जस्तै छन् अनि आज कतै पनि एक साँचो भक्त छैन? नास्तिकहरूको निम्ति यस्तो मूर्खतापूर्ण कुरा छोड़नुहोस् र सद्गुणलाई देखावटीदेखि अलग गर्नुहोस्। हतारिएर कसैको उच्चादर्श नपत्याउनु होस्। सक्नु भए, ढोंगी सम्मान गर्नदेखि जोगिनु होस्। तर साँचो धार्मिकतामा दोष नलगाउनु होस्। यदि तपाईंलाई अतिमा नै जाने इच्छा छ भने धार्मिकतालाई दोष लगाउनु भन्दा तपाईं ढोंगीको नै मान गर्ने भूल गर्नुहोस्।

## दृश्य-2

(दामी, ओरगों, क्लेआँत)

**दामी** : बुबा, के यो साँचो हो, त्यस नीचले तपाईंलाई चुनौती दिएको छ? आफ्नो नीचताको पूर्ण दम्भमा के तपाईंको कृपालाई, त्यसले एकदमै भूल्यो जसमाथि रीस उठ्छ—तपाईंको दयाहरूलाई नै तपाईंको विरुद्ध हथियार बनाएर त्यसले प्रयुक्त गर्दैछ?

**ओरगों** : हो छोरा, अनि कहिल्यै नलागेको दुःख भएको छ।

**दामी** : ममाथि छोड़नु होस्, म त्यसको दुवै कान काटिदिनेछु। त्यसको यो अशिष्टता देख्दा हामीलाई संकोच नलाग्नु पर्ने। तपाईं हेर्दै गर्नुहोस् त्योसित तपाईंको पिण्ड छुटाई छाड़नेछु। यस विषयलाई अन्त गर्न त्यसको हत्या गरिदिन नै आवश्यक ठान्छु।

**क्लेआँत** : लौ, यसैलाई शिशुपना भन्छ। यस्तो उर्लन्दो भावनालाई अलिक कम गर्नुहोस्। हामी एउटा राज्यमा बस्छौं, अनि एक यस्तो युगमा बाँचिरहेको छौं जहाँ हिंसाले सबै कुरा बिगार्न सक्छ।

## दृश्य-3

(श्रीमती पेरनेल, मारिआन, एलमिर, दोरिन, दामी, क्लेआँत)

**श्रीमती पेरनेल** : यो के हो? यी सब भयंकर रहस्य म के सुनि रहेकी छु?

**ओरगों** : यी यस्ता न देखेका चीजहरू हुन् जुन मैले आफ्नो आँखाले देखेको छु। तपाई देख्नु हुँदैछ, मेरो सेवाको कस्तो मूल्य पाएँ। मैले आफ्नै उत्साहमा एकजना मानिसलाई त्यसको दीनतादेखि उठाएँ, त्यसलाई आफ्नो छोरी दिँदैछु साथै आफ्नो जम्मै सम्पति अनि यसै बीच त्यस नीचले, त्यस दुष्टले मेरी स्वास्नीको सतीत्व लूट्ने पापपूर्ण प्रयत्न गर्छ। यी नीच कर्महरूले नअघाएर त्यो मैरै उपकारको सहारा लिएर मलाई धम्काउने साहस गर्छ। मेरो बुद्धिहीन दयालुताबाट पाएको सुविधाले मैरै सर्वनाश गर्न चाहन्छ। मलाई त्यस संपत्तिबाट बंचित गर्न चाहन्छ, जुन मैले त्यसको नाममा गरि दिएँ, अनि मलाई त्यस अवस्थामा पुर्‍याउन चाहन्छ जहाँबाट मैले त्यसलाई निकालेको थिएँ।

**दोरिन** : बिचरा?

**श्रीमती पेरनेल** : छोरा, त्यसले यस्तो कालो कर्म गर्न खोजको हो भनी म विश्वास गर्न नै सक्तिनँ।

**ओरगों** : किन?

**श्रीमती पेरनेल** : राम्रो मान्छेसित सँधै ईर्ष्या गरिन्छ।

**ओरगों** : तपाईंको यस भनाइको अर्थ के हो आमा?

**श्रीमती पेरनेल** : यै कि तेरो घरको मान्छे अचम्म ढँगले बाँच्छन् अनि म राम्ररी जान्दछु उसित यहाँका मान्छेहरू द्वेष गर्छन्।

**ओरगों** : जो म तपाईंलाई भन्दैछु त्यसको द्वेषसित के सम्पर्क छ?

**श्रीमती पेरनेल** : तँ सानै छँदादेखि मैले भन्दै आएकी थिएँ संसारमा सद्‌गुणको सँधै विरोध हुन्छ, अनि ईर्ष्या गर्ने मानिस मर्लान्, तर ईर्ष्या मर्नेछैन।

**ओरगों** : तर यी उपदेशहरूको आजको घटनासित के सम्पर्क छ?

**श्रीमती पेरनेल** : उसको विरुद्धमा तँलाई सौ कथा सुनाए होलान्।

**ओरगों** : मैले तपाईंलाई भनें नी, सबै कुरा मैले आफ्नो आँखाले देखेको हो।

**श्रीमती पेरनेल** : निन्दा गर्नेको चाल ठूलो हुन्छ।

**ओरगों** : तपाईंले मलाई पागल बनाउनु हुनेछ, आमा। भनें नी, सबै कुरा मैले आफ्नै आँखाले देखेको हो।

**श्रीमती पेरनेल** : मानिसको मुख त विष मात्र छाद्न जान्दछ, अनि यहाँ कोही छैन जो यस स्वभावबाट जोगिएको छ।

**ओरगों** : यो त साधारण जानकारीदेखि बाहिरको कुरा हो। म भन्दैछु, मैले आफ्नो आँखाले देखेको, जसलाई 'हेर्नु' भन्छन्। के सयपल्ट यसलाई तपाईंको कानमा हाल्नुपर्छ अनि जोड़ले चिच्याउनु पर्छ?

**श्रीमती पेरनेल** : हे भगवान! धेरै पल्ट देखे भ्रम हुन्छ। जो देख्यो त्यसैलाई सँधै साँचो मानेर फैसला गर्नु राम्रो हुँदैन।

**ओरगों** : मलाई रीस उठ्दैछ है...।

**श्रीमती पेरनेल** : हामी स्वभावले नै सन्देहशील हुन्छौं, अनि प्रायः राम्रोलाई नराम्रो ठान्छौं।

**ओरगों** : मेरी स्वास्नीलाई आलिंगन गर्ने त्यसको इच्छालाई पनि भन्नू?

**श्रीमती पेरनेल** : मानिसलाई आरोप लगाउन आवश्यक कारण चाहिन्छ। तैंले त्यस बेलासम्म पर्खिनु पर्थ्यो जबसम्म निश्चित रूपले तैंले देख्ने थिइस्।

**ओरगों** : आखिर कुन चैं उपाय थियो यसभन्दा बढ़ा निश्चित हुनेको लागि। के मैले त्यस बेलासम्म पर्खिनु थियो आमा, जब सम्म त्यसले मेरो आँखाको सामु...। तपाईंले मेरो मुखबाट जताभावी बक्न न लगाउनु होला।

**श्रीमती पेरनेल** : जे पनि होस्, म देख्छु उसको आत्मा एक पवित्र धार्मिक उत्साहले दीप्त छ, अनि म यो कहिल्यै सोच्न सक्तिनँ कि उसले यसो पनि गर्‍यो होला, जुन उसको बारेमा भनिन्दै छ।

**ओरगों** : ठीकै छ। तपाईं मेरी आमा नुहनु भए, रीसको झोंकमा म के-के भनी दी सक्थें।

**दोरिन** : आफ्नो कर्मको उचित फल पाउनु भो, श्रीमान। तपाईं पत्याउनु हुन्नथ्यो, अब तपाईंलाई पत्याउँदैदन्।

**क्लेआँत** : हामी व्यर्थको कुरामा समय बिताउन भन्दा जरुरी काम गर्नु पर्ने थियो। यस नीचबाट हुने खतराप्रति, हामीले असावधान हुनु हुँदैन।

**दामी** : के? त्यसको निर्लज्जता त्यहाँसम्म बढ़ला त?

**एलमिर** : मलाई त लाग्छ, त्यसले यस्तो गर्न सक्दैन। त्यसको कृतघ्नता एकदमै स्पष्ट छ।

**क्लेआँत** : (ओरगोंसित) यस्तो भरोसामा नपर्नुहोला। तपाईंको विरुद्ध गरेको आफ्नो चेष्टाको पक्षमा त्यसले साधन जुटाउने छ। यस्ता मामूली कुरामा, कुनै षड्यन्त्रकारी गुटले मानिसलाई भयंकर भ्रममा पार्छ।

म फेरि भन्दैछु, त्यसको हातमा के-के परेको छ, तपाईंले त्यसलाई त्यस सीमासम्म नहटाउनु पर्ने थियो।

ओरगों : साँचो हो, तर के गर्नु? यस गद्दारको अभिमान देखेर मैले आफ्ना भावनाहरूलाई वशमा राख्न सकिनँ।

क्लेआँत : म त हृदयले चाहन्छु कि मिथ्या शान्तिको आड़मा तपाईंहरूको पुनः मेल होस्।

एलमिर : त्यसको हातमा यस्तो हथियार छ भनी जानेको भए त म यत्रो तूफान उठ्ने दिने थिइनँ, अनि मेरो... ...।

ओरगों : (श्री ल्वायाललाई आउँदै गरेको देखेर दोरिनसित) यो मान्छे के चाहन्छ? चाँडै गएर हेर। मानिसहरूले मलाई भेट्नु, म राम्रै अवस्थामा छु।

## दृश्य-4

(श्री ल्वायाल, श्रीमती पेरनेल, ओरगों, दामी, मारिआन, दोरिन, एलमिर)

श्री ल्वायाल : (दोरिनसित, जो मञ्चको भित्रपट्टि छे) मेरी प्यारी बहिनी, नमस्ते। कृपा गरेर यस्तो गर्नु होस् कि म श्रीमानसित बात गर्न सकूँ।

दोरिन : उहाँसित अरु मान्छे छन्, मलाई शंका छ कि उहाँ कसैसित भेट गर्न सक्छन्।

श्री ल्वायाल : म उहाँलाई हैरान गर्न यहाँ आएको होइन। म आउनाले उहाँलाई अप्रसन्नता हुनेछ भनि ठान्दिनँ। म एउटा यस्तो कामले आएको छु कि तपाईंहरू खुशी हुनु हुनेछ।

दोरिन : तपाईंको नाम?

श्री ल्वायाल : उहाँलाई यति मात्र भन्नुहोस् कि म उहाँको भलाईको निम्ति आएको छु, तारतूफको भएर।

दोरिन : एकजना भलादमी आउनु भएको छ तारतूफको तर्फबाट, देख्नमा राम्रो स्वभावको देखिनु हुन्छ। भन्नु हुन्छ, जुन कामले उहाँ आउनु भएको छ, त्यसले तपाईंलाई खुशी हुने छ।

क्लेआँत : तपाईंले हेर्नु पर्ने थियो कि मानिस को हो अनि के चाहन्छ?

ओरगों : सायद हामीमा मेल-मिलाप गराउन आएको हो। म उसित कस्तो भावना व्यक्त गरूँ?

क्लेआँत : तपाईं रीस पटक्कै नदेखाउनु होला। यदि उ मेल-मिलापको कुरा गर्छ भने, सुन्नु पर्छ।

श्री ल्वायाल : नमस्कार महाशय! ईश्वरले उसको क्षति गरुन् जो तपाईंलाई तंग

गर्न चाहन्छन् अनि म चाहन्छु उनले तपाईंको सहायता गरुन्।

**ओरगों** : (क्लेआँतसित) यस मीठो प्रारम्भले मेरो अन्दाजलाई सही प्रमाण गर्छ, अनि यसबाट मेल-मिलापको सम्भावना देखिन्छ।

**श्री ल्वायाल** : तपाईंको पूरै परिवार मलाई राम्रो लाग्यो अनि तपाईंको पिताज्यूको म एक समय नोकर थिएँ।

**ओरगों** : महाशय, म लज्जित छु अनि क्षमा चाहन्छु; म तपाईंलाई चिन्दिनँ अनि तपाईंको नाम पनि जान्दिनँ।

**श्री ल्वायाल** : मेरो नाम ल्वायाल हो; नोरमण्डीमा बस्छु, अनि मानिसले ईर्ष्या गरे पनि म पेशकार हूँ। भगवानको कृपाले चालिस वर्षदेखि म यो काम गरिरहेको छु, अनि महाशय तपाईंको आज्ञा भए म तपाईंलाई एक आदेशको सूचना दिउँ, जो तपाईंको विरुद्ध जारी गरिएको छ...।

**ओरगों** : के? तपाईं यहाँ आउनु भएको...?

**श्री ल्वायाल** : महाशय, आवेशमा नआउनु होस्, मात्र एक समन हो, एक आदेश कि तपाईं र तपाईंका मानिसले यस घर खाली गरि दिउन्। आफ्नो सामान हटाउन्, अनि अरुको निम्ति जगह बनाउन्। ल, ढिलो नगर्नुहोस, न बहाना नै...?

**ओरगों** : म यहाँबाट निक्लूँ?

**श्री ल्वायाल** : हो महाशय, यो घर जस्तो कि तपाईं जान्नु हुन्छ, अब निर्विवाद रूपले श्री तारतूफको हो। एक कण्ट्रयाक्ट अनुसार, जो मैले ल्याएको छु, अब उसो उहाँ तपाईंको सम्पतिको मालिक, सर्वेसर्वा हुनुहुन्छ। कागज पत्र एकदम ठीक छ, अनि यस विषयमा उजूर गर्ने कुनै उपाय छैन।

**दामी** : (ल्वायालसित) वास्तवमा यो ठूलो दुस्साहस हो अनि म यसको प्रशंसा गर्छु।

**श्री ल्वायाल** : महाशय, मलाई तपाईंसित कुनै मतलब छैन, काम यहाँ महाशयसित छ, जो औचित्य जान्नु हुन्छ र असल हुनुहुन्छ। समझदार मानिसले आफ्नो कर्त्तव्य राम्ररी बुझ्नु हुन्छ, अनि न्याय उहाँको विरोधमा जाउन्, त्यो चाहनु हुन्न।

**ओरगों** : तर...।

**श्री ल्वायाल** : हो महाशय, म जान्दछु तपाईं दस लाखको लागि विद्रोह गर्नु हुन्न अनि एक ईमानदार व्यक्तिले झैं मलाई आफ्नो कर्तव्य पालन गर्नदिनु हुनेछ, जुन मलाई दिएको छ।

**दामी** : हुनसक्छ पेशकार साहब कि डण्ठा तपाईंको कालो कपड़ामा नै पर्ला।

श्री ल्वायाल : महाशय, यसो गर्नुहोस् कि तपाईंको छोरा चुप लागून् वा यहाँबाट जाउन्। मैले विवश भएर लेख्नु पर्ला र तपाईंको नाम मेरो रिपोर्टमा आउला।

दोरिन : (स्वयम्) श्री ल्वायाल साहब त साह्रै 'बेल्वायाल'[1] रहेछन्।

श्री ल्वायाल : सबै असल व्यक्तिको निम्ति मेरो मनमा सम्मान छ, मैले यो काम तपाईंको भलाई र खुशीकोलागि गरेको हूँ, महाशय। हुनसक्छ अरु कोही भए तपाईंको निम्ति यत्रो सम्मान गरिन्दैन्थ्यो, अनि त्यसले सायद यो भन्दा अझ नरम भएर व्यवहार गर्थ्यो।

ओरगों : यो भन्दा नराम्रो अरु के होला कि आफ्नो घर छोड़ेर जाइहाल भनी कुनै मानिसलाई हुकुम होस्।

श्री ल्वायाल : महाशय, तपाईंलाई समय दिया जाँदैछ, अनि यस आदेशको साथ गरिने कार्यवाही भोलीसम्म स्थगित राखिन्छ। म रात मात्र बिताउन यहाँ आउने छु, आफ्ना दसजना मानिसलाई साथ लिएर। कुनै झै-झगड़ा वा हल्ला हुनु हुँदैन। नियम-कानून अनुसार, तपाईंले दया गरेर मलाई चाबी दिनुहोला। तपाईंको आराममा बाधा नपरोस्, त्यसको ध्यान राख्नेछु, अनि यस्तो कुनै नहुनु पर्ने कुरा हुन दिने छुइनँ। तर भोली सानो भन्दा सानो भाँड़ा हटाउन तपाई तैयार रहनु पर्छ। मेरो मानिसले तपाईंलाई सहायता गर्नेछन्। म सझिन्छु, यो भन्दा राम्रो व्यवहार हुनसक्तैन अनि मेरो प्रार्थना छ महाशय, जसरी म तपाईंसित ससम्मान व्यवहार गरिरहेको छु, त्यस्तै तपाई पनि मसित व्यवहार गर्नुहोला, अनि आदेशानुसार कार्यवाही गर्नुमा बाधा नदिनु होला।

ओरगों : (अलग्गै) त्यसको मुखमा एक मुड़की दिएर सन्तोष पाउने भए, म हार्दिक खुशीसाथ, अहिले नै आफूसित बाँचेका ती सयवटा सुन्दर सूनको 'लूई'[2] दिने थिएँ।

क्लेआँत : (ओरगोंसित विस्तारै) छोड़नुहोस्, घटनालाई नबिगार्नू होस्।

दामी : म यस्तो आश्चर्यजनक दुस्साहस नसहने भएँ। मेरो हात चिलाउँदै छ।

दोरिन : साँच्चै ल्वायाल साहब, तपाईंको यति राम्रो ढाडमा दुई-चार डण्ठा परे नराम्रो नहोला।

---

1. (यहाँ 'ल्वायाल' शब्द लिएर व्यंग गरिएकाके छ। नाम त ल्वायाल अर्थात् 'ईमानदार' छ 'बे-ल्वायाल' अर्थात् 'बेईमान')
2. (फ्रांसेली रुपियाँ, जसको मूल्य सुनको 20 फ्रांक बराबर हुन्छ।)

**श्री ल्वायाल** : यी फोहोर कुराको निम्ति मज्जासँग दण्ड हुनसक्छ, नानी। नारीमा पनि कानून प्रयोग हुन्छ।

**क्लेआँत** : यो सब छोड्नुहोस् महाशय, धेरै भयो। कृपा गरेर कागज हामीलाई दिनुहोस्।

**श्री ल्वायाल** : फेरि भटौंला। ईश्वरले तपाईंहरूलाई खुशी राखुन्।

**ओरगों** : तँमाथि र तँलाई पठाउनेमाथि बज्र परोस्।

## दृश्य-5

(ओरगों, क्लेआँत, मारिआन, एलमिर, श्रीमती पेरनेल, दोरिन, दामी)

**ओरगों** : देख्नु भयो त आमा तपाईंले, म साँचो भन्दै थिएँ कि थिइनँ। अरु यस नोटिसबाट बुझ्नु हुन्छ। अब त तपाईं पत्याउनु हुन्छ कि त्यसले गद्दारी गरेकै हो?

**श्रीमती पेरनेल** : म त अचम्भित छु, मानुं म आकाशबाट झरेकी छु।

**दोरिन** : तपाईंलाई अफशोस नहुनु पर्ने। यो तपाईंको भूल हो कि तपाईं त्यसको शिकायत गर्नु हुँदैछ। यसरी त्यसको धार्मिक उद्देश्य सिद्ध भएको छ। आफ्नो छिमेकीप्रति त्यसको प्रेममा नै जम्मै सद्गुणको पराकाष्ठा छ। त्यो राम्ररी जान्दछ, सम्पतिले मानिसलाई बिगार्छ, अनि शुद्ध दयाको बशीभूत भएर त्यसले तपाईंको सर्वस्वहरण गर्न चाह्यो, जुन तपाईंको मुक्तिमा बाधक हुनसक्छ।

**ओरगों** : (दोरिनलाई) चुप लाग्। तैंले घरी-घरी यी कुराहरू भनिरहन पर्दैन।

**क्लेआँत** : हेरौं, तपाईंले कुन चैं उपायको सहारा लिनु पर्ने थियो?

**एलमिर** : जानुहोस्, त्यो बेईमानको दुस्साहसको भण्डाफोर गर्नु होस्। त्यसको यस कार्यवाहीले उत्तराधिकार-पत्रको वैधानिकता नष्ट गर्न सक्छ। त्यसको यस कार्यवाही एक यस्तो कुकर्म प्रतीत हुनेछ कि त्यसलाई त्यो सफलता मिल्ने छैन जुन हामी आशंका गर्छौं।

## दृश्य-6

(वालेर, ओरगों, क्लेआँत, एलमिर, मारिआन आदि)

**वालेर** : मलाई दुःख छ महाशय, कि म तपाईंलाई कष्ट दिन आएको छु, तर असम्भावी संकटको आभासले म आफुलाई विवश पाउँछु। एकजना मित्रले, जोसित मेरो गहिरो मित्रता छ, अनि जसले जान्छ कि मलाई तपाईंसित कति मनोयोग हुनु पर्छ, मेरे निम्ति कष्ट सहेर, राज्यको मामलाहरूमा हुने गोपनीयताको अवहेलना गररे अहिले

भर्खर मलाई एक गुप्त सूचना पठाएको छ, जस अनुसार तपाईले अहिले नै भाग्नु उचित छ। त्यस दुष्टले, जो धेरै दिनदेखि तपाईलाई लट्ठाउनमा सफल रह्यो, एक घंटाअघि गएर राजासित तपाईंको नालिश गर्‍यो, अनि तपाईंको विरुद्ध गरिएको अभियोगहरूको सिलसिलामा त्यसले एउटा डब्बा पनि दिएको छ, जो एकजना राजद्रोहीको हो। त्यसको अनुसार, त्यो राजद्रोहीको अपराधपूर्ण रहस्य तपाईले एकजना नागरिकको कर्तव्यको अवहेलना गरेर गुप्त राख्नु भएको थियो। मलाई थाह छैन, तफसीलमा तपाईंको विरुद्ध कुन-कुन दोष लगाएको छ, तर तपाईंको विरुद्धमा एउटा आदेश जारी गरिएको छ, अनि आदेशको सम्यक् पालनको लागि तारतूफलाई नै भनिएको छ कि त्यो त्यस अधिकारीको साथ जाओस् जो तपाईंलाई पक्रन आउने छन्।

**क्लेआँत** : लौ, त्यसको दाबीमाथि अब शक्ति पनि जुट्यो, अनि यसै उपायले त्यस बेईमानले आफूलाई तपाईंको सम्पतिको मालिक बनाउन चाहन्छ।

**ओरगों** : मान्नु पर्छ, यो मान्छे एउटा दुष्ट पशु हो।

**वालेर** : अलिकति पनि ढिलो गर्नु तपाईंको निम्ति घातक हुनसक्छ। तपाईलाई लैजान ढोकामा मेरो बग्घी छ, अनि यो हजार 'लूई' जो मैले तपाईंको निम्ति ल्याएको छु। हामी अलिकति पनि समय नष्ट नगरौं, तीर चलिसकेको छ, अनि यो सब आघातबाट नै भाग्दा जोगिनु पर्छ। म तपाईंलाई कुनै सुरक्षित स्थानमा लैजान चाहन्छु, अनि चाहन्छु कि पलायनको अन्तसम्म म तपाईंको साथ रहूँ।

**ओरगों** : उफ्! यस कृतज्ञ बनाउने शुभचिन्ताको निम्ति म तपाईंको कति ऋणी छु? तपाईंप्रति कृतज्ञता जनाउन अरु कुनै अवसर हुनु पर्छ, अनि म भगवानसित प्रार्थना गर्छु, उनले मलाई यति दया गरुन् कि एकदिन म तपाईंको यस उदार सेवाको आभार स्वीकार गर्न सकूँ। लौ छुटौं, अनि तपाईहरू पनि सावधान रहनु होला...।

**क्लेआँत** : चाँड़े जानुहोस्, दाई! जे गर्नु छ, हामी तपाईंको बारेमा सोचौंला।

## दृश्य-7

(सार्जेण्ट, तारतूफ, वालेर, ओरगों, एलमिर, मारिआन आदि)

**तारतूफ** : (ओरगोंलाई रोक्दै) अति उत्तम, महाशय! यति चाँड़ै नभाग्नुहोस्, तपाईंलाई आफ्नो आवासको निम्ति धेरै टाढा जानु पर्दैन। राजाको तरफबाट तपाईं बन्दी बनाइनु भएको छ।

**ओरगों** : बेईमान, अन्तिम समयको निम्ति मेरोलागि यो तीर राखेको थिइस्। नीच, मेरोलागि तेरो यो अन्तिम वार होला। यो तेरो सबै दुष्कर्मको परकाष्ठा हो।

**तारतूफ** : तपाईंको गालीले मलाई निराश पार्न सक्तैन। मैले ईश्वरको निम्ति सबै कुरा सहन सिकेको छु।

**क्लेआँत** : मान्छु, तपाईंको ठूलो संयम छ।

**दामी** : यो नीच! ईश्वरसित खेलवाड गर्ने कस्तो दुस्साहस गर्छ?

**तारतूफ** : तपाईंका यी उत्तेजनाले मलाई विचलित पार्न सक्तैन, अनि म आफ्नो कर्तव्य पालन गर्न छोड़ी अरु केही सोच्दिनँ।

**मारिआन** : यसको लागि त तपाईं ठूलो सम्मानको दावा गर्नुहुन्छ, अनि यो तपाईंको लागि ठूलो इमान्दारीको काम होला।

**तारतूफ** : जुन शक्तिले मलाई यहाँ पठाएको छ, उसद्वारा प्रेरित काम सम्मानयुक्त अरु हुनै सक्तैन।

**ओरगों** : तर कृतघ्न, के तँलाई थाह छ मेरो दयालु हातले तेरो दरिद्रतादेखि तँलाई बाहिर निकालेको थियो?

**तारतूफ** : हो, मलाई थाह छ मैले कस्तो सहायता पाएँ, तर राजाको भलो चिताउनु मेरो पहिलो कर्तव्य हो। यस पवित्र कर्तव्यको उचित उत्कटताले मेरो हृदयको जम्मै कृतघ्नता नष्ट गर्छ। अनि यस्तो दृढ़ बन्धनको निम्ति मित्र, स्वास्नी, आमा-बाबु अनि उनिहरूको साथ आफूलाई पनि म समर्पण गर्न सक्छु।

**एलमिर** : धोखेबाज!

**दोरिन** : कति बेईमानीसाथ यसले ती चीजहरूलाई ढाल बनाउन सक्दो रहेछ, जसलाई हामी श्रद्धा गर्छौं।

**क्लेआँत** : जुन उत्साहले तपाईं प्रेरित हुनुहुन्छ अनि जसको स्वाँग गर्नु हुँदैछ, त्यो त्यति नै पूर्ण छ जति तपाई दाबी गर्नुहुन्छ, त कुन कारणले यो तब प्रकटभयो जब तपाईंलाई यहाँले आफ्नी स्वास्नीसित प्रेम याचना गर्दै गरेको पक्रनु भयो? किन तपाईंले यहाँको विरुद्ध आरोप लगाउने चेष्टा गर्नु भयो, जब यहाँले आफ्नो इज्जतको लागि तपाईंलाई घरबाट निकाल्न मजबूर हुनु भयो? म भन्दिनँ कि यहाँले आफ्नो जम्मै सम्पति तपाईंलाई दिनुभयो, त्यसले तपाई कर्तव्य-विमुख हुनुहुने थियो, तर जब आज तपाईंले यहाँलाई अपराधी बनाउनु थियो, यहाँको कुनै पनि चीज लिन स्वीकार कसरी गर्नु भयो?

**तारतूफ** : (सार्जेण्टसित) महाशय, मलाई यस किचकिचबाट बचाउनुहोस्, र तपाईंलाई जो आदेश भएको त्यसको पालन गर्नुहोस्।

**सार्जेण्ट** : हो निस्सन्देह, आदेश पालन गर्नुमा ढिलो हुँदैछ। तपाईंको श्रीमुखले राम्रो याद गरायो, अनि आदेश कार्यान्वयन गर्न तपाईं मसित जेल हिंड्नुहोस्, जुन तपाईंलाई आवासको रूपमा दिइने छ।

**तारतूफ** : को, महाशय म?

**सार्जेण्ट** : हो, तँ?

**तारतूफ** : जेल, तर किन?

**सार्जेण्ट** : मैले तँलाई कैफियत दिनु छैन। (ओरगोंसित) उत्तेजना छोड़ेर स्वस्थ हुनुहोस्, महाशय! हामी एकजना यस्तो राजाको राज्यमा बस्छौं; जो धोखेबाजहरूको शत्रु हुनुहुन्छ; जसको आँखा मानिसको हृदय सम्मपुग्छ अनि जसलाई ढोंगीको जम्मै धूर्तताले पनि धोखा दिन सक्तैन। उनको बुद्धि, जसलाई सूक्ष्म विवेक प्राप्त छ, हरेक कुरालाई उचित दृष्टिले हेर्छ। उहाँसित अतिरंजनाले काम गर्दैन, अनि उहाँको निर्णयमा कुनै प्रकारको अतिशयता हुँदैन। असल मानिसलाई उहाँ अमर सम्मान दिनु हुन्छ तर उहाँको यस उत्साहमा कुनै अन्धा बुद्धिले काम गर्दैन। साँचाहरूको निम्ति उहाँको हृदयमा जो सम्मान छ, त्यस कारण, उहाँका आँखाहरू धोखेबाजहरूका त्यस कृत्यहरूप्रति बन्द रहँदैनन्, जसलाई घृणा गरिन्छ। यस मानिसले पनि उहाँलाई झुक्याउन सक्दैन्थ्यो। हामी के देख्छौं भने यो भन्दा पनि सूक्ष्म जालहरूबाट उहाँले आफूलाई बचाउन सक्नु हुन्छ। आफ्नो बुद्धिले उहाँले यसको मनका ती जम्मै नीचताको पर्दा च्यातिदियो। यसले तपाईंको विरुद्ध आरोप लगाउन आएको थियो, तर आफैलाई फँसायो अनि सर्वोच्च न्यायको उचित विधानद्वारा यसले आफूलाई राजा समक्ष एकजना यस्तो कुख्यात धूर्त सिद्ध गरेको छ, जसलाई राजाले अर्कै नामले चिन्नु हुन्थ्यो। यो कालो कर्महरूको एउटा लामो शृंखला हो, जसको थुप्रै किताप बनाउन सकिन्छ। एक शब्दमा, तपाईंप्रति यसको कृतघ्नता र बेईमानीले राजामा घृणा उत्पन्न भयो। यसको अरु कुकर्महरूसित यो अपराध पनि जोड़ियो। यसको कुकर्म अन्तसम्म हेर्नलाई नै मलाई यससित यहाँ यसकारण पठाइएको छ कि तपाईंलाई पूर्ण सन्तोष मिलोस्। हो, उहाँले यो पनि चाहनु भएको छ कि म ती कागजपत्रहरू, जसको मदतले यस बेइमानले आफूलाई मालिक बताउँछ, तपाईंलाई जिम्मा लगाइदिउँ। आफ्नो सर्वोच्च अधिकारले उहाँले उत्तराधिकार-पत्रका

सबै शर्तहरू खारिज गरिदिनु भएको छ, जस अनुसार तपाईंले आफ्नो जम्मै सम्पति यसलाई दिनु भएको थियो। अन्तमा, तपाईंको मित्रको पलायनको निम्ति तपाईंमाथि जुन गुप्त अपराध आरोपित थियो, त्यो पनि क्षमा गरिएको छ। उहाँले तपाईंको त्यो उत्साहको पुरस्कार दिनु भएको छ जुन तपाईंले उहाँको अधिकारको लागि लड्नु भन्दा पहिले देखाउनु भएको थियो। यो बताउनलाई भलै हामी न सोचौं, तर पनि उहाँको हृदयले राम्रो कामको पुरस्कार दिन जान्दछ, अनि यो पनि उहाँको हातबाट सद्‌गुणहरूलाई क्षति पुग्ने छैन, अनि उहाँ नराम्रो भन्दा राम्रोलाई बेसी याद राख्नु हुन्छ।

**दोरिन** : ईश्वरलाई धन्यवाद छ।

**श्रीमती पेरनेल** : बल्ल ज्यान फर्कियो।

**एलमिर** : क्या अनुकूल सफलता आएको छ!

**मारिआन** : कसले यो भन्न सक्थ्यो?

**ओरगों** : (तारतूफलाई) लौ, बेइमान चाखिस् त।

**क्लेआँत** : अरे दाई, चुप लाग्नुहोस् अनि अशोभनीयतामा न ओर्लनु होस्। यस अभागीलाई त्यसकै दुर्भाग्यमा छोड्नु होस्, अनि यसलाई अभिभूत गरेर पश्चातापलाई अझै नबढ़ाउनु होस्। यसको हृदय सद्‌गुणहरूप्रति फेरि फर्कियोस् बरु यसको कामना गर्नुहोस्। दुर्गुणलाई यसले घृणा गरोस् र आफ्नो जीवनलाई सुधारोस् अनि यसप्रकार, राजाको न्यायलाई नरम बनाउन सकोस्। जहाँसम्म राजाको कृपाको प्रश्न छ, तपाईं यसको निम्ति उहाँकहाँ गएर घुँडा टेक्नुहोस्, अनि यस्ता मधुर व्यवहारकोलागि उहाँलाई धन्यवाद टक्र्याउनुहोस्।

**ओरगों** : हो, यो ठीक हो। अहिल्यै गएर उहाँको चरणमा परौं र उहाँले हामीमाथि जुन कृपा देखाउनु भएको छ, त्यसको निम्ति उहाँको गुण बखानौं। फेरि यस पहिलो कर्तव्य शेष गरेर, मैले एउटा अर्को कर्त्तव्य पनि पालन गर्ने उपक्रम गर्नुपर्छ, एक मधुर विवाहद्वारा वालेर जस्तो उदार र साँचो प्रेमीको प्रेमलाई पुरस्कृत गर्नुपर्छ।

---

# पहिलो अंक

## दृश्य-1

स्थान-पेरिस, श्री जूर्देको घर

(संगीत-शिक्षक, नृत्य-शिक्षक, वादक, वाद्य-यन्त्र, नर्तक)

(पर्दा उठेपछि थुप्रै वाद्य-यन्त्र एकत्र देखिन्छन्। रंगशालाको बीच संगीत-शिक्षकको एकजना शिष्य, बुर्ज्वाको माग अनुसार, प्रेयसी-गीतको एउटा बोल बनाउँदै गरेको देखिन्छ।)

**संगीत-शिक्षक** : (वादकहरूलाई) आउनुहोस्, यस हलमा आउनुहोस् र उहाँ नआइञ्जेलसम्म आराम गर्नुहोस्।

**नृत्य-शिक्षक** : (नर्तकहरूसित) अनि तपाईंहरू पनि यता आउनुहोस्।

**संगीत-शिक्षक** : (आफ्नो शिष्यलाई) कसो, तैयार भयो?

**शिष्य** : हो।

**संगीत-शिक्षक** : हेरुँ...। कति राम्रो बनिएको छ?

**नृत्य-शिक्षक** : के कुनै नयाँ चीज छ?

**संगीत-शिक्षक** : हो, प्रेयसी-गीतको एउटा बोल मैले यहीं तैयार गराएको छु, महाशय उठिञ्जेलसम्म।

**नृत्य-शिक्षक** : म हेर्न सक्छु?

**संगीत-शिक्षक** : उहाँ आएपछि यसलाई तपाईंले कथोपकथन साथै सुन्नु हुनेछ। उहाँ ढिलो गर्नु हुन्न।

**नृत्य-शिक्षक** : हाम्रो इलम अब साधारण रहेन।

**संगीत-शिक्षक** : सांचो हो। हामी दुवैले पाएका छौं—हामीलाई चाहिएकै मानिस। उच्च र संगीन विचारले पूर्ण श्री जूर्दे नै हाम्रा आयको स्रोत हुन्। तपाईंको नृत्य विद्या र मेरो संगीतलाई यस्तै सौभाग्य मिलोस्; सबै यहाँ जस्ता हुन्।

**नृत्य-शिक्षक** : होइन, ठीक उहाँ जस्तो होइन। म त चाहन्छु हामीले सिकाउँदै गरेको विद्यालाई उहाँले अझै बुझून्।

**संगीत-शिक्षक** : यो सांचो हो, उहाँले यी विद्याहरूलाई उचित ढंगले बुझ्नु हुन्न तर

यसको निम्ति धेरै पैसा दिनु हुन्छ, अनि हिजोआज हाम्रो कलालाई अरु चीज भन्दा पैसाको साह्रै दरकार छ।

**नृत्य-शिक्षक** : तपाईंलाई स्पष्ट भनूँ, मलाई त यश पाउने पनि इच्छा हुन्छ। प्रशंसाले म प्रभावित हुन्छु। जहाँसम्म ललित कलाहरूको प्रश्न छ, मूर्खहरूलाई आफ्नो कला-चातुरी देखाउनु पनि एक अनिष्ट काम हो साथै हाम्रो कला-कृतिलाई एउटा मूर्खको बर्बरताले अपवित्र नगरोस्। तपाईं यस कुरालाई अस्वीकार गर्न सक्नुहुन्न कि एक यस्तो मानिसको निम्ति काम गर्नमा आनन्द लाग्छ, जसले कलाको सुक्ष्मतालाई बुझोस्, जसले कुनै कला, कला-कृतिको सौन्दर्यको स्वागत गर्न जानोस् अनि जसले आफ्नो मधुर सम्मतिले, तपाईंको कला-कृतिको लागि तपाईंलाई आनन्दित गरोस्। हो, आफ्ने कृतिको सबभन्दा प्रिय पुरस्कार यो हो कि मानिसले उसलाई चिनुन्, अनि उसको प्रशंसा गरेर तपाईंलाई सम्मानित गरोस्। म सम्झन्छु हाम्रो श्रमको यो भन्दा राम्रो कुनै पुरस्कार छैन। बुद्धिपूर्ण प्रशंसामा क्या माधुर्य छ?

**संगीत-शिक्षक** : म तपाईंसित एकमत छु, अनि म पनि प्रशंसा मन पराउँछु। निश्चय पनि तपाईं जुन प्रशंसाको कुरा गर्नु हुँदैछ त्यो भन्दा बढ़ी आनन्द दिने वस्तु अरु छैन, तर यस प्रशंसाले त जीवन चल्दैन। सामान्य प्रशंसाले मनुष्यलाई सुखी बनाउन सक्दैन, त्योसित कुनै ठोस चीज पनि हुनुपर्छ, अनि प्रशंसाको सबभन्दा उत्तम उपाय हो—मानिसले तपाईंलाई नगद नारायण पनि दिउन्। वास्तवमा यिनी मन्दबुद्धिका मानिस हुन् जसले सबै विषयमा बेमतलका कुरा गर्छन् अनि यथाभावी प्रशंसा गरिहिंड़छन् तर यिनको पैसाले आफ्नो बुद्धिको समझदारी लाई सच्चाई दिन्छ। रुपियाँको रूपमा यिनको प्रशंसा हामीले पाउँछौं, अनि यो मूर्ख बुर्ज्वा, जस्तो कि तपाईं देख्नु हुन्छ, हाम्रो निम्ति यो बुद्धिमान सामन्त भन्दा राम्रो छ, जसले यहाँ हाम्रो प्रवेश गराएको छ।

**नृत्य-शिक्षक** : तपाईं जे भन्नु हुँदैछ त्यसमा केही सत्यता छ ; तर म देख्छु, तपाईं पैसामा अलिक धेरै जोड़ गर्नुहुन्छ ; अनि स्वार्थ, कुनै इमान्दार व्यक्तिले त्यस सानो वस्तुप्रति चासो राख्नु हुँदैन।

**संगीत-शिक्षक** : तर तपाईं त्यस व्यक्तिले दिएको पैसा त खुबै उत्साहले लिनुहुन्छ त!

**नृत्य-शिक्षक** : निश्चय नै, तर म यसलाई आफ्नो पूर्ण खुशी मान्दिनँ अनि म चाहन्छु पैसाको साथै यिनको रुचि पनि परिष्कृत हुँदै गर्थ्यो।

**संगीत-शिक्षक :** म पनि यही चाहन्छु, यसै कारणले त हामी दुवै यथाशक्ति काम गरिहेका छौं। तर, हर हालतमा, यिनले गर्दा नै संसारमा प्रसिद्ध हुने अवसर पाइरहेको छौं। यिनले अरुको निम्ति पैसा खर्च गर्नेछ अनि अरुले यसको ठाउँमा कलाको प्रशंसा गर्नेछन्।

**नृत्य-शिक्षक :** लौ, उनी आउँदैछन्।

## दृश्य-2

(श्री जूर्दे सुत्ने कपड़ा र राति लगाउने टोपी लगाएर, संगीत-शिक्षक, नृत्य-शिक्षक, संगीत-शिक्षकको शिष्य, एकजना गायिका, दुइजना गायक, दुइजना अनुचर।)

**श्री जूर्दे :** भन्नुहोस् महाशय, के कुरा छ? तपाईहरू आफ्नो कला देखाउनु हुन्छ?

**नृत्य शिक्षक :** कुनचैं कला?

**श्री जूर्दे :** अरे त्यो...के भन्छ त्यसलाई? त्यो, तपाईंको नाच र गीतको 'प्राक्कथन' अथवा 'कथोपकथन'।

**नृत्य-शिक्षक :** ए...!

**संगीत-शिक्षक :** तपाईं हामीलाई तयार नै देख्नु हुँदैछ।

**श्री जूर्दे :** मैले तपाईंहरूलाई केही प्रतीक्षा गराएँ, किनभने आज म उच्च दर्जाका कुलीन मानिस झैं कपडत्रा लगाउनेछु, मेरो दर्जीले मेरोलागि रेशमी मोजा पठाएको छ, जुन कहिल्यै लगाउने सोचेकै थिइनँ।

**संगीत-शिक्षक :** हामी त यहाँ तपाईंको सुविधाको प्रतीक्षा गरिरहेका थियौं।

**श्री जूर्दे :** म तपाई दुवैसित प्रार्थना गर्दछु, तपाईंहरू त्यसबेलासम्म नजानु होला जबसम्म मेरो कपड़ा आइ पुग्दैन, जुन पहिरनमा तपाईंहरूले मलाई हेर्न सक्नु होला।

**नृत्य-शिक्षक :** तपाईंले चाहनु भए जस्तै, हामी गर्नेछौं।

**संगीत-शिक्षक :** यसमा कुनै शंका छ?

**श्री जूर्दे :** मैले यस 'एँदियेन'-को कपड़ा बनाउन लगाएको छु।

**नृत्य-शिक्षक :** अति सुन्दर छ।

**श्री जूर्दे :** मेरो दर्जीले भनेको छ—उच्च दर्जाका मानिस बिहान यही कपड़ामा हुन्छन्।

**संगीत-शिक्षक :** यसले तपाईंलाई खुबै सुहाउनेछ।

**श्री जूर्दे :** मेरा यी दुई नोकर कता गए?

**पहिलो अनुचर :** हुकुम होस् मालिक!

**श्री जूर्दे :** केही होइन। म हेर्न चाहन्थें तिमीहरू ठीकसित सुन्दैछौ कि सुन्दैनौ।

(संगीत र नृत्य शिक्षकसित) मेरो नोकरहरूको विषयमा तपाईहरूको के विचार छ?

**संगीत-निर्देशक:** उत्तम नै छ।

**श्री जूर्दे :** (आफ्नो 'गाउन' खोलेर भित्रको 'ब्रीचेज' जो रातो मलमलले बनेको छ। भित्रपट्टि हरियो रंगको मखमली ज्याकेट पनि लगाएको छ) बिहान व्यायाम गर्न यो लगाउँछु।

**संगीत-शिक्षक :** बड़ा शानदार रहेछ।

**श्री जूर्दे :** ऐ नोकर!

**पहिलो अनुचर:** मालिक!

**श्री जूर्दे :** ऐ दोस्रो नोकर!

**दोस्रो अनुचर :** हजूर मालिक!

**श्री जूर्दे :** मेरो गाउन समात्। के यसरी म राम्रो देखिन्छु?

**नृत्य-शिक्षक :** क्या सुन्दर? यो भन्दा राम्रो त हुनै सक्दैन।

**श्री जूर्दे :** खोई तपाईहरूको काम हेरूँ।

**संगीत-शिक्षक :** पहिले म तपाईंलाई एउटा बोल सुनाउन चाहन्छु, यसले (आफ्नो शिष्यतिर संकेत गरेर) अहिले त्यो प्रेयसी-गीतको लागि तयार गरेको छ, जुन तपाईंले मसित माग्नु भएको थियो। मेरो शिष्यहरूमा यो एकजना हो, जसमा यस्तो चीजको लागि प्रशंसनीय प्रतिभा छ।

**श्री जूर्दे :** हो, तर यसलाई एक शिष्यबाट तयार नगराउनु पर्ने थियो, भएन यस कामको निम्ति तपाईं पनि उपयुक्त हुनुहुन्न।

**संगीत-शिक्षक :** शिष्य शब्दले तपाईंले अपमान बोध नगर्नु पर्ने, महाशय। यस्तो शिष्यले ठूल्ठूला शिक्षक जति नै जान्दछ अनि यथासम्भव बोल राम्ररी तयार गरिएको छ। तपाईं सुन्नु मात्र होस्।

**श्री जूर्दे :** (अनुचरहरूलाई) मेरो गाउन् ल्या, जसले म राम्ररी सुन्न सकूँ। पर्ख, म ठान्दछु गाउन् बिना नै राम्रो देखिएला। होइन, ले यही नै राम्रो रहला।

**गायिका :** (गाउँदै) *जहिलेदेखि तिम्रा सुन्दर आँखाले*
*मलाई तिम्रो निष्ठुरताको शिकार बनाएको छ,*
*त्यस क्षणदेखि रात-दिन तड़पिन्छु,*
*अनि दर्द जरै-सम्म पुगेको छ।*
*हे सुन्दरी, आफ्नो प्रेमीसित यस्तो व्यवहार छ,*
*शत्रुसित तिम्रो व्यवहार झन् कस्तो होला?*

**श्री जूर्दे :** यो गीत मलाई फूर्तिहीन लाग्छ; जसले निन्द्रा लागे झैं हुन्छ। तपाईंले यसलाई कतै जीवन्त बनाउन सक्नु भए राम्रो हुन्थ्यो।

संगीत-शिक्षक : बोल शब्दानुसार नै हुनुपर्छ, महाशय।
श्री जूर्दे : केही दिन अघि मलाई एउटा धेरै राम्रो गीत सिकाइएको थियो। पर्खनुहोस्...त्यो के भन्छ?
नृत्य-शिक्षक : मलाई थाह छैन।
श्री जूर्दे : त्यसमा भेड़ा छ।
नृत्य-शिक्षक : भेड़ा?
श्री जूर्दे : ओह! हो। (उ गाउँछ)

*'सोचेथें जानतों सुन्दरी मात्र होइन सोझी पनि छ।*
*सोचेथें जानतों भेड़ा भन्दा सोझी छ।*
*तर हाय! त्यो त सौपल्ट, भनौं हजारपल्ट*
*जंगलकी शेरनी भन्दा पनि बढ़ी हिंस्रक छ।'*

संगीत-शिक्षक : अति राम्रो छ।
नृत्य-शिक्षक : अनि तपाईं यसलाई राम्ररी गाउनु पनि हुन्छ।
श्री जूर्दे : त्यो पनि संगीत नसिकीकनै।
संगीत-शिक्षक : तपाईंले नृत्य सिके जस्तै यो पनि सिक्नु पर्ने हो, महाशय। यी दुवै कलामा घनिष्ठ सम्पर्क छ।
नृत्य-शिक्षक : अनि यसले मनुष्यको बुद्धिलाई, सौन्दर्यप्रति उन्मुख गराउँछ।
श्री जूर्दे : उच्च दर्जाका मानिसले के संगीत सिक्छन्?
संगीत-शिक्षक : निःसन्देह, महाशय!
श्री जूर्दे : उसो भए म यो निश्चय नै सिक्छु। तर म जान्दिनँ कुन समय दिउँ, कारण शस्त्र-शिक्षक बाहेक, मैले एकजना दर्शन-शिक्षक पनि राखेको छु, जसले आज बिहानदेखि शुरु गर्नेछन्।
संगीत-शिक्षक : दर्शन पनि केही हो? तर संगीत, महाशय, संगीत...।
नृत्य-शिक्षक : संगीत र नृत्य...। संगीत र नृत्य नै सब थोक हुन्।
संगीत-शिक्षक : एउटा राज्यमा संगीत भन्दा उपयोगी कुनै बस्तु हुँदैन।
नृत्य-शिक्षक : मनुष्यको नृत्य भन्दा आवश्यक अरू केही छैन।
संगीत-शिक्षक : संगीत बिना कुनै राज्य टिक्न सक्तैन।
नृत्य-शिक्षक : नृत्य बिना मान्छेले केही गर्न जान्दैन।
संगीत-शिक्षक : सबै अव्यवस्था, संसारका सबै युद्ध मात्र यसकारण हुन्छ किनभने हामी संगीत सिक्दैनौं।
नृत्य-शिक्षक : मनुष्यका जम्मै दुर्भाग्य, ती सबै बिनाशकारी दुर्घटनाहरू जसले इतिहास भरिएका छन्, राजनीतिक भूलहरू सैनिक नायकहरूको अभाव,यी सब मान्छेले नाच्न नजानेकाले नै भएका हुन्।
श्री जूर्दे : यो कसरी?

**संगीत-शिक्षक** : हामी बीचमा एकता छैन भनेर नै युद्ध हुन्छ।

**श्री जूर्दे** : यो त सांचो हो।

**संगीत-शिक्षक** : अनि सबैले संगीत सिके के त्यसको सहाराले एकार्कासित सहमत हुँदैनथे अनि विश्व-शांति स्थापित हुने थिएन?

**श्री जूर्दे** : तपाईं ठीकै भन्नु हुँदैछ।

**नृत्य-शिक्षक** : कुनै मानिसले आफ्नो व्यवहारमा भूल गर्दा अर्थात् त्यो घरेलू व्यवहार होस् वा राज-काज होस्, वा फेरि सैन्य-संचालन, के हामी फलाना काममा भूल हुँदैछ भनी भन्दैनौं?

**श्री जूर्दे** : हो, हामी यसै भन्छौं।

**नृत्य-शिक्षक** : अनि, नृत्य-विद्यामा अज्ञानताको कारणले नै यसरी गलत कदम उठाइन्छन्।

**श्री जूर्दे** : ठीकै हो, तपाईंहरू दुवैले ठीक भन्नु हुँदैछ।

**नृत्य-शिक्षक** : यसरी तपाई नृत्य र संगीतको विशेषता र उपयोगिता बुझ्न सक्नुहुन्छ।

**श्री जूर्दे** : बल्ल अहिले बुझें।

**संगीत-शिक्षक** : के तपाईं हामी दुवैका वस्तुहरू हेर्न चाहनु हुन्छ?

**श्री जूर्दे** : हो।

**संगीत-शिक्षक** : मैले तपाईंलाई भनें, यो एउटा सानो भर्खरै गरेको प्रयास हो। यसमा यस्ता विविध भाव-भावनाहरू छन्, जुन संगीतद्वारा अभिव्यक्त हुनसक्छन्।

**श्री जूर्दे** : अति उत्तम।

**संगीत-शिक्षक** : अगाड़ी आउनुहोस्। (श्री जूर्देलाई) कल्पना गर्नुहोस्, यी सबै भेड़ी-गोठालाका पहिरनमा छन्।

**श्री जूर्दे** : सँधै भेड़ी-गोठालानै किन? हामी चारैतिर यही मात्र देख्छौं?

**नृत्य-शिक्षक** : मानिसलाई संगीतले बोलाउनु छ भने यथार्थताका लागि हामी चरणको कल्पना गर्छौं। संगीतमा सदा नै भेड़ी-गोठालासित चासो रहेको छ, अनि कथोपकथनमा, राजकुमार वा साहुले आफ्नो भावना गाउँदा कुनै स्वाभाविकता रहँदैन।

**श्री जूर्दे** : ठीक छ, ठीक छ, हेरौं।

## संगीतमा कथोपकथन

(एकजना गायिका र गायक)

**गायिका** : प्रेमको साम्राज्यमा
हृदय हजारौं चिन्ताहरूले व्याकुल रहन्छ।

भन्छन् हामी आन्दले तड़पिन्छौं र निश्वास लिन्छौं
तर जे भने पनि हाम्रो
स्वच्छन्दता भन्दा राम्रो कुनै वस्तु छैन।

**प्रथम गायक** : दुई हृदयहरूलाई एउटै इच्छामा बाँध्ने
कोमल भावनाहरूभन्दा मधुर केही छैन
प्रेमको अभिलाषाहरू बिना कोही सुखी हुन सक्तैन।
जीवनदेखि प्रेम जान साथ, उसको
आनन्दनै नष्ट भयो।

**दोस्रो गायक** : प्रेमको ऐनमा बाँधिनु राम्रो हुन्थ्यो
यदि प्रेममा विश्वास गर्न सकिन्थ्यो;
तर हाय! क्रूर निष्ठुरता!
विश्वासिलो प्रेमिका नै पाइन्दैन,
अनि यो अस्थिर र सम्मान-रहित जाति,
सँधैको निम्ति प्रेम त्याग गर्न सक्छ।

**प्रथम गायक** : प्रिय प्रेम!

**गायिका** : सुखद स्पष्टोक्ति!

**दोस्रो गायक** : धोखेबाज जाति!

**प्रथम गायक** : तिमी मेरोनिम्ति कति मूल्यवान छौ?

**गायिका** : तिमी मेरो हृदयको खुशी हौ।

**दोस्रो गायक** : तिमी मेरो निम्ति कति डरलाग्दी छौ?

**प्रथम गायक** : ओह! यस्तो भयंकर घृणासित कसले प्रेम गर्छ?

**गायिका** : तिमीलाई विश्वस्त प्रेमिका पनि देखाउन सकिन्छ।

**दोस्रो गायक** : हाय! त्यो कहाँ भेटिन सक्छे?

# दोस्रो अंक

## दृश्य-1

(श्री जूर्दे, संगीत-शिक्षक, नृत्य-शिक्षक)

**श्री जूर्दे** : कति कुशल छन् अनि यी कति उफ्रिन्छन् पनि?

**संगीत-शिक्षक** : यस नृत्य-संगीतबाट पाइए यसको प्रभाव अझै बढनेछ। हामीले तपाईंको लागि जुन 'ब्याले' (भाव-नृत्य) तयार गरेका छौं, त्यसमा तपाईंले अझै उत्तम वस्तु देख्नु हुनेछ।

**श्री जूर्दे** : यो साँझको लागि रहोस्। जुन व्यक्तिको निम्ति मैले यो तयार गराएको छु उसले यस घरमा भोजन गरेर मेरो सम्मान गर्नेछन्।

**नृत्य-शिक्षक** : सब तयार छ।

**संगीत-शिक्षक** : अनि महाशय, यो पर्याप्त छैन। तपाईं जस्तो उदार र सौन्दर्य-प्रेमीले हरेक बुधबार वा बिहीबार आफ्नो घरमा संगीतको आयोजन गर्नु पर्ने थियो।

**श्री जूर्दे** : के उच्च-दर्जाका मानिस यसै गर्छन्?

**संगीत-शिक्षक** : हो, महाशय।

**श्री जूर्दे** : म पनि गर्नेछु। ठीक होला नि?

**संगीत-शिक्षक** : यसमा कुनै सन्देह छैन। तपाईंलाई उच्च, मध्यम र निम्न स्वरहरूमा गाउने गायक चाहिन्छ, जसकासाथ 'वायोल', 'थिओरबो' र 'हार्पसिकोर्ड'–को संगत रहने छ। 'रिटोरनेलो' (टेक) को लागि, उच्च स्वरमा दुइटा भायलिन बज्ने छन्।

**श्री जूर्दे** : यो सित एउटा 'एकतारा' पनि चाहिन्छ। यो मलाई साह्रो मन परेको छ, अनि यसको स्वर पनि समन्वित छ।

**संगीत-शिक्षक** : यी सब हामीमाथि छोड्नुहोस्।

**श्री जूर्दे** : साँझमा, भोजको बेला, गायकहरूलाई गाउन पठाउनु निसन्देह नभुल्नु होला।

**गायिका** : आफ्नो (जातिको) प्रतिष्ठा रक्षा गर्न म तिमीलाई आफ्नो हृदय सुम्पन चाहन्छु।

दोस्रो : तर सुन्दरी, त्यसले (हृदयले) धोखा दिने छैन भनेर के म विश्वास गरूँ?

गायिका : कसले बेसी प्रेम गर्छ, अनुभवले विचार्नुहोस्।

दोस्रो गायक : स्थिर नरहनेसँग भगवान पनि विमुख हुन्छन्।

तीनैजना : (एकसाथ) जौं, हार्मी प्रेमको यस सुन्दर भावनालाई उद्दीप्त पारौं, ओहो! दुई हृदय माझ विश्वास जमिँदा प्रेम कत्ति मीठो हुन्छ?

श्री जूर्दे : बस, यति नै?

संगीत-शिक्षक : हो।

श्री जूर्दे : राम्ररी सजाइएका छन्, अनि यसमा जुन साना-तिना किंवदन्ती छन्, ती पनि सुन्दर छन्।

नृत्य-शिक्षक : ल हेर्नुहोस् म आफ्नो कलाको एक सुन्दर रूप प्रस्तुत गर्छु। यसमा ती सुन्दरतम् गतिहरू र भंगिमाहरू छन् जुन एउटा नृत्यमा सम्भव छ।

श्री जूर्दे : यी पनि भेड़ी-गोठाला हुन्?

नृत्य-शिक्षक : यो त्यो चीज हो जुन तपाईंले मन पराउनु हुनेछ। (नर्तकहरूसित) लौ, शुरु गरौं।

(चारजना नर्तकहरू, नृत्य-शिक्षकको आदेशले नृत्यका विभिन्न गतिहरूको र पदसंचालनको प्रदर्शन गर्छन् अनि यो पहिलो विष्कम्भक हुन्छ)

संगीत-शिक्षक : तपाईंलाई चाहिएको सबै कुरा पाउनु हुनेछ।

श्री जूर्दे : सबभन्दा आवश्यक 'ब्याले' राम्रो हुनु हो।

संगीत-शिक्षक : विशेष गरी, कतिपय युगल नृत्य हेरेर तपाईं खुशी हुनु हुनेछ।

श्री जूर्दे : वाह! युगल-नृत्य, यो त मेरो मन परेको नृत्य हो। मलाई यो नृत्य गर्दै गरेको हेर्नुहोस् भन्ने चाहन्छु, आउनुहोस्, मेरो शिक्षक महोदय।

नृत्य-शिक्षक : कृपया टोपी लाउनु होस्, महाशय। (श्री जूर्दे आफ्नो अनुचरको टोपी लिएर आफ्नो नाइट-क्यापमाथि लगाउँछन्। नृत्य-शिक्षक उनको हाथ समात्छन् अनि एक युगल-नृत्यको बोल गाउँदै उनलाई नचाउँछन्)

ला,ला,ला,ला,ला,ला; ला,ला,ला,ला,ला,ला; ला,ला,ला,ला,ला,ला; ला,ला,ला,ला,ला,ला; ला,ला,ला,ला,ला,ला; कृपया तालमा नाच्नु होस् ला,ला,ला,ला,ला,ला। दाहिने खुट्टा। ला,ला,ला। यति साह्रो काँध नहल्लाउनु होस्। ला,ला,ला,ला,ला; ला,ला,ला,ला। तपाईंको दुवै बाहु बाङ्गा छन्। ला,ला,ला,ला,ला,ला। टाउको माथि उठाउनु होस्। खुट्टाको अग्रभाग बाहिरतिर घुमाउनु होस्। ला,ला,ला। जीउलाई सीधा गर्नुहोस्।

**श्री जूर्दे** : किन?

**संगीत-शिक्षक** : अति उत्तम!

**श्री जूर्दे** : हो, मलाई 'मार्क्योनेस'-को अभिवादन कसरी गर्नुपर्छ, त्यो बताउनुहोस्। मलाई राति यसको प्रयोजन पर्नेछ।

**नृत्य-शिक्षक** : मार्क्योनेसको अभिवादन?

**श्री जूर्दे** : हो, उनको नाम दोरिमेन हो।

**नृत्य-शिक्षक** : मलाई आफ्नो हात दिनुहोस्।

**श्री जूर्दे** : होइन आफै गर्नुहोस्, म याद गर्नेछु।

**नृत्य-शिक्षक** : यदि तपाईं धेरै सम्मानसहित अभिवादन गर्न चाहनु हुन्छ भने पहिले पछि हटेर अभिवादन गर्नुहोला, अनि फेरि तीन पल्ट अभिवादन गर्दै उहाँतिर बढ्नुहोला, अनि अन्तमा उहाँको घुँडासम्म निहुरिनु होला।

**श्री जूर्दे** : पहिले गर्नुहोस् त। (नृत्य-शिक्षकले तीनपल्ट अभिवादन गरेपछि) ठीक छ।

**अनुचर** : मालिक! तपाईंको शस्त्र-शिक्षक आउनु भएको छ।

**श्री जूर्दे** : उहाँलाई यहाँ आएर मलाई सिकाउनु भन्, जा (संगीत-शिक्षक र नृत्य-शिक्षकसित) तपाईंहरू मलाई तलवार चलाउँदै गरेको हेर्नुहोस् भन्ने म चाहन्छु।

## दृश्य-2

(शस्त्र-शिक्षक, संगीत-शिक्षक, नृत्य-शिक्षक, श्री जूर्दे र दुई तलवार लिएको एक अनुचर)

**शस्त्र-शिक्षक** : (जूर्देको हातमा तलवार दिएर) महाशय, नमस्कार। आफ्नो शरीर सीधा राख्नुहोस्। अलिक देब्रे खुट्टापटि निहुरिनुहोस्। खुट्टा त्यति नफैल्याइ सीधा गर्नुहोस्। हात कम्मरको सामु राख्नुहोस् तलवारको चुच्चो काँधको सामु। हात यति नफैलियोस्। देब्रे हात आँखाको ऊँचाईसम्म। देब्रे काँध अझै पछि, टाउको सीधा। दृष्टि स्थिर रहोस्। अघि बढ्नुहोस्। शरीर दृढ रहोस्। तलवारलाई चौंथो कदममा राख्नुहोस् र त्यसैले वार गर्नुहोस्। एक, दुई। समाल्नुहोस्, दोहराउनुहोस्, दृढ खुट्टाले टेकेर। पछिल्तिर कुद्नु होस्। तपाईंले वार गर्नु हुँदा महाशय, तलवार पहिलो कदममा राख्नु होला, शरीरलाई आघातदेखि बचाउनु होला। एक, दुई। शुरु गर्नुहोस् तलवारलाई तेस्रो कदममा लिनुहोस्। एक, दुई। संभालिनुहोस्,।

फेरि एक दुई। पछि कुद्नुहोस्। सावधान, महाशय, सावधान। (शस्त्र-शिक्षक, सावधान भन्दै श्री जूर्देमाथि दुई तीन वार गर्छ।)

श्री जूर्दे : उफ्।

संगीत-शिक्षक : तपाईंले कमाल गर्नुभो।

शस्त्र-शिक्षक : मैले तपाईंलाई पहिले नै भनि सकेको छु, शस्त्रको रहस्य दुई कुरामा छ, वार गर्नु अनि आफूमाथि वार हुन नदिनु; अनि जस्तो मैले प्रदर्शन गरेर देखाएँ, तपाईंले शत्रुको वारलाई अर्कै दिशापट्टि फर्काई दिनु भए तपाईंमाथि आघात गर्नु असम्भव छ। यो मात्र नाडीको एउटा सानो गतिमा निर्भर गर्छ, केही यता वा केही उता।

श्री जूर्दे : यस प्रकार, एकजना मानिसले साहस विना पनि, आफू बाँचेर शत्रुलाई मार्न सक्छ।

शस्त्र-शिक्षक : अवश्य। तपाईंले प्रदर्शन देख्नु भएन र?

श्री जूर्दे : अँ, हो।

शस्त्र-शिक्षक : अनि यसरी हामी देख्छौं कि शस्त्रविद्हरूको एउटा राज्यमा कस्तो सम्मान हुनुपर्छ अनि यो पनि कि, शस्त्र-विज्ञान, नृत्य, संगीत आदि व्यर्थको विद्याहरू भन्दा कति श्रेष्ठ छ?

नृत्य-शिक्षक : उत्तम, सैनिक महोदय! नृत्य विषयमा सम्मानसाथ बोल्नुहोस्।

संगीत-शिक्षक : कृपया संगीतको विशिष्टतालाई राम्ररी बुझ्नुहोस।

शस्त्र-शिक्षक : तपाईंहरू मनोरंजक जन्तु हुनुहुन्छ, आफ्नो विद्यासित मेरो विद्याको तुलना गर्नुहुन्छ?

संगीत-शिक्षक : यी महत्त्वका व्यक्तिलाई अलि हेर्नुहोस् त।

नृत्य-शिक्षक : यी कवच लगाएका मनोरंजक जन्तुलाई हेर्नुहोस्।

शस्त्र-शिक्षक : नृत्य-शिक्षक महोदय, म तपाईंलाई राम्ररी नचाइदिउँला। अनि संगीत-शिक्षक महोदयलाई पनि राम्रोसंग गाउन लाइदिउँला।

नृत्य-शिक्षक : अनि डकर्मीज्यु, म तपाईंलाई आफ्नो इलम सिकाई दिउँला।

श्री जूर्दे : (नृत्य-शिक्षकसित) तपाईं पागल हुनुहुन्छ, यी तेस्रो र चौथो कला जान्नेहरूसित झगड़ा गर्नुहुन्छ, यिनले जुन कुनैलाई हत्या गरेर देखाउन सक्छन्।

नृत्य-शिक्षक : म यसको प्रदर्शन, र तेस्रो अनि चौथो कलालाई बूढी औंलो देखाउँछु।

श्री जूर्दे : (नृत्य-शिक्षकसित) भन्दै छु, शान्त रहनु होस्।

शस्त्र-शिक्षक : (नृत्य-शिक्षकसित) के भन्यौ? उद्दण्ड...।

श्री जूर्दे : शास्त्राचार्यज्यू...!

**नृत्य-शिक्षक** : (शस्त्र-शिक्षकसित) के भन्यौ? मोटा पहलवान कतै नभएका।
**श्री जूर्दे** : नृत्य-शिक्षक महोदय!
**शस्त्र-शिक्षक** : तिमीमाथि पल्टिएँ भने नी!
**श्री जूर्दे** : (शस्त्र-शिक्षकसित) बिस्तारै।
**नृत्य-शिक्षक** : तँमाथि हात छोड़ेछु भने...।
**श्री जूर्दे** : (नृत्य शिक्षकसंग) अलिक नरम भएर।
**नृत्य-शिक्षक** : तेरो छाला यसरी काढ़छु कि...।
**श्री जूर्दे** : (शस्त्र-शिक्षकसित) क्षमा गर्नुहोला।
**नृत्य-शिक्षक** : म यसरी तेरो मरम्मती गर्नेछु कि...।
**श्री जूर्दे** : (नृत्य-शिक्षकसित) म तपाईसित प्रार्थना गर्छु...।
**संगीत-शिक्षक** : यसलाई अलिक बोल्न सिकाइदिउँ होला।
**श्री जूर्दे** : (संगीत-शिक्षकसित) हे भगवान! चुप लाग्नुहोस् त।

## दृश्य-3

(दर्शन-शिक्षक, श्री जूर्दे, संगीत-शिक्षक, नृत्य-शिक्षक, शस्त्र-शिक्षक, एकजना अनुचर)

**श्री जूर्दे** : दार्शनिक महोदय, तपाईं आफ्नो दर्शन साथै समयमा आई पुग्नु भएर राम्रो गर्नुभो, आउनुहोस्, यी व्यक्तिहरूलाई शान्त गराउनु होस्।
**दर्शन-शिक्षक** : के भयो? के कुरा छ महाशयहरू?
**श्री जूर्दे** : यी आफ्नो-आफ्नो पेशाको विशेषता बताउँदै रिसाएका छन्, यहाँ सम्म कि गाली-गलौजमा उत्रेका छन् अनि हात मिसामिस गर्न उद्धत भएका छन्।
**दर्शन-शिक्षक** : कसो महाशयहरू! तपाईहरूले त्यसरी रिसाउनु पर्नेहो? के तपाईंहरूले सेनेकाको क्रोधमाथि लेखिएको त्यो पाण्डित्यपूर्ण निबन्ध पढ़नु भएन? के यस प्रवृत्तिले निम्न र लज्जाजनक अनि मनुष्यलाई जंगली पशु जस्तो बनाउने अर्को कुनै प्रवृत्ति छ? के हाम्रो प्रत्येक काममा बुद्धिको प्रधानता हुनु पर्ने होइन?
**नृत्य-शिक्षक** : हेर्नुहोस् त महाशय, यिनले हामी दुवैलाई गालि गर्नुहुँदैछ। मेरो काम नृत्यको, र यहाँको पेशा संगीतको, अवहेलना गर्नु हुँदैछ।
**दर्शन-शिक्षक** : बुद्धिमान मनुंष्य सबै प्रकारका अपमानदेखि अस्पृश्य रहन्छ; र अपमानको सब भन्दा ठूलो उत्तर संयम र धैर्य हो।
**शस्त्र-शिक्षक** : यी दुवैले मेरो पेशालाई आफ्नो पेशासँग तुलना गर्ने दुस्साहस गर्छ।

दर्शन-शिक्षक : के यसले तपाई विचलित हुनै पर्छ? मान्छेले आपसमा मिथ्यासम्मान र स्थिति लिएर विवाद गर्नु हुँदैन अनि हाम्रो बुद्धिमत्ता र सद्गुणले नै हामीलाई एकार्कामा पूर्णतः विशिष्ट सिद्ध गर्छ।

नृत्य-शिक्षक : म दावा गर्छु, नृत्य एक यस्तो विज्ञान हो जसको जतिनै सम्मान गरिओस् थोरै हुन्छ।

संगीत-शिक्षक : अनि म यो दावा गर्छु, संगीत एक यस्तो विज्ञान हो जसको सबै शताब्दीमा पूजा भएको छ।

शस्त्र-शिक्षक : अनि मेरो यहाँ दुवैसित दावा छ, शस्त्र-विज्ञान सबै विज्ञान भन्दा अधिक सुन्दर र आवश्यक छ।

दर्शन-शिक्षक : उसोभए, 'दर्शन' लाई के भन्नु? देख्छु तपाईहरू तीनैजना दुस्साहसी हुनुहुन्छ जो मेरै सामु यस्तो अभिमानले बोल्नु हुँदैछ अनि यस्तो वस्तुहरूलाई निर्लज्जतासाथ विज्ञानको नाम दिनु हुँदैछ जसलाई कलाको नामले पनि सम्मानित नगर्नु पर्ने, अनि जसलाई पहलवान, गाइने र नाच्नेको दुर्भाग्यपूर्ण पेशा मात्र भन्न सकिन्छ।

शस्त्र-शिक्षक : दार्शनिक हाँस, भाग।

संगीत-शिक्षक : दंभी उपदेशक, जाइ हाल।

नृत्य-शिक्षक : निर्लज्ज पण्डित, भाग।

दर्शन-शिक्षक : के? दुष्टहरू! (दर्शन-शिक्षक सबैसित लड्न लाग्छ। सबैले उसलाई हिर्काउँछन्)

श्री जूर्दे : दार्शनिक महोदय!

दर्शन-शिक्षक : नीच, धूर्त्त, अशिष्ट!

श्री जूर्दे : दार्शनिक महोदय!

शस्त्र-शिक्षक : यस पशुको नाश होस्।

श्री जूर्दे : महाशयहरू!

दर्शन-शिक्षक : निर्लज्ज!

श्री जूर्दे : दार्शनिक महोदय!

संगीत-शिक्षक : यस दुस्साहसीको नाश होस्।

श्री जूर्दे : महाशयहरू!

दर्शन-शिक्षक : अभागी, धोखेबाज, ठग। (सबै निस्किन्छन्)

श्री जूर्दे : दार्शनिक महोदय? महाशयहरू, दार्शनिक महोदय! महाशयहरू! ओहो! जति मनलाग्छ लड्नुहोस्। म जान्दिनँ, म के गरूँ। तपाईहरूलाई छुट्याउन म आफ्नो कपड़ा बिगार्दिनँ। यहाँहरूको बीच परें भने म पागल हुन्छु, दुई-चार हात भेट्ने छु र जीऊ मात्र दुख्नेछ।

## दृश्य-4

(दर्शन-शिक्षक, श्री जूर्दे, एकजना अनुचर)

**दर्शन-शिक्षक** : (आफ्नो कलर मिलाउँदै) आफ्नो पाठ शुरू गर्नुहोस्।

**श्री जूर्दे** : अहो! मलाई दुःख छ महाशय, तपाईलाई ती सबले पिटे।

**दर्शन-शिक्षक** : केही छैन। एकजना दार्शनिकले जान्दछ परिस्थितिको सामना कसरी गर्नुपर्छ, अनि म ती सबको विरोधमा जुबेनालाको शैलीमा एक यस्तो व्यंग्य लेख्नेछु जसले उनीहरूको धज्जी उड़ाउनेछ। यस प्रसंगलाई छोड़ौं। तपाई के पढ़न चाहनु हुन्छ?

**श्री जूर्दे** : जे पनि पढ़न सक्कूँ, किनभने मलाई विद्वान हुने ठूलो इच्छा छ। मेरो आमा बाबुले मलाई बालखकालमैं सबै विज्ञान पढ़ाएनन् भनी रीस पनि उठ्छ।

**दर्शन-शिक्षक** : यो भावना ठीकै हो। 'नाम सिने दोक्त्रिना विता एस्त काजी मोरतिस इमागो' (Nam Sine doctrina vita est quasi mortis imago) यी सम्झन्छन्, निश्चय नै तपाईलाई ल्याटिनको ज्ञान छ।

**श्री जूर्दे** : हो, तर सम्झनुहोस् मलाई केही आउदैन। यसको अर्थ सम्झाउनुहोस् त।

**दर्शन-शिक्षक** : यसको अर्थ विज्ञान बिना जीवन मृत्युवत् छ।

**श्री जूर्दे** : ल्याटिनको यो भनाई उचित हो।

**दर्शन-शिक्षक** : के तपाईलाई कुनै सिद्धान्त, विज्ञानको आरम्भ केही थाह छैन?

**श्री जूर्दे** : ओह हो! म पढ़न र लेख्न जान्दछु।

**दर्शन-शिक्षक** : कहाँदेखि शुरू गर्न चाहनु हुन्छ? के म तपाईलाई तर्क-शास्त्र पढ़ाउँ।

**श्री जूर्दे** : यो तर्कशास्त्र के हो?

**दर्शन-शिक्षक** : यसले बुद्धिको त्रिविध क्रियाको ज्ञान दिन्छ।

**श्री जूर्दे** : यो त्रिविध क्रिया के हो?

**दर्शन-शिक्षक** : प्रथम, द्वितीय र तृतीय। प्रथम—साधारणहरूको आधारमा धारणा, द्वितीय—वर्गीकरणहरूको आधारमा निर्णय, तृतीय—मूर्तरूपहरूको आधारमा परिणाममा पुग्नु। 'बारबारा, सेलारौँ, दारिई, फेरियो, बारालिप्टन' आदि।[1]

**श्री जूर्दे** : यी शब्दहरू त साह्रै क्लिष्ट छन्। यो तर्कशास्त्र मेरो मगजमा पस्ने छैन। अरु कुनै पढ़ौं जुन यो भन्दा राम्रो छ।

---

1. यी अर्थहीन शब्दहरू यस्ता सूत्र हुन् जसद्वारा विभिन्न तर्क प्रणाली बोध गराइन्छ।

**दर्शन-शिक्षक** : के तपाईं नीति-शास्त्र पढ़नुहुन्छ?

**श्री जूर्दे** : नीतिशास्त्र?

**दर्शन-शिक्षक** : हो।

**श्री जूर्दे** : यो नीति-शास्त्रले के भन्छ?

**दर्शन-शिक्षक** : यसमा सुख प्राप्तिको चर्चा छ, यसले मनुष्यलाई आफ्नो प्रवृति नियन्त्रित गर्ने शिक्षा दिन्छ, अनि... ...।

**श्री जूर्दे** : होइन, यसलाई छोड़ौ। दानव झैं क्रोधी छु, अनि मसित कुनै नीति टिक्न सक्तैन। कहिले त अघाउन्जेल रिसाउनु मन लाग्छ।

**दर्शन-शिक्षक** : त के तपाई भौतिक-शास्त्र पढ़न चाहनु हुन्छ?

**श्री जूर्दे** : यस भौतिक-शास्त्रले के भन्छ?

**दर्शन-शिक्षक** : भौतिक-शास्त्रले प्राकृतिक वस्तुहरूको सिद्धान्त र शरीर-तत्त्व सम्झाउँछ, जून भौतिक तत्वहरूले धातुहरूको, खनिजको, ढुङ्गाको, वृक्ष-लताको र पशुहरूको प्रवृत्तिको व्याख्या गर्छ, र हामीलाई नक्षत्र, इन्द्रधनुष, पुछ्रेतारा, तारा, वर्षा, बरफ, असिना, हावा, र विद्युतादिको विषयमा सिकाउँछ।

**श्री जूर्दे** : यसमा साह्रै झमेला छ, साह्रै अस्पष्टता छ।

**दर्शन-शिक्षक** : तपाईं मसित के सिक्न चाहनु हुन्छ त?

**श्री जूर्दे** : मलाई शब्द-साधन सिकाउनु होस्।

**दर्शन-शिक्षक** : बड़ो खुसीसाथ।

**श्री जूर्दे** : त्यसपछि मलाई पञ्चांग पढ़ाउनुहोस् जसले कहिले चन्द्रमा हुने नहुने बुझ्न सकूँ।

**दर्शन-शिक्षक** : यस्तै नै होस्। तपाईंका विचारहरूको स्पष्ट अभिव्यक्तिको लागि अनि यस विषयलाई दार्शनिक आधारमा सम्झाउनको लागि, क्रम साथ शुरु गर्नु पर्छ अनि यसको लागि, अक्षरहरूको प्रकृति र त्यसको उच्चारणको भिन्नता जान्नु आवश्यक छ र यस सम्बन्धमा, मैले तपाईंलाई बताउनु छ—अक्षर स्वर र व्यञ्जनमा विभाजित छ। स्वर, यसकारण भन्छन् यसबाट ध्वनि उत्पन्न हुन्छ, व्यञ्जन चाहिँ यी स्वरसित मिलेर उत्पन्न हुन्छन्; यी केवल ध्वनिको विभिन्न उच्चारणहरू स्पष्ट गर्छन्। स्वर अर्थात् ध्वनि पांचोटा छन्-आ, ए, इ, ओ, उ। 'इ' —लाई गोलो ओंठद्वारा उच्चारण गर्दा या ध्वनि उत्पन्न हुन्छ।

**श्री जूर्दे** : म यी सब सुन्दै त छु।

**दर्शन-शिक्षक** : आ को उच्चारण, मुखलाई ताकतले खोले मात्र हुन्छ-आ।

**श्री जूर्दे** : आ, आ। हो।

**दर्शन-शिक्षक** : ए-को उच्चारण तलको च्यापु माथिको च्यापुको छेऊमा लैंजाँदा हुन्छ-आ, ए।

**श्री जूर्दे** : आ, ए; आ, ए। वास्तवमा, हो। वाह! कति राम्रो छ?

**दर्शन-शिक्षक** : अनि इ-को उच्चारण, च्यापुलाई अझै छेऊमा लगेर मुखको दुवै कुनालाई कानको दिशामा फैल्याउँदा हुन्छ-आ, ए,इ।

**श्री जूर्दे** : आ, ए,इ,इ,इ,इ। हो त साँच्चै, विज्ञानको जय!

**दर्शन-शिक्षक** : ओ-को उच्चारण च्यापु खोल्दा र तल र माथिको ओंठको दुवै कुनको देऊमा लैंजादा हुन्छ-ओ।

**श्री जूर्दे** : ओ, ओ। यो भन्दा ठीक केही हुन सक्तैन—ओ, ए,इ,ओ,इ,आ राम्रो! इ,ओ, इ, ओ।

**दर्शन-शिक्षक** : मुखको दूलो ठीक '0' झैं एक सानो चक्र जस्तो खुल्छ।

**श्री जूर्दे** : ओ,ओ,ओ। तपाईं ठीक भन्नु हुँदैछ-ओ। वाह! केही सिक्नु पनि कतिं राम्रो हो?

**दर्शन-शिक्षक** : इ-को उच्चारणमा दाँतको दुवै पँक्तिहरू छेऊमा हुन्छन् तर टाँसिन्दैनन्; अनि दुवै ओंठ बाहिर निस्केर एकार्काको छेऊमा हुन्छन्, तर टाँसिन्दैनन्-इ।

**श्री जूर्दे** : इ, इ। यो भन्दा साँचो केही हुन सक्तैन-इ।

**दर्शन-शिक्षक** : तपाईंको दुवै ओंठ बाहिर यसरी निस्किन्छन् मानुं तपाईंले मुख बिगार्नु हुँदैछ। यसरी नै जब तपाईंले कसैसित यस्तो गर्नु पर्‍यो भने, औ तपाईंले उसलाई जिस्काउन चाहनु हुन्छ भने केवल इ गर्नु होस!

**श्री जूर्दे** : इ, इ। यो साँचो हो! वाह! मैले यो पहिले नै सिक्दो हूँ।

**दर्शन-शिक्षक** : भोली हामी अरू अक्षरहरू हेरौंला जसलाई 'व्यञ्जन' भनिन्छ।

**श्री जूर्दे** : के यी भन्दा पनि ती आश्चर्यजनक छन्?

**दर्शन-शिक्षक** : निस्सन्देह! उदाहरणको निम्ति 'दे' को उच्चारण जीब्रोको टुप्पो माथिल्लो दाँतको पंक्तिसँग टाँसिन्दा हुन्छ—दा।

**श्री जूर्दे** : दा,दा, हो। वाह! क्या राम्रो? कति राम्रो?

**दर्शन-शिक्षक** : 'तफ' को उच्चारण माथिल्लो दाँतलाई तलको ओंठसँग सटाउँदा हुन्छ-फा।

**श्री जूर्दे** : फा, फा। सांच्चै नै। वाह! ए मेरो आमा र बाबु, तपाईंहरूको सत्यनास होस्।

**दर्शन-शिक्षक** : अनि 'एर' को उच्चारण जीब्रोको टुप्पोलाई तालुमाथि यस प्रकार राख्दा हुन्छ जब जोरसित निक्लेको हावा त्योसित ठोक्किन्छ अनि त्यस स्थानबाट हटेर फेरि त्यहीं आवस्-एक प्रकारको कम्पन गर्दै एर, रा।

श्री जूर्दे : एर, एर्, रा, एर्, एर्, एर्, एर्, एर्, एर्, एर् रा। साँचो कुरा हो। वाह! कति कुशल हुनुहुन्छ तपाईं। मैले कति समय नष्ट गरें? एर, एर, एर, रा।

दर्शन-शिक्षक : तपाईंलाई यी आश्चर्यजनक विषयको गम्भीर ज्ञान गराउँला।

श्री जूर्दे : विन्ती छ। यो छोड़ी, म तपाईंसित एउटा गुप्त कुरा गर्न चाहन्छु। म एक उच्च वर्गकी महिलासित प्रेम गर्छु अनि म चाहन्छु तपाईंले मलाई सहायता गर्नुहोस् जसमा म एक पत्रमा केही लेखेर उनको चरणमा चढ़ाउन सकूँ।

दर्शन-शिक्षक : अति उत्तम।

श्री जूर्दे : यो ठीक रहला, हगि?

दर्शन-शिक्षक : निस्सन्देह। के तपाईं उहाँलाई पद्यमा लेख्न चाहनु हुन्छ?

श्री जूर्दे : होइन, होइन। पद्यमा एकदमै होइन।

दर्शन-शिक्षक : त तपाईं केवल गद्य मात्र चाहनु हुन्छ।

श्री जूर्दे : होइन? म न त गद्य चाहन्छु, न पद्य।

दर्शन-शिक्षक : तर यो त पद्य वा गद्यमा आवश्यक नै छ।

श्री जूर्दे : किन?

दर्शन-शिक्षक : किनभने महाशय, अभिव्यक्तिको लागि गद्य वा पद्य चाहिन्छ।

श्री जूर्दे : केवल गद्य वा पद्य?

दर्शन-शिक्षक : होइन महाशय, जो गद्य होइन त्यो पद्य हो, अनि जो पद्य होइन त्यो गद्य हो।

श्री जूर्दे : अनि हामी जे बोल्छौं त्यसलाई के भन्छ?

दर्शन-शिक्षक : गद्य।

श्री जूर्दे : के? जब म भन्छु-'निकोल, मेरो चप्पल र राति लगाउने टोपी ल्याऊ' यो गद्य भयो?

दर्शन-शिक्षक : हो, महाशय।

श्री जूर्दे : हे भगवान! चालीस वर्षभन्दा बेसी भयो म गद्यमा बोलिरहेको छु, नजानेर नै म गद्यमा बोलिरहेको छु, तपाईंले मलाई यो बताई दिनु भयो, कृतज्ञ छु। म उहाँलाई पत्रमा यो लेख्न चाहन्छु, 'सुन्दरी, तपाईंको सुन्दर आँखाको प्रेमले मलाई मार्न लागेको छ।' तर म चाहन्छु यसलाई राम्रो ढंगले भनियोस्। यसमा केही कोमलता होस्।

दर्शन-शिक्षक : यो लेख्नु होस्, उनका नयनका रापले तपाईंको हृदयलाई खरानी बनाएको छ, तपाईं उसको निम्ति दिन-रात औंधी तड़पिनु हुन्छ...।

श्री जूर्दे : होइन, होइन, म यो चाहदिनँ ; म त त्यति नै चाहन्छु जुन तपाईंलाई

भनें–'सुन्दरी तपाईंको सुन्दर आँखाको प्रेमले मलाई मार्न लागेको छ।'

**दर्शन-शिक्षक** : तर यसलाई केही बढ़ाउनु पर्दैन?

**श्री जूर्दे** : होइन, म भन्छु। म पत्रमा यही कुरा मात्र भन्न चाहन्छु, तर यो राम्रो पाराले भनिएको होस्, राम्ररी सजिएको होस्। कृपया भन्नुहोस् त कुन-कुन ढंगले यी कुराहरू भन्न सकिन्छन्?

**दर्शन-शिक्षक** : पहिले त्यसै ढंगले भन्न सकिन्छ, जुन ढंगले तपाईंले भन्नु भयो 'सुन्दरी तपाईंको सुन्दर आँखाको प्रेमले मलाई मार्न लागेको छ'। वा 'प्रेमले मलाई मार्न लागेको छ सुन्दरी, तपाईंको आँखाले' वा 'तपाईंको सुन्दर आँखाको प्रेमले सुन्दरी मलाई मार्न लागेको छ' अथवा 'मार्न लागको छ, तपाईंको सुन्दर आँखाले सुन्दरी, प्रेमसँग' वा फेरि 'मलाई तपाईंको आँखा, सुन्दर मार्न लागेको छ सुन्दरी, प्रेमसँग'।

**श्री जूर्दे** : यी सबैमा कुन चाहिँ श्रेष्ठ शैली होला?

**दर्शन-शिक्षक** : जुन तपाईंले भन्नु भयो–'सुन्दरी, तपाईंको सुन्दर आँखाको प्रेमले मलाई मार्न लागेको छ।'

**श्री जूर्दे** : यद्यपि म शिक्षित होइन र पनि एकै पल्टमा ठीकसित भन्न सकें। म हृदयले तपाईंलाई धन्यवाद चढ़ाउँछु साथै भोली चाँड़ै आउने विन्ती गर्छु।

**दर्शन-शिक्षक** : हवस्, म भूल्दिनँ। (त्यो जान्छ)

**श्री जूर्दे** : (आफ्नो अनुचरलाई) कसो, मेरो लुगा अझै आइपुगेन?

**अनुचर** : आइपुगेन मालिक।

**श्री जूर्दे** : जहिले मलाई थुप्रै काम परेको हुन्छ त्यस मोरो दर्जीले त्यसै दिन मलाई पुरै प्रतीक्षा गराउन लाउँछ। मलाई रीस उठ्दैछ। यस दुष्ट दर्जीलाई काल पनि न आएको। त्यसको सत्यनाश होस्। त्यसलाई आंठे परोस्। त्यो घृणित दर्जी, कुकुर दर्जी, धोखेबाज दर्जीलाई अहिले नै दोक्क्याउन पाए, मैले... ...।

## दृश्य-5

(दर्जी, दर्जीको नोकर जो श्री जूर्देको लुगा बोकेको छ, श्री जूर्दे, अनुचर)

**श्री जूर्दे** : अरे! तिमी आइपुग्यौ? तिमीलाई गाली गर्दै थिएँ।

**दर्जी** : चाँड़ो आउन सकिनँ, तर बीस जनालाई मैले तपाईंकै लुगा सिउन लगाएको थिएँ।

**श्री जूर्दे** : तिमीले पठाएको साँगुरो मोजा लगाउन मैले संसार भरिको कष्ट

उठाउनु पर्‍यो अनि अहिलेनै त्यसको बुनाईको दुई घर चुँडियो।

दर्जी : त्यो अब साह्रै खकुलो हुनेछ।

श्री जूर्दे : हो, त्यसको घरहरू खोल्न लाग्यो भने। तिमीले मेरो निम्ति बनाएको जुत्ताले पनि साह्रै घाउ पारेको छ।

दर्जी : यो हुनै सक्तैन महाशय!

श्री जूर्दे : कसरी होइन?

दर्जी : होइन, त्यसले घाउ बनाउँदैन।

श्री जूर्दे : म भन्छु, त्यसले घाउ बनाउँछ।

दर्जी : तपाईं यस्तो सोच्नु, हुँदैछ।

श्री जूर्दे : म सोच्छु, किनभने म आफूलाई घाइते अनुभव गर्छु। यो नै सबभन्दा ठूलो कारण हो।

दर्जी : लिनुहोस्, दरवारको सबभन्दा राम्रो पोशाक अनि सिलाई पनि एकदम उत्तम। यो कमाल नै हो पोशाकको कटिङ गम्भीर होस् यद्यपि कपड़ाको रंग कालो छैन। सबभन्दा राम्रो दर्जीले पनि छः पल्ट चेष्टा गरेर मात्र यस्तो पोशाक तैयार गर्न सक्छ।

श्री जूर्दे : यो के हो? तिमीले फूलहरू तल लगाएछौ।

दर्जी : तपाईंले मलाई माथि लगाउनु भन्नु भएको थिएन।

श्री जूर्दे : यो पनि भन्नु पर्छ?

दर्जी : हो, अवश्य। सबै ठूलो दर्जाको मानिसले यस्तै लगाउँछन्।

श्री जूर्दे : ठूला दर्जाको मानिसले फूल तल लगाउँछन्?

दर्जी : हो मालिक।

श्री जूर्दे : ओह! उसो भए ठीक छ।

दर्जी : तपाईं चाहनु हुन्छ भने माथि लगाई दिनेछु।

श्री जूर्दे : होइन, पर्दैन।

दर्जी : तपाईं भन्नुहोस मात्र।

श्री जूर्दे : पर्दैन भन्दैछु। तिमीले ठीक गर्‍यौ। यस पोशाकले मलाई सुहाउँछ?

दर्जी : के भन्नु? म चुनौती दिन्छु कुनै चित्रकारले आफ्नो तुलिकाले यस भन्दा राम्रो चित्र बनाओस् त। मकहाँ एकजना कर्मचारी छ जो 'ब्रीचेस' बनाउनुमा संसारको सबभन्दा ठूलो प्रतिभा हो। अर्को एकजना 'डब्लेट' बनाउनुमा अहिलेको प्रुख कालीगड़ हो।

श्री जूर्दे : 'विग' र पंखा त राम्रो भएको छ?

दर्जी : सब ठीक छ।

श्री जूर्दे : (दर्जीको लुगा हेर्दै) वाह! दर्जी यो त त्यही कपड़ा हो जुन मैले पछिल्लो पल्ट पोशाक बनाउन दिएको थिएँ। म यसलाई राम्ररी चिन्छु।

**दर्जी** : कुरा यो हो, यो कपड़ा मलाई औधी मन पर्‍यो र आफ्नो लागि पनि पोशाक बनाउन मन लाग्यो।

**श्री जूर्दे** : हो, तर मेरो कपड़ाले नबनाउनु पर्ने।

**दर्जी** : आफ्नो पोशाक लगाउनु हुन्न कि कसो?

**श्री जूर्दे** : हो, खोइ देऊ।

**दर्जी** : पर्खनुहोस्, यो यसरी ठीक हुँदैन। मैले मानिस ल्याएको छु जसले तालमा तपाईंलाई पोशाक पहिर्‍याउने छ, यस्तो पोशाक नियमसंग लगाउनु पर्छ। ओ भाई, भित्र आऊ त। यहाँ मालिकलाई यो पोशाक लगाई देऊ। जसरी ठूला दर्जाको मानिसलाई पहिर्‍याई दिन्छौ।

(दर्जीको चार कालीगड़ आउँछन्, दुइजनाले श्री जूर्देको 'ब्रीचेज' उतारी दिन्छन्। अनि दुईले ज्याकेट त्यसपछि नयाँ पोशाक पहिर्‍याइ दिन्छन्। तिनीहरू बीच श्री जूर्दे ओहोर-दोहोर गर्छन्, तिनीहरूलाई देखाउन पोशाक राम्रो भएको छ कि छैन। यी सब खुबै संगीतमय तालमा हुन्छ।)

**कालीगड़** : महोदय! कृपा गरी कालीगड़हरूलाई केही खान-पिउन दिनु होला।

**श्री जूर्दे** : के भन्यौ मलाई?

**कालीगड़** : महोदय!

**श्री जूर्दे** : महोदय! ठूलो दर्जाको मानिसले झैं रहे यो सम्मान पाइन्छ। तपाईं बनियाको कपड़ामा भए कसैले तपाईंलाई 'महोदय' भन्ने छैन। 'महोदय' को निम्ति यो लिइहाल।

**कालीगड़** : प्रभु! हामी साह्रै कृतज्ञ छौं।

**श्री जूर्दे** : प्रभु! वाह! वाह! प्रभु! पर्ख मेरो मित्र! 'प्रभु'–कोलागि केही दिनुपर्छ, प्रभु कुनै सानो कुरा होइन। लिनुहोस्, 'प्रभु'–ले तिमीहरूलाई यो दिनु भयो।

**कालीगड़** : प्रभु, हामी महामहिमको सुस्वास्थ्यको कामना गर्दै पिउने छौं।

**श्री जूर्दे** : महामहिम! वाह! वाह! पर्खनुहोस् अहिले नजानुहोस्। मलाई 'महामहिम'! यस अघि 'परमोच्च' सम्म पुग्न सके, उसले जम्मै थैली पाउने छ। 'महामहिम'-को निम्ति यो थाप।

**कालीगड़** : प्रभु, हामी तपाईंको उदरताको निम्ति नम्रतापूर्वक धन्यवाद चढ़ाउँछौं।

**श्री जूर्दे** : राम्रो गर्‍यौ, नभए उसलाई म सबै दिन्थें।

(चारै कालीगड़ खुशीले नाच्न लाग्छन् अनि यो दोस्रो विष्कम्भक हुन्छ।)

# तेस्रो-अंक

## दृश्य-1

(श्री जूर्दे, अनुचर)

**श्री जूर्दे** : मेरो पछि हिँड़, शहरमा गएर आफ्नो पोशाक देखाएर आउँछु। अनि फेरि यो कुरा याद राख, तँ दुवै ठीक मेरो पछि हिँड्नु, मानिसले यो देखेर बुझुन् तिमीहरू मेरो अनुचर हौ।

**अनुचर** : हुन्छ मालिक।

**श्री जूर्दे** : निकोललाई बोला, त्यसलाई केही आदेश दिनुछ। पर्ख त्यो आउँदै छे।

## दृश्य-2

(निकोल, श्री जूर्दे, दुई अनुचर)

**श्री जूर्दे** : निकोल!

**निकोल** : आज्ञा होस् मालिक।

**श्री जूर्दे** : सुन।

**निकोल** : ही ही ही ही ही।

**श्री जूर्दे** : यस दुष्टाको के मनसाय छ?

**निकोल** : ही ही ही। तपाई खुद सजिनु भएको छ। ही ही ही।

**श्री जूर्दे** : तर के भएको छ?

**निकोल** : ओहो! हे भगवान! ही ही ही ही ही।

**श्री जूर्दे** : कस्ती दुष्टा हो यो? तँ मेरो ठट्टा गर्छेस्?

**निकोल** : कदाचित् होइन मालिक, यसो गर्दा मलाई दुःख हुनेछ। ही ही ही ही ही।

**श्री जूर्दे** : अझै हाँसिस् भने नाक भाँच्चिने गरी दिनेछु।

**निकोल** : मालिक म आफूलाई रोक्न सक्दिँन। ही ही ही ही ही ही।

श्री जूर्दे : चुप लाग्दिनस्?

निकोल : मालिक, क्षमा चाहन्छु, तपाईं यति गजबको देखिनु हुँदेछ कि म हाँसो रोक्नै सक्दिनँ। ही ही ही।

श्री जूर्दे : यसको अशिष्टता हेर त!

निकोल : तपाईं एकदमै अचम्मको देखिनु हुँदेछ। ही ही।

श्री जूर्दे : म तँलाई...।

निकोल : विन्ती, मलाई क्षमा गरिदिनु होस्। ही ही ही ही।

श्री जूर्दे : हेर, अब अलिकति पनि हाँसिस् भने तेरो गालामा कसैलाई नलगाएको चड्कन लगाउने छु।

निकोल : हुन्छ मालिक, अब म चुप लाग्ने छु।

श्री जूर्दे : खबरदार। बेलूकी सबै सफा-सुग्धर गरिराख्लिस्।

निकोल : ही ही।

श्री जूर्दे : फेरि?

निकोल : मालिक, मलाई हिर्काउनु होस् तर मलाई हाँस्नु दिनुहोस्। मेरो लागि यै नै राम्रो हुनेछ। ही ही ही ही ही।

निकोल : विन्ती मालिक। मलाई हाँस्न दिनुहोस्। ही ही ही।

श्री जूर्दे : तँलाई कि... ...।

निकोल : मालिक, हाँसिन भने म मर्नेछु। ही ही ही ही।

श्री जूर्दे : यस्ती जंगली आईमाई कसैले देखेको छ? मेरो आदेश सुन्न छोड़ी मेरै सामु यसरी बौलाही जस्ती हाँस्ने दुस्साहस गरिरहेकी छ।

निकोल : म के गरुँ त, मालिक!

श्री जूर्दे : छुसी, मेरो घरमा सांझमा आउने पाहुनाहरूको निम्ति घर सजाउने चिन्ता गर।

निकोल : उफ्! साँच्चैनै, अब मलाई हाँस्ने इच्छा छैन। तपाईंको जम्मै पाहुना आएर घरमा यति अव्यवस्था फैलाएर जान्छन् कि तिनको नाम सुन्दा नै रीस उठ्छ।

श्री जूर्दे : तेरो लागि म सबैको निम्ति दैलो बन्द राखूँ?

निकोल : तर कतिजनाको निम्ति तपाईंले दैलो बन्द राख्नै पर्ने हो।

## दृश्य-3

(श्रीमती जूर्दे, श्री जूर्दे, निकोल, अनुचर)

श्रीमती जूर्दे : ओहो! लौ हेर्नुहोस्, फेरि नयाँ कथा दोहोरियो। यो सब के हो मेरो हजूर? यी सब साज–शृंगार केका लागि? के तपाईं यसरी शृंगारिएर

ठट्टा गर्नु हुँदैछ? के तपाईं चाहनु हुन्छ सबै ठाउँ मानिसले तपाईंको हाँसो उड़ाऊन्?

**श्री जूर्दे** : श्रीमतीज्यू, मूर्ख नर-नारीले मात्र हाँसो उड़ाऊँछन्।

**श्रीमती जूर्दे** : निस्सन्देह! अझै मानिसले बाँकी राखेका छन्। कत्ति दिनदेखि तपाईंको गतिविधि देखेर मानिसले हाँसो उड़ाइरहेका छन्।

**श्री जूर्दे** : ती को हुन्, भन त?

**श्रीमती जूर्दे** : यसो गर्नेहरूले राम्रै गरेका छन्, अनि ती तपाईं भन्दा बुद्धिमान छन्। जहाँसम्म मेरो प्रश्न छ, म त तपाईंको जिउने ढंग देखि नै लज्जित छु। म जान्दिनँ हाम्रो घर के भएको छ। लाग्छ, यहाँ सँधै 'कार्निवल' हुन्छ। केही बाँकी नरहोस्, यसर्थ बिहानदेखि नै, भायलिन र गायकहरूको उच्च स्वर सुनिन्छ, जसले गर्दा छिमेकीहरू वाक्क भई सकेका छन्।

**निकोल** : मालक्नीले ठीकै भन्नु हुँदैछ। तपाईंले बोलाएको ती रंग-बिरंगी मानिसले गर्दा, म घर साफ-सुग्घर राख्न सक्तिनँ। आउनेहरूको खुट्टाले शहरका सब हिलो बोकेर ल्याउँछन्। रोजै तपाईंको शिक्षकले फर्शको तख्तामा जून हिलो पोतेर जान्छन् त्यो पुछ्दा-पुछ्दा बिचरी फ्राँस्बाजको त सास नै जान लागेको छ।

**श्री जूर्दे** : हाम्री नोकरनी, पाखे भएर पनि जिब्रो खुब चलाउँछे।

**श्रीमती जूर्दे** : निकोल ठीक भन्छे, अनि तपाईं भन्दा त्यसले राम्रो बुझ्छे। म पनि बुझूँ यो उमेरमा तपाईं एकजना नृत्य-शिक्षकलाई लिएर के गर्न चाहनु हुन्छ?

**निकोल** : अनि एकजना ठूला शस्त्र-शिक्षकलाई लिएर जो यहाँ आउँछ, अनि आफ्नो खुट्टा पछारी धेरै हल्लाउँछ अनि बैठकको भूइँको ईटा उखेल्छ।

**श्री जूर्दे** : तँ नोकरनी र मेरी श्रीमती, तिमी दुवै चुप लाग।

**श्रीमती जूर्दे** : के तपाई त्यस समयका लागि नाच्न चाहनु हुन्छ जब तपाईंको खुट्टा रहने छैन?

**निकोल** : के तपाई कसैको हत्या गर्न चाहनु हुन्छ?

**श्री जूर्दे** : भन्दैछु, चुप लाग। तिमी दुवै मूर्ख हो अनि तिमीहरू यसबाट हुने उपलभ्यमान[1] लाभको विषयमा जान्दैनौ।

**श्रीमती जूर्दे** : बरु तपाईंले त छोरीको विवाह गर्ने कुरा सोच्नु पर्ने किनकि त्यसको विवाहको उमेर भइसक्यो।

---

1. यहाँ श्री जूर्दे ठूला-ठूला शब्दहरूद्वारा प्रभाव जमाउन चाहन्छ।

**श्री जूर्दे** : मेरी छोरीको विवाहको कुरा त्यति बेला सोचूँला, जब उसको निम्ति कुनै वर पाउने छु; तर म राम्रा कुराहरू पनि जान्न चाहन्छु।

**निकोल** : अनि मैले सुनेकी छु मालिकनी, आफ्नो चिड़ियाघर सजाउन आजदेखि मालिकले एकजना दर्शन-शिक्षक पनि राख्नु भएकोछ।

**श्री जूर्दे** : ठीक हो। म बुद्धि प्राप्त गर्न चाहन्छु अनि असल मानिस बीच बुद्धिमता साथ कुरा गर्ने जान्न चाहन्छु।

**श्रीमती जूर्दे** : यस उमेरमा, कुनै दिन कलेजमा गएर बेत नखानु होला?

**श्री जूर्दे** : किन होइन? ईश्वर गरुन्, मैले सबैको सामु बेत खानुपरे ती सब सिक्थें जुन कलेजमा सिकाइन्छ।

**निकोल** : हो, साँच्चै। यसरी तपाईंको खुट्टा राम्रो हुने थियो।

**श्री जूर्दे** : निस्सन्देह!

**श्रीमती जूर्दे** : तपाईंको घर चलाउन यी सब साह्रै जरुरी छन्।

**श्री जूर्दे** : निश्चय नै। तिमी दुवै मूर्खले झैं बोल्छौ अनि तिमीहरूको मूर्खता देखेर मलाई लाज लाग्छ। उदाहरणको लागि जान्दछौ, अहिले के भनिरहेकी छौ?

**श्रीमती जूर्दे** : हो, म जान्दछु म जे भन्दैछु त्यो ठीक हो अनि यो पनि कि तपाईंले अर्कै ढंगले जीवन गुजार्ने कुरा सोच्नुपर्छ।

**श्री जूर्दे** : मैले यो भनेको होइन। म सोध्दैछु जुन कुरा तिमी भन्दैछौ त्यो के हो?

**श्रीमती जूर्दे** : यी विचारयुक्त कुरा हुन्, अनि तपाईंको व्यवहार विचार-शून्य छ।

**श्री जूर्दे** : म भन्दैछु, मेरो मनसाय यो होइन! म सौध्दैछु म जुन कुरा तिमीलाई भन्दैछु, जुन अहिले तिमीलाई भन्दैछु, त्यो के हो?

**श्रीमती जूर्दे** : व्यर्थको कुरा।

**श्री जूर्दे** : अरे यो होइन। हामी दुवै जुन भाषामा अहिले बोल्दैछौं त्यो?

**श्रीमती जूर्दे** : उसो भए?

**श्री जूर्दे** : त्यसलाई के भन्छ?

**श्रीमती जूर्दे** : त्यसलाई जे मन लाग्छ, भन्न सकिन्छ।

**श्री जूर्दे** : त्यसलाई गद्य भनिन्छ, लाटी।

**श्रीमती जूर्दे** : गद्य?

**श्री जूर्दे** : हो गद्य, जो गद्य हो त्यो पद्य होइन। अनि जो पद्य होइन त्यो गद्य हो। देख्यौ? यसैलाई पढ़नु भन्दछन्। अनि तिमी, तिमीलाई थाह छ इ को उच्चारण गर्न के गर्नु पर्छ?

**निकोल** : के भन्नु भो?

श्री जूर्दे : हो तिमी इ भन्छ्यौ, के भन्छयौ त?
निकोल : के भन्नु भो?
श्री जूर्दे : इ भन त हेरौं।
निकोल : इ।
श्री जूर्दे : तैंले के गरिस्।
निकोल : मैले इ भनें।
श्री जूर्दे : हो, तर इ भन्दा के-के गछ्र्यौं?
निकोल : जे तपाईं मलाई भन्नु हुन्छ।
श्री जूर्दे : उफ्। मूर्खहरूसित व्यवहार गर्न कति कठिन छ? तँ ओंठहरू बाहिर निकाल्छेस् अनि माथिको च्यापु तलको च्यापुको छेऊ लैजान्छेस् इ देख्यौ? म मुख बिगार्छु इ।
निकोल : हो, यो कति राम्रो?
श्रीमती जूर्दे : कति राम्रो नि!
श्री जूर्दे : तिमीले आ र दा, दा र फा, फा देखे अझै अर्कै कुरा हुन्थ्यो।
श्रीमती जूर्दे : के नचाहिंदो प्रलाप गर्नु परेको?
निकोल : यो सबै कुन रोगको ओखती हो?
श्री जूर्दे : मूर्ख आईमाईरूलाई देख्दा मलाई झोंक चल्छ।
श्रीमती जूर्दे : जानुहोस्, ती सबै मानिसहरूलाई, उनिहरूको प्रलापसितै गाड़ेर आउनुहोस्।
निकोल : खास गरि त्यो मोटे शस्त्र-शिक्षकलाई जसले मेरो घरलाई धुलोले भरिदिन्छ।
श्री जूर्दे : अच्छा! उसो भए त्यो शस्त्र-शिक्षक तेरो आँखामा बिझेको छ। अहिले सम्झाउँछु तँ कति अशिष्ट छेस्। (तरवाहररू ल्याउन लगाएर निकोललाई एउटा दिन्छ) यो ली, यो प्रदर्शन हो। तरवार शरीरको सीधा चौंथो दाउमा मात्र यति गर्नु पर्छ अनि तेस्रोमा बस यतिनै। यस प्रकार हामी कहिल्यै मारिने छैनौं, कसैसित लड़ाई गर्दा, यस प्रकार आफ्नो स्थितिको बारेमा निश्चिन्त भएर रहनु राम्रो होइन? लौ मलाई अलि धकेल त।
निकोल : अन्त फेरि? (निकोलले उसलाई धैरैपल्ट धकेलुछे)
श्री जूर्दे : अति असल। अरे ऐ! बिस्तारै। दुष्टामाथि चट्याङ् परोस्।
निकोल : तपाईं मलाई धकेल्नु भन्नु हुन्छ।
श्री जूर्दे : हो, तर चौंथो दाऊ बिना नै तेस्रो दाऊमा मलाई धकेल्छेस् अनि आफ्नो बचाउ गर्न दिने तेरो धैर्य छैन।

**श्रीमती जूर्दे** : तपाईं पगला हुनुहुन्छ अनि यो सबै तपाईंको भ्रान्ति हो; तपाईंले उच्चवर्गको संगत शुरु गरेदेखि यो अवस्था देख्दैछु।

**श्री जूर्दे** : मैले उच्चवर्गसित हिंड़दा म बुद्धिमता देखाउँछु। यो तिम्रो व्यापारीवर्गसित हिंड़नु भन्दा कता-कता राम्रो हो।

**श्रीमती जूर्दे** : साँच्चै? तपाईंलाई आफ्नो उच्चवर्गसित हिंड़दा धेरै लाभ छ। ती असल काउण्टसित, जोसित तपाईंको गहिरो मित्रता छ, तपाईंले राम्रो कारबार गर्नुभएको छ।

**श्री जूर्दे** : चुप। सोचेर कुरा गर। जान्दछ्यौ जब तिमी उनीहरूको बारेमा कुरा गरिरहेकी हुन्छौ, तिमी जान्दिनौ तिमी कसको बारेमा बोलिरहेकी हुन्छ्यौ? तिमी जान्दिनौ तिनीहरू कति महत्वका मानिस हुन्; ती एक यस्ता सामन्त हुन् जसको राजदरबारमा सम्मान छ अनि जो राजासित त्यस्तै कुरा गर्छन् जस्तो म तिमीसंग। यो मेरो निम्ति सम्मानको कुरा होइन कि यस्ता व्यक्तिहरू मेरो घरमा आउन् मलाई 'प्रिय मित्र' भनून् अनि मलाई आफू समानकै सम्झिउन्? म प्रतिको उहाँहरूको उदारता अकल्पनीय छ अनि सबैको सामु मलाई यस्तो सम्बोधन गर्दा म दंगदास पर्छु।

**श्रीमती जूर्दे** : हो तिनीहरूमा तपाईंको निम्ति दया छ, तपाईंलाई माया गर्छन् तर ती तपाईंको रुपियाँ पनि त कर्ज लिन्छन्।

**श्री जूर्दे** : त के भयो? के यस्तो अवस्थाको मानिसलाई रुपियाँ उधारो दिनुमा मेरो गौरव छैन अनि यस्तो सामन्तलाई जसले मलाई 'प्रिय मित्र' भन्छन् यति पनि सेवा गर्न नसकूँ।

**श्रीमती जूर्दे** : अनि यी सामन्तले तपाईंको निम्ति के गर्छन्?

**श्री जूर्दे** : यस्तो काम, जसलाई सुनेर आश्चर्य हुन्छ।

**श्रीमती जूर्दे** : त्यो के?

**श्री जूर्दे** : धत्, म सम्झाउन सक्तिनँ। यति मात्र जान्दछु मैले उहाँहरूलाई उधारो दिएको रुपियाँ समयमा फर्काउनेछन्। बस यति नै।

**श्रीमती जूर्दे** : हो, प्रतीक्षा गर्नुहोस्।

**श्री जूर्दे** : निश्चय नै। उहाँरूले मलाई भन्नु भएको छैन र?

**श्रीमती जूर्दे** : हो, हो, उहाँहरू वचन तोड्न चुक्ने पनि छैनन्।

**श्री जूर्दे** : उहाँहरूले मलाई भलाद्मीले झैं वचन दिनुभएको छ।

**श्रीमती जूर्दे** : यी व्यर्थका कुरा हुन्।

**श्री जूर्दे** : साँच्चै नै तिमी जिद्दी छौ। तिमीलाई भन्छु, उहाँहरूले वचन पालन गर्नुहुनेछ, मलाई विश्वास छ।

श्रीमती जूर्दे : अनि म भन्छु, निश्चय नै उनीहरूले वचन पालन गर्ने छैनन्, अनि उनको सबै माया तपाईंलाई भुल्याउनु मात्र हो।

श्री जूर्दे : चुप लाग, उ आउँदैछन्।

श्रीमती जूर्दे : हामीलाई यसैको दरकार थियो। उ सायद ऋण लिन आउँछन्, यसलाई देख्नै म अघाउँछु।

श्री जूर्दे : चूप लाग, म भन्दैछु।

## दृश्य-4

(दोराँत, श्री जूर्दे, श्रीमती जूर्दे, निकोल)

दोराँत : मेरो प्रिय मित्र, श्री जूर्दे, तपाईं कस्तो हुनुहुन्छ?

श्री जूर्दे : महाशय, तपाईंको सानो-तिनो सेवाहरूको लागि एकदम ठीक छु।

श्री जूर्दे : अनि तपाईं कस्ती हुनुहुन्छ, श्रीमती जूर्दे?

श्रीमती जूर्दे : श्रीमती जूर्दे त्यस्ती नै छन् जस्तो हुनुपर्ने।

दोराँत : वाह जूर्दे महोदय, तपाईं क्या सजिनु भएको छ?

श्री जूर्दे : यस्तै।

दोराँत : यस पोशाकमा तपाईं कति राम्रो देखिनु हुन्छ? दरवारमा तपाईं भन्दा सुन्दर युवक नै छैन।

श्री जूर्दे : हें हें।

श्रीमती जूर्दे : (स्वयम्) तीर ठीक निशानामा चलाएको छ।

दोराँत : घुम्नुहोस् त! यो त बड़ा शानदार रहेछ!

श्रीमती जूर्दे : (स्वयम्) हो, अघि-पछि दुवैतिरबाट मूर्ख जस्तो।

दोराँत : साँचो भन्छु, जूर्दे महोदय, तपाईंलाई हेर्ने एक प्रकारको अधीरता थियो। तपाईं त्यो मानिस हुनुहुन्छ, जसको निम्ति मेरो मनमा सर्वाधिक सम्मान छ, अनि आज बिहान, मैले राजाका अन्तरंग व्यक्तिहरूसित तपाईंको चर्चा गरेको थिएँ।

श्री जूर्दे : तपाईं मेरो साह्रै सम्मान गर्नुहुन्छ, महोदय। (श्रीमती जूर्देसित) राजाका अन्तरंग व्यक्तिहरूसित।

दोराँत : यसरी नै लाइराख्नुहोस्।

श्री जूर्दे : महाशय, म जान्दछु, मैले तपाईंको कति सम्मान गर्नु पर्ने हो?

दोराँत : विन्ती छ, लाइराख्नुहोस्, हामी दुवै बीच कुनै औपचारिकता हुनु हुँदैन।

श्री जूर्दे : महाशय!

दोराँत : लाउनुहोस्, जूर्दे महोदय, तपाईं मेरो मित्र हुनुहुन्छ।

**श्री जूर्दे** : महाशय, म तपाईंको दास हूँ।

**दोराँत** : तपाईंले लगाउनु भएन भने म पनि लगाउँदिन।

**श्री जूर्दे** : तपाईंलाई कष्ट दिनु भन्दा म आफू अशिष्ट हुनु मन पराउँछु।

**दोराँत** : तपाईं जान्नुहुन्छ म तपाईंको ऋणी छु।

**श्रीमती जूर्दे** : (स्वयम्) हामी आवश्यकता भन्दा बढ़ी जान्छौं।

**दोराँत** : तपाईंले अनेकौं अवसरमा मलाई उदारतासाथ रुपियाँ ऋण दिनु भएको छ, यो निश्चय नै तपाईंको ठूलो कृपा हो।

**श्री जूर्दे** : महाशय, तपाई ठट्टा गर्नुहुँदैछ।

**दोराँत** : तर, जे जति पनि लिन्छु, फर्काउन जान्दछु, अनि मलाई जुन सुख दिइन्छ, त्यसको निम्ति कृतज्ञ रहनु पनि जान्दछु।

**श्री जूर्दे** : यसमा कुनै सन्देह छैन, महाशय।

**दोराँत** : म ऋणमुक्त हुन चाहन्छु र तपाईंसित हिसाब गर्न आएको छु।

**श्री जूर्दे** : (विस्तारै श्रीमती जूर्देसित) देख्यौ, तिम्रो मूर्खता?

**दोराँत** : म त्यो व्यक्ति हूँ, जो यथाशीघ्र ऋणमुक्त हुन चाहन्छु।

**श्री जूर्दे** : (श्रीमती जूर्देसित, विस्तारै) म तिमीलाई भन्दै थिएँ नि!

**दोराँत** : हेरौं त मैले तपाईंसित कति ऋण लिएको रहेछु।

**श्री जूर्दे** : (श्रीमती जूर्देसित, विस्तारै) देख्यौ, तिम्रो व्यर्थको सन्देह।

**दोराँत** : तपाईंलाई थाह छ, मैले तपाईंसित कति रुपियाँ ऋण लिएको रहेछु?

**श्री जूर्दे** : याद छ, जस्तो मलाई लाग्छ। मैले एउटा सानो हिसाब गरि राखेको छु। यै हो, एकपल्ट तपाईंलाई दुई सय लूई दिएको थिएँ।

**दोराँत** : ठीक हो।

**श्री जूर्दे** : अर्को पल्ट छः कोरी (120)।

**दोराँत** : हो।

**श्री जूर्दे** : अझै एक पल्ट एक सय चालीस।

**दोराँत** : तपाईं ठीक भन्नु हुँदैछ।

**श्री जूर्दे** : सब मिलाएर 460 लुई अर्थात् 5060 पाउण्ड।

**दोराँत** : हिसाब एकदम ठीक छ 5060 पाउण्ड।

**श्री जूर्दे** : एक हजार आठ सय बत्तीस पाउण्ड तपाईंको ड्रेसरलाई।

**दोराँत** : ठीक हो।

**श्री जूर्दे** : दुह हजार सात सय अस्सी पाउण्ड तपाईंको दर्जीलाई।

**दोराँत** : यो साँचो हो।

**श्री जूर्दे** : 4319 पाउण्ड, 12 'सोल' र 8 'देनिये' तपाईंको दोकानेलाई।

**दोराँत** : एकदम ठीक, 12 सोल 8 देनिये, हिसाब ठीक छ।

**श्री जूर्दे** : अनि 1748 पाउण्ड, 7 'सोल', 4 'देनिये' तपाईं को घोड़ावाललाई।

| | | |
|---|---|---|
| दोराँत | : | यो सब साँचो हो। जम्मा कति हिसाब भयो? |
| श्री जूर्दे | : | जम्मा रकम 15800 पाउण्ड। |
| दोराँत | : | जम्मा रकम ठीक छ, 15800 पाउण्ड। यसमा दुई सय 'पिस्तोल' जोड्नुहोस् जुन तपाईले मलाई अहिले दिनु हुनेछ, अनि पूरा रकम हुनेछ 18000 फ्रेंक। यो म पहिलो मौका पर्ने साथ तिर्नेछु। |
| श्रीमती जूर्दे | : | (श्री जूर्देसित, विस्तारै) कसो? मैले ठीक अनुमान गरेको थिइनँ? |
| श्री जूर्दे | : | (श्रीमती जूर्देसित, विस्तारै) चुप। |
| दोराँत | : | के तपाईलाई यो रकम दिन असुविधा होला? |
| श्री जूर्दे | : | अरे होइन। |
| श्रीमती जूर्दे | : | (श्री जूर्देसित, बिस्तारै) यस मान्छेले तपाईलाई आफ्नो दूधालु गाई बनाइरहेको छ। |
| श्री जूर्दे | : | (श्रीमती जूर्देसित) चुप लाग। |
| दोराँत | : | यसरी तपाईलाई कष्ट हुन्छ भने म अन्यत्रै चेष्टा गर्नेछु। |
| श्री जूर्दे | : | होइन, महाशय। |
| श्रीमती जूर्दे | : | (श्री जूर्देसित, विस्तारै) जबसम्म तपाईको सर्वनाश हुँदैन तबसम्म यसलाई शान्ति हुँदैन। |
| श्री जूर्दे | : | (श्रीमती जूर्देसित, विस्तारै) चुप लाग, भन्दैछु। |
| दोराँत | : | तपाईलाई असुविधा हुन्छ भने, भन्नुहोस्। |
| श्री जूर्दे | : | एकदमै हुँदैन, महाशय। |
| श्रीमती जूर्दे | : | (श्री जूर्देसित, विस्तारै) यो पक्का ठग हो। |
| श्री जूर्दे | : | (श्रीमती जूर्देसित, विस्तारै) चुप पनि लाग त। |
| श्रीमती जूर्दे | : | (श्री जूर्देसित, विस्तारै) यसले अन्तिम पाईसम्म दुहुने छ। |
| श्री जूर्दे | : | (श्रीमती जूर्देसित, विस्तारै) चुप लाग्छ्यौ कि लाग्दिनौ? |
| दोराँत | : | यसै त मलाई खुशीसाथ ऋण दिने थुप्रै मित्र छन्, तर तपाई मेरो असल मित्र हुनुहुन्छ, मैले सोचें, अन्यत्र मागेर मैले तपाईसित अन्याय गरेको ठहरिएला। |
| श्री जूर्दे | : | तपाईले मेरो बड़ो सम्मान गर्नु हुँदैछ, महाशय, म तपाईको चीज ल्याउँदैछु। |
| श्रीमती जूर्दे | : | (विस्तारै श्री जूर्देसित) के तपाई यसलाई अझै ऋण दिनु हुँदैछ? |
| श्री जूर्दे | : | (श्रीमती जूर्देसित, विस्तारै) के गरूँ? के तिमी चाहन्छौ, यस स्तरको मानिसलाई 'हुँदैन' भनूँ? यस्तो मान्छे, जसले आजै बिहान राजाका अन्तरंग व्यक्तिहरूसित मेरो चर्चा गरेका छन्। |
| श्रीमती जूर्दे | : | (श्री जूर्देसित, विस्तारै) लौ, तपाई पक्कै बुझ्नु हुनुहुँदो रहेछ। |

## दृश्य-5

(दोराँत, श्रीमती जूर्दे, निकोल)

**दोराँत** : तपाईं साह्रै चिन्तित देखिनु हुन्छ, श्रीमती जूर्दे। के कुरा छ?

**श्रीमती जूर्दे** : मेरो टाउको नसुनिँदा मेरो मुठीभन्दा ठूलो हुन्छ।

**दोराँत** : अनि सुश्री, तपाईंकी छोरी कहाँ छन्? म उनलाई देख्तिनँ।

**श्रीमती जूर्दे** : सुश्री मेरी छोरी जहाँ पनि छे, ठीकै छे।

**दोराँत** : उहाँ कस्ति हुनुहुन्छ?

**श्रीमती जूर्दे** : उ राम्रै आफ्ना दुवै खुट्टामा उभ्भिएकी छे।

**दोराँत** : के कुनै दिन तपाईं उसित राजाकोमा हुने 'ब्याले' या हास्य-नाटक हेर्न चाहनु हुन्न?

**श्रीमती जूर्दे** : हो, साँच्चै। मलाई हाँस्ने ठूलो इच्छा छ, ठूलो इच्छा छ हाँस्ने मलाई।

**दोराँत** : म सोंच्छु, श्रीमती जूर्दे, यौवनमा तपाईंको जो सुन्दरता र मधुर स्वभाव थियो होला त्यस-उसले तपाईंका थुप्रै प्रेमी थिए होलान्।

**श्रीमती जूर्दे** : भयो, महाशय, के श्रीमती जूर्दे लूली भई अथवा उसको टाउको हल्लिन लागेको छ?

**दोराँत** : ओह! श्रीमती जूर्दे, क्षमा चाहन्छु। तपाईं जवान हुनुहुन्छ भनी मैले भूलेछु। म प्रायः सपनामा हराइरहन्छु। विन्ती छ, मेरो अशिष्टता क्षमा गरिदिनु होला।

## दृश्य-6

**श्री जूर्दे** : लिनुहोस, पुरा दुई यस लूई छ।

**दोराँत** : म तपाईंलाई विश्वास दिलाउँछु, जूर्दे महोदय, म सर्वथा तपाईंको हूँ, अनि राज-दरवारमा तपाईंको निम्ति केही गर्न औधी उत्सुक छु।

**श्री जूर्दे** : म तपाईंको धेरै कृतज्ञ छु।

**दोराँत** : यदि श्रीमती जूर्दे राजकीय मनोरंजन हेर्न आउन चाहनुहुन्छ भने उहाँको निम्ति भवनको सबभन्दा राम्रो ठाउँ दिलाउन सक्छु।

**श्रीमती जूर्दे** : श्रीमती जूर्दे तपाईंको कृतज्ञ छ।

**दोराँत** : (श्री जूर्देसित, विस्तारै) जस्तो कि मैले आफ्नो पत्रमा सूचित गरेको छु, हाम्री सुन्दरी मार्क्योनेस साँझ यहाँ आउनु हुनेछ भोज र ब्यालेमा अंश ग्रहण गर्न, अनि मैले कुनै मुश्किलले उहाँलाई तपाईंको आमंत्रण स्वीकार गर्न तैयार गरेको छु।

**श्री जूर्दे** : पर जौं त, खास कुरा छ।

**दोराँत** : आठ दिन भयो तपाईंसित भेट गरेको र मैले तपाईंलाई त्यस हीराको विषयमा कुनै सूचना दिन सकिनँ, जुन तपाईंले उहाँलाई भेंट चढ़ाउन मलाई जिम्मा दिनुभएको थियो। उहाँको हिचकिचाहट हटाउन, मैले कति चेष्टा गर्नु पर्‍यो आज उहाँ तैयार हुनु भएको छ—त्यो स्वीकार गर्नलाई।

**श्री जूर्दे** : उहाँलाई कस्तो लाग्यो?

**दोराँत** : अति सुन्दर! मैले भूल गरिनँ भने त्यो हीराले उनको मनमा तपाईंको राम्रो प्रभाव पार्नेछ।

**श्री जूर्दे** : ईश्वरले यस्तै गरुन्।

**श्रीमती जूर्दे** : (निकोलसित) एकपल्ट उहाँसंग कुरा गर्न लागेपछि उसलाई (दोराँतलाई) छोड़नै सक्नु हुन्न।

**दोराँत** : मैले तपाईंको यस भेंटको मूल्य र तपाईंको प्रेमको उत्कटता सम्झाइ दिएको छु।

**श्री जूर्दे** : तपाईंको यस उदारतादेखि म अभिभूत छु, महाशय, तर म हैरान छु यति ठूला स्तरको मानिस भएर पनि, मेरो निम्ति यस्तो काम गरेर तपाईं आफूलाई तल झार्नु हुँदैछ।

**दोराँत** : तपाईं ठट्टा गर्नु हुँदैछ? मित्रहरू बीच यस्तो सोच्नु हुन्छ? अवसर परे तपाईं मेरो निम्ति यसो गर्नु हुन्न?

**श्री जूर्दे** : निस्सन्देह! हृदयबाट नै।

**श्रीमती जूर्दे** : (निकोलसित) यसलाई देख्दा मेरो दम रोकिन्छ।

**दोराँत** : जहाँसम्म मेरो प्रश्न छ, जब मित्रहरूको सेवाको कुरा आइपर्छ म कुनै कुराको बिचार गर्दिनँ; जब तपाईंले बताउनु भयो कि ती सुन्दर महिलासित, जोसित मेरो सम्बन्ध थियो, तपाईंलाई प्रेम भएको छ भनी मलाई ज्ञात हुन साथै तपाईंले देख्नु भयो, म स्वयम् नै तपाईंको सेवा गर्न तैयार भएँ।

**श्री जूर्दे** : यो ठीक हो। यी उदारताहरूले म चकित् छु।

**श्रीमती जूर्दे** : दुवै खुबै मिलेका छन्।

**दोराँत** : तपाईंले उहाँको हृदय प्रभावित गर्ने राम्रो उपाय अपनाउनु भएको छ। नारीले सबभन्दा बेसी यही चाइन्छन् कि उनको निम्ति खर्च गरियोस्। अनि तपाईंको सँधैको प्रेयसी-गीत, सँधै पठाइने फूल, त्यो राम्रो आतिशबाजी, त्यो हीरा जुन उहाँले तपाईंबाट पाइन् अनि उनको मनोरंजन निम्ति गरिएको तपाईंको आयोजन, यी सब कुराले तपाईंको प्रेमको परिचय दिन्छ, जुन तपाईं स्वयँ उहाँसित भेट गरेर हुन सक्थ्यो।

**श्री जूर्दे** : उनको हृदयको मार्ग पाउन सके यस्तो कुनै पनि खर्च म बेहोर्न तयार हुन्थें। मेरो निम्ति एकजना कुलीन वर्गकी महिलाको सौन्दर्य अत्यन्त आकर्षक छ, अनि यो सम्मान कुनै पनि मोलमा म किन्न सक्छु।

**श्रीमती जूर्दे** : (निकोलसित) यिनीहरू आपसमा यति लामो के गन्थन गर्दैछन्? सुनेर आइज त।

**दोराँत** : साँझ तपाईं अघाउन्जेल उहाँको दर्शन गर्नु होला अनि तपाईंको आँखाको तृप्तिको निम्ति, तपाईंलाई पूरा अवसर दिइनेछ।

**श्री जूर्दे** : पूर्ण स्वन्तत्रताको निम्ति मैले यस्तो उपाय गरेको छु, मेरी श्रीमती साँझको भोजन गर्न आफ्नी बहिनीकोमा जाने छिन् र उहीं बस्ने छिन्।

**दोराँत** : तपाईंले बुद्धिमानी काम गर्नु भएको छ, तपाईंकी स्त्री हाम्रो लागि असुविधाको कारण हुन सक्छिन्। तपाईंको पक्षमा मैले भान्सेलाई आदेश दिएको छु र त्यो चीजको निम्ति पनि जुन ब्यालेमा आवश्यक हुनेछ। यी सब मेरै बन्दोवस्त हो, अनि यदि काम मेरो बिचार अनुकूल भयो भने मलाई विश्वास छ कि...।

**श्री जूर्दे** : (निकोललाई लुकेर सुनेको देखेर हल्का चड़कन गलाउँछ) पख, यति अशिष्ट तँ? (दोराँतसित) कृपया यहाँबाट जौं।

## दृश्य-7

(श्रीमती जूर्दे, निकोल)

**निकोल** : मालिकनी, मेरो चंचलताको निम्ति मैले पिटाई खाएँ, तर म सम्झन्छु, दालमा कालो छ। उहाँले यस्तो विषयको कुरा गर्नु हुँदैथियो, जहाँ तपाईंको उपस्थिति वाञ्छनीय छैन।

**श्रीमती जूर्दे** : निकोल, मलाई आजदेखि आफ्नो पतिमाथि सन्देह उठेको होइन। ममाथि ठूलो विश्वासघात भएको छ, कुनै प्रेम-लीला चलेको हुनुपर्छ, अनि म थाह लगाउने चेष्टामा छु। मलाई मेरी छोरीको चिन्ता छ। तँ जान्दछेस् क्लेओंतले उसलाई कति प्रेम गर्छ? मलाई त्यो मान्छे मन परेको छ, म चाहन्छु उसको प्रेममा सहायता गरुँ, अनि सम्भव भए, उसलाई लुसिल समर्पण गरुँ।

**निकोल** : साँच्चै मालिकनी, तपाईंका यी भावनाले म साह्रै खुशी छु, कारण तपाईंलाई मालिक मन परेको छ भने, मलाई उनको नोकर। म

चाहन्छु ती दुवैको विवाहको छाँयामा हामी दुवैको पनि विवाह होस्।

श्रीमती जूर्दे : जा, मेरो पक्षबाट गएर उसलाई अहिलेनै आउनु भनि दे, अनि उसले पनि मेरी छोरीको विवाह उसित गरिदिनु भनेर मेरो पतिसंग प्रस्ताव राखोस्।

निकोल : हुन्छ मालिकनी, अहिले जान्छु। यो भन्दा राम्रो कुरा अरु के हुन सक्छ? (एक्लै) मलाई लाग्छ, अब मानिसहरू खुशी हुनेछन्।

## दृश्य-8

(क्लेओंत, कोव्येल, निकोल)

निकोल : लौ, मौकामा तपाईंहरू सबैलाई एकै ठाउँ भेटें। मैले खुशीको खबर ल्याएकी छु। अनि म... ...।

क्लेओंत : हट मूर्ख, धोखा दिएर फेरि हामीलाई भूल्याउन यहाँ न आएस्।

निकोल : किन यसरी तपाईं?

क्लेओंत : जाइहाल भन्दैछु र आफ्नो धोखा दिने मालिकनीलाई अब क्लेओंतको सरलताको फायदा उठाउन सक्ने छैनन् भनिदिएस्।

निकोल : यो पनि कस्तो भ्रम हो? प्रिय कोव्येल, भनन यसको के अर्थ हो?

कोव्येल : तेरो प्रिय कोव्येल, कहीं नभएकी दुष्टा! मेरो आँखाको अघिबाट जाइहाल कुरुपा, मलाई चुप लागेर बस्न दे।

निकोल : के तिमी पनि मलाई...?

कोव्येल : मेरो आँखादेखि टाढ़ा जाइहाल अनि मसित कहिल्यै नबोलेस्।

निकोल : हाय! यी दुईलाई के भयो हँ? जानुपर्‍यो, आफ्नो मालिकनीलाई यो सुन्दर कथा सुनाइ दिऔं।

## दृश्य-9

(क्लेओंत, कोव्येल)

क्लेओंत : एकजना प्रेमीसंग, त्यो पनि, सबभन्दा विश्वासी र भावुक प्रेमीसंग यस्तो व्यवहार?

कोव्येल : हामी दुवैसंग भयंकर नराम्रो व्यवहार भएको छ।

क्लेओंत : मैले एकजना व्यक्तिप्रति सम्भव भए जति प्रेम र कोमल भाव लिएकोछु! म संसारमा उसलाई छोड़ी अरु केही चाहन्न अनि मेरो मनमा उ मात्रै छ; उ नै मेरा सम्पूर्ण चिन्तन हो, मेरा सबै

अभिलाषाहरू, अनि मेरा सबै सुख हो, म केवल उसैको कुरा गर्छु, उसैको बारेमा सोंच्छु, उसैको बारेमा चिन्ता गर्छु। मेरो श्वासमा उही छ, हृदय उसैमा अर्पित छ, अनि यत्रो प्रेमको यही पुरस्कार हो? दुई दिन उसलाई न देखे, त्यो मेरो निम्ति दुई भयंकर युग हुन जान्छ। संयोगवश, उसित मेरो भेट हुन्छ, उसलाई देख्नै मेरो हृदय गदगद भएर आउँछ, मेरो खुशी मेरो अनुहारमा झल्किन्छ, म आनन्दाभिभूत भएर उतिर कुद्छु; तर त्यो धोखेबाजले आँखा तर्छे, अनि तुरुन्तै निस्किन्छे, मानौं जीवनमा कहिल्यै उसले मलाई देखेकी नै थिइन।

**कोव्येल** : मेरो पनि यही भनाई छ।

**क्लेओंत** : यस कृतघ्न लुसिलको धोखाको कुनै उत्तर छ, कोव्येल?

**कोव्येल** : अन मालिक, त्यो दुष्टा निकोलको?

**क्लेओंत** : उसको सौन्दर्यको लागि यत्रो हार्दिक त्याग गरेर, यत्रो निश्वास लिएर और यत्रो कामना गरेर पनि?

**कोव्येल** : निरन्तर यत्रो सम्मान, यत्रो चिन्ता र भान्सा घरमा उसलाई यत्रो सहायता गरेर पनि।

**क्लेओंत** : उसको पैतालामा मैले यति आँसु बगाएँ।

**कोव्येल** : मैले उसको लागि कुँवाबाट पानी निकालें।

**क्लेओंत** : मैले आफू भन्दा बढ़ता उसलाई खुशी राख्न कति प्रेम-भावना व्यक्त गरें?

**कोव्येल** : उसको ठाँउमा ब्रुश चलाउँदा मैले कति गर्मी सहें?

**क्लेओंत** : उपेक्षाले गर्दा मदेखि टाढ़ा भाग्छे।

**कोव्येल** : उ निर्लज्जतासथ आफ्नो पीठ्यूँ फर्काउँछे।

**क्लेओंत** : यो यस्तो धोखा हो जसलाई कठोर भन्दा कठोर दण्ड हुनुपर्छ।

**कोव्येल** : यो यस्तो गद्दारी हो जसको लागि हजार थप्पड़ लगाउनुपर्छ।

**क्लेओंत** : विन्ती छ, मसित कहिल्यै उसको कुरा नगर्नू।

**कोव्येल** : मालिक, मैले? भगवानले बचाउन्।

**क्लेओंत** : कहिल्यै त्यस विश्वासघातिनीलाई क्षमा गर्नु भनी तैंले नभन्नू।

**कोव्येल** : तपाईं नडराउनु होला।

**क्लोओंत** : होइन, हेर, उसलाई बचाउनलाई भनिने जम्मै कुरा व्यर्थ हुनेछ।

**कोव्येल** : कसले यस्तो सोंच्छ?

**क्लेओंत** : उसको विरुद्ध आफ्नो रोष यथावत् राख्न चाहन्छु, उसित सबै सम्बन्ध तोड़न चाहन्छु।

**कोव्येल** : म सहमत छु।

क्लेओंत : उसकोमा आइरहनु हुने काउण्ट महोदय उसको दृष्टिमा जमे जस्तो छ; म हेर्दैछु उसको मन उच्चताको उज्यालोमा चम्किन लाग्छ। तर आफ्नो प्रतिष्ठाको लागि उसको अस्थिरताजन्य चमक-दमक रोक्न आवश्यक छ। मदेखि जति टाढ़ा चेष्टा गर्छ, म पनि उदेखि त्यति नै टाढ़ा जानेछु, जसले गर्दा उसले मलाई त्याग्ने सम्पूर्ण सम्मान पाउन नसकूनु।

कोव्येल : एकदमै ठीक भन्नु भयो, तपाईंको भावनाहरूसित सहमत छु।

क्लेओंत : मेरो घृणा बढ़न दे अनि मेरो निश्चयलाई यस्तो सहारा दे, जसले उप्रति रहेको मेरो प्रेमभावले ममा फेरि उसको याद न जगाओस्। विन्ती गर्छु, उसको जति निन्दा गर्न सक्छस्, गर। मेरो नजरमा तुच्छ देखिने उसको चित्र बना, अनि उसमा जति दोष देखाउन सक्छस्, देखा, जसले गर्दा उसँग मेरो मन अघाओस्।

कोव्येल : मालिक, त्यो साह्रै नखरा देखाउँछे, खुब सिंगारिन्छे, उसले तपाईंसित के प्रेम गर्छे होला? म त उसलाई साधारण देख्छु अनि तपाईंलाई सुहाउने यस्ती सैकड़ौं आइमाई पाउनु हुनेछ। पहिलो कुरा त के भने त्यसका आँखा साना छन्।

क्लेओंत : ठीकै हो, उसको आँखा साना छन्, त्यसमा उज्जवलता छ, ज्योति छ अनि छ भित्रसम्म पस्न सक्ने शक्ति। ती साह्रै प्रभावशाली छन्।

कोव्येत : उसको मूख ठूलो छ।

क्लेओंत : हो, तर त्यसमा त्यो शील छ, जो अरुमा छैन अनि त्यो मुख हेर्दा हेर्दै अभिलाषाहरूलाई जगाउँछ। त्यो मुख सबभन्दा आकर्षक र सबभन्दा प्रिय छ।

कोव्येल : उच्चतामा पनि उ साह्रै अग्लि होइन।

क्लेओंत : हो, तर जीउ-डाल र त्यसको गठन राम्रो छ।

कोव्येल : आफ्नो बोली-चाली र चाल-चलनमा उ एकप्रकारले बेहोशीपना देखाउँछे।

क्लेओंत : सत्य हो, तर यसमा एउटा सुन्दरता छ। उसको ढंग आकर्षक छ। थाह छैन, हृदयलाई प्रभावित गरिहाल्ने त्यसमा त्यस्तो के जादू छ?

कोव्येल : बुद्धिमा...।

क्लेओंत : अहा! उसको बुद्धि अत्यन्त सूक्ष्म, अत्यन्त कोमल छ।

कोव्येल : उसको कुराकानी... ...।

क्लेओंत : उसको कुरा गराई कत्ति आकर्षक छ?

कोव्येल : उ प्रायः गम्भीर देखिन्छे।

क्लेओंत : के तँ चाहन्छस् आफ्नो प्रसन्नता उ सबै जगह देखाओस्, उसको

आनन्द सँधै मुखरित होस्? यो भन्दा ठूलो नारीहरूले हर कुरामा हाँस्नु जस्तो अशिष्टता केही हुँदैन।

**कोव्येल** : तर उसको जस्तो भ्रान्ति संसारमा कतै देखिन्दैन।

**क्लेओंत** : हो, उसमा भ्रान्ति छ म मान्छु, तर सुन्दरीहरूका सबै कुराहरू राम्रा हुन्छन्, उनका सबै कुराहरू सत्य हुन्छन्।

**कोव्येल** : तपाईंको रंग-ढंग देखेर त लाग्छ अझै पनि उसित प्रेम गर्न चाहनु हुन्छ।

**क्लेओंत** : म? म मर्नु बढ़ी मन पराउँछु; म उसलाई उति नै घृणा गर्छु, जति उसित प्रेम गरेको थिएँ।

**कोव्येल** : किन? तपाईं उसलाई यति पूर्ण सम्झिनु हुन्छ भने?

**क्लेओंत** : यसैले त मेरो प्रतिकार-भावना अझै उग्र हुनेछ। यसरी आफ्नो हृदयको शक्ति धेरै देखाउन सक्छ—उसित घृणा गर्नेछु, उसलाई त्याग्नेछु, उ जो मेरा लागि साह्रै राम्री छ, आकर्षणले युक्त छ, प्रिय छ। उ आउँदै छे।

## दृश्य-10

(क्लेओंत, लुसिल, कोव्येल, निकोल)

**निकोल** : मेरो त साह्रै अपमान भयो।

**लुसिल** : तिमीलाई भनेकै कुरा हुनेछ, निकोल। लौ, उ त्यहाँ छ।

**क्लेओंत** : म उसित कुरा पनि गर्न चाहन्नँ।

**कोव्येल** : म तपाईंको अनुकरण गर्नेछु।

**लुसिल** : कसो क्लेओंत, तिमीलाई के भयो?

**निकोल** : तिमीलाई के भयो, कोव्येल?

**लुसिल** : कुन चिन्तामा छौ?

**निकोल** : तिमी किन रिसाएका छौ?

**लुसिल** : के तिमी लाटा हौ, क्लेओंत?

**निकोल** : के तिमीले बोल्नु भुल्यौ, कोव्येल?

**क्लेओंत** : यस अलच्छिनालाई हेर त।

**कोव्येल** : कस्ती छुच्ची छे?

**लुसिल** : मलाई लाग्छ, बेलुकीको त्यो भेटले तिमीले मलाई भूल बुझेका छौ।

**क्लेओंत** : ओ हो! हामी आफूले गरेको व्यवहार राम्ररी बुझ्दछौं।

**निकोल** : बिहानको हाम्रो व्यवहारले नराम्रो ठान्यौ?

**कोव्येल** : कारण बुझ्यौ?

लुसिल : कसो क्लेओंत, तिमी रिसाएको यही कारण होइन?

क्लेओंत : हो धोखेबाज, यही हो, सुनिराख। म तिमीलाई भनिदिन चाहन्छु, तिमी आफ्नो विश्वासघातमा सफल हुन सक्दिनौ, जस्तो तिमी सोच्दछौ। म, म पहिले तिमीसँग सम्बन्ध बिच्छेद गर्न चाहन्छु, अनि तिमीले मलाई बाहिर निकाल्ने मौका पाउने छैनौ। यसमा सन्देह छैन, तिम्रो प्रेममा विजय पाउन मलाई कष्ट हुनेछ, यसमा मलाई चिन्ता हुनेछ। अलिक समयसम्म मलाई कष्ट हुनेछ, तर म सबै सहनेछु, म बरु आफ्नो हृदयमा दूलो पार्नेछु, तर तिमीकहाँ फर्किने कमजोरीको शिकार हुने छुइनँ।

कोव्येल : म पनि यस्तै गर्नेछु।

लुसिल : लौ, अकारण नै के को हो-हल्ला? म तिमीलाई बताउँछु क्लेओंत, बिहान मैले तिमीसँग किन भेट गरिनँ।

क्लेओंत : होइन, म केही सुन्न चाहन्नँ।

निकोल : म तिमीलाई बताउँछु किन हामीले चाड़ै जानु पर्‍यो!

कोव्येल : म केही सुन्न चाहन्नँ...।

लुसिल : सम्झ कि बिहान... ...।

क्लेओंत : होइन, म भन्दै छु।

निकोल : थाह छ कि...।

कोव्येल : होइन, विश्वासघातिनी।

लुसिल : सुन।

क्लेओंत : पर्दैन।

निकोल : मलाई भन्नु त देऊ।

कोव्येल : म बहिरो छु।

लुसिल : क्लओंत।

क्लेओंत : पर्दैन।

निकोल : कोव्येल।

कोव्येल : होस् पर्दैन।

लुसिल : पख।

क्लेओंत : व्यर्थका कुरा।

निकोल : मेरो कुरा सुन।

कोव्येल : बबकब मात्रै...।

लुसिल : एकछिन...।

क्लेओंत : होस् पर्दैन।

निकोल : केही धैर्य राख।
कोव्येल : धत्।
लुसिल : दुइटा कुरा त सुन।
क्लेओंत : पर्दैन, भयो।
निकोल : एउटा कुरा...।
कोव्येल : अब मलाई कुनै वास्ता छैन।
लुसिल : मेरो कुरा नसुने नसुन त, आफ्नै भ्रममा बसिरहौ, जे मन लाग्छ, गर।
निकोल : त्यसो हो भने जे मन लाग्छ, सम्झ।
क्लेओंत : सुनौं त यस आदर-भावको के कारण छ?
लुसिल : अब मलाई केही भन्ने इच्छा छैन।
कोव्येल : सुनौं त के कुरा छ?
निकोल : अब म भन्न चाहन्दिनँ।
क्लेओंत : भनन...।
लुसिल : होइन, म केही भन्न चाहन्दिनँ।
कोव्येल : सुनाउ त।
निकोल : होइन, म केही सुनाउदिनँ।
क्लेओंत : कृपा गर...।
लुसिल : अहँ, भन्दैछु।
कोव्येल : दया गर।
निकोल : अहँ, भन्दिनँ।
क्लेओंत : बिन्ती छ।
लुसिल : पर्दैन।
कोव्येल : बिन्ती गर्छु।
निकोल : जाऊँ यहाँबाट।
क्लेओंत : लुसिल!
लुसिल : होस्, बोलाउनु पर्दैन।
कोव्येल : निकोल।
निकोल : बोल्नु पर्दैन।
क्लेओंत : भगवानको नाममा...।
लुसिल : मलाई चाहिएन...।
कोव्येल : भन मलाई।
निकोल : अहँ।

क्लेओंत : मेरो सन्देह हटाऊ।
लुसिल : अहँ, म केही गर्दिनँ।
कोव्येल : मेरो मनलाई शान्त गर।
निकोल : होइन, म चाहन्दिनँ।
क्लेओंत : ठी छ त विश्वासघातिनी, मेरो मनको दुःख मेटाउने तिमी थोरै वास्ता गर्छ्यौ? अनि मप्रति गरिएको व्यवहारलाई तिमी सिद्ध गर्न चाहन्छ्यौ, यसकारण अन्तिम पल्टको निम्ति तिमीले मलाई हेरिरहेकी छौ। म तिमीदेखि टाढ़ा जानेछु, अनि दुःख र प्रेमले मर्नेछु।
कोव्येल : अनि म, यहाँको पछि-पछि हिंड़नेछु।
लुसिल : क्लेओंत!
निकोल : कोव्येल!
क्लेओंत : किन?
कोव्येल : के चाहन्छयौ?
लुसिल : कहाँ जाँदैछौ?
क्लेओंत : जहाँ मैले तिमीलाई भनें।
कोव्येल : हामी मर्न जान्छौ।
लुसिल : तिमी मर्न जान्छौ, क्लेओंत?
क्लेओंत : हो निष्ठुरी. तिमी यही चाहन्छयौ, होइन?
लुसिल : तिमी मर, म यही चाहन्छु।
क्लेओंत : हो, तिमी यही चाहन्छ्यौ।
लुसिल : तिमीलाई कसले भन्यो?
क्लेओंत : तिमी मेरो सन्देह हटाउन चाहँदिनौ भने तिमी मेरो मृत्यु चाहन्छौ।
लुसिल : यो मेरो दोष हो? तिमीले मेरो कुरा सुन्न चाहेको भए म बताउने थिएनँ? बिहानको जुन घटनाको तिमीलाई गुनासो छ, त्यो मेरी बूढी सानीमाको उपस्थितिको कारणले भएको हो? उहाँले भन्नु हुन्छ, पुरुषको सामु जानै मात्रले केटीहरूको इज्जत जान्छ। उहाँले प्रायः नै यस विषयमा हामीलाई अर्ती दिनुहुन्छ, हाम्रो सामु पुरुषको चित्र यति डरलाग्दो बनाउनु हुन्छ कि न चाहेर पनि केटीहरूले भाग्नै पर्छ।
निकोल : यो नै घटनाको रहस्य हो।
क्लेओंत : तिमीले मलाई धोखा त दिएकी होइनौं, लुसिल?
कोव्येल : बहाना त गरेकी होइनौ?
लुसिल : शत-प्रतिशत साँचो कुरा हो।

**निकोल** : यही कुरा नै हो।

**कोव्येल** : यसलाई मानिलिनु त?

**क्लेओंत** : ओह! लुसिल, तिम्रो मुखबाट निस्केको एउटा कुराले मेरो मनको कुरा मनमैं रहन्छ। हामी जसलाई प्रेम गर्छौं, उसको कुराले हामीलाई कति सहजै प्रभावित गर्छ।

**कोव्येल** : यी चुँडेलहरूद्वारा हामी कति सहजै फकाइन्छौं।

## दृश्य-11

(श्रीमती जूर्दे, क्लेओंत, लुसिल, कोव्येल, निकोल)

**श्रीमती जूर्दे** : तपाईंसित भेटेर मलाई अपार खुशी लागेको छ क्लेओंत, अनि तपाईं समयमा आउनु भएको छ। मेरो श्रीमान आउनु हुँदैछ। तपाई लुसिलसँग विवाह गर्न चाहनु हुन्छ भनी चाँड़ै प्रस्ताव राख्नुहोस्।

**क्लेओंत** : ओ हो! महोदया, तपाईंको यो कुरा कति मीठो छ? यसले मेरो अभिलाषाहरूलाई स्फूर्ति दिन्छ। मेरो निम्ति यो भन्दा राम्रो आदेश, यो भन्दा ठूलो कृपा अरु के हुनसक्छ?

## दृश्य-12

(श्री जूर्दे, श्रीमती जूर्दे, क्लेओंत, लुसिल, कोव्येल; निकोल)

**क्लेओंत** : महोदय, धेरै दिनदेखि तपाईंसित एउटा प्रस्ताव राख्ने विचार गरिरहेको छु, अनि यसको लागि मैले कसैको सहारा लिन चाहिनँ। यस प्रश्नसित मेरो गहिरो सम्बन्ध छ, यसकारण यो भार आफैले लिएँ, कुरा नघुमाई भन्न चाहन्छु तपाईंको जुवाईं हुने सम्मान पाए म ठूलो कृपा सम्झिने छु। मेरो विन्ती छ, तपाईंले मलाई यो सम्मान दिनुहोला।

**श्री जूर्दे** : तपाईंलाई उत्तर दिन अघि, श्रीमान, यो बताउनुहोस्, तपाई उच्चवर्गको हुनुहुन्छ कि हुनुहुन्न?

**क्लेओंत** : महोदय, आधा सरो मानिस यस प्रश्नको उत्तर दिन हिचकिचाउँदैनन्। यस शब्दको प्रयोग हलुकैसित गर्न सकिन्छ। यसको प्रयोगमा संकोच गरिन्दैन, अनि आज, यसको प्रयोगले त चोरी पनि उचित ठानिन्छ। जहाँसम्म मेरो प्रश्न छ, म तपाईंलाई स्पष्ट भनि दिऊँ, यस प्रश्नमा मेरो विचार धेरै कठोर छ। म सम्झिन्छु, सबैप्रकारको ढर्रा एकजना इमान्दार मान्छेको निम्ति अनुचित हुन् र यो नीचता

हो कि हामीले आफ्नो स्थिति लुकाउँ, जसमा भगवानले हामीलाई जन्म दिएका छन् औ हामी दुनियाँको सामु एउटा झूठो पदवी लिएर आउँ, अनि हामी आफूलाई त्यस्तो बनाउने चेष्टा गरौं जस्तो हामी छैनौं। म एक यस्तो आमा-बाबुको छोरा हूँ, जसको जीवन सम्मानपूर्ण छ। मैले सेनामा छः वर्ष काम गर्ने सम्मान पाएको छु अनि मसित समाजमा एक राम्रो स्थिति कायम राख्ने पूर्ण साधन छन्। तर यी सब-हुँदा पनि, म आफूलाई एक यस्तो नाम दिन चाहन्नँ, जसले गर्दा म जस्ता अरुले बुझून् कि म झूठो शान देखाइरहेको छु, अनि तपाईंलाई स्पष्ट रूपमा भनूँ म उच्चवर्गको होइन।

**श्री जूर्दे** : उसो भए, सुन्नुहोस्। मेरी छोरी तपाईंलाई दिन्नँ।

**क्लेओंत** : किन, महोदय?

**श्री जूर्दे** : तपाई उच्चवर्गको हुनुहुन्न, यसैले मेरी छोरी पाउनु हुन्न।

**श्रीमती जूर्दे** : उच्चवर्ग भन्दा तपाईंको के आशय छ? के हामीहरू सेन्ट लुईका वंशज हौं।

**श्री जूर्दे** : तिमी चुप लाग, म जान्दछु तिम्रो मतलब के छ?

**श्रीमती जूर्दे** : हामी असल बनियाको वंशज छोड़ी अरु के हौं?

**श्री जूर्दे** : हेर्, आफ्नै बदनामी।

**श्रीमती जूर्दे** : के तपाईंको र मेरा पिताहरू बनिया थिएनन्?

**श्रीं जूर्दे** : आइमाहरूमाथि चट्याङ परोस्। यी कुरालाई कहिल्यै छोड़दिनन्। तिम्रो पिता बनिया थिए त उनको भाग्यले, तर जहाँ सम्म मेरो पिताको प्रश्न छ, अबुझहरूले नै यसो भन्छन्। मैले तिमीलाई जो भन्नु छ, त्यो यो हो मलाई एकजना उच्चवर्गको जुँवाई चाहिएको छ।

**श्रीमती जूर्दे** : तपाईंकी छोरीको निम्ति यस्तो जुँवाई चाहिन्छ, जो उसको लायक होस् अनि एकजना इमान्दार, धनी र सुडौल मानिस एकजना रुञ्जे र बेडौल धनाढ्य भन्दा कता-कता राम्रो हो।

**निकोल** : यो ठीक हो, हाम्रो गाउँमा त्यस धनीको छोरा छ। मैले यस्तो कुरुप, मूर्ख र जोकर जस्तो मानिस कहीं देखिनँ।

**श्री जूर्दे** : तँ पाखे, चुप लाग। कुरा गर्दा-गर्दै यसले सँधै बीचमा टोक्ने गर्छे। मसित मेरो छोरीको निम्ति पर्याप्त सम्पति छ, मलाई मात्र प्रतिष्ठा चाहियो, अनि म उसलाई मार्कीज (मार्क्योनेस) बनाउनु चाहन्छु।

**श्रीमती जूर्दे** : मार्कीज?

**श्री जूर्दे** : हो, मार्कीज।

**श्रीमती जूर्दे** : हाय! भगवानले रक्षा गरुन्।

**श्री जूर्दे** : यस कुराको मैले निर्णय लिइसकेको छु।,

**श्रीमती जूर्दे** : यो एउटा यस्तो कुरा हो जसमा म सहमत हुन सक्तिनँ। आफू भन्दा ठूलोसित सम्बन्ध अप्रिय र असुविधाजनक हुन्छ। म चाहदिनँ मेरो जुँवाईले मेरी छोरीलाई, उसको आमा-बाबु उच्चारण गरेर गाली गरोस!, अनि मेरी छोरीका नानीहरू मलाई हजूरआमा भन्न लजाऊन्। उ कुनै दिन ठूली मेमको ठाँट-बाँटमा मलाई हेर्न आए भने अनि बिर्सेर बस्तीको कुनै व्यक्तिलाई शुभेच्छा-नमस्कार गर्न भूली भने मानिसहरू त्यत्ति खेरै हजारौं उल्टा कुरा भन्न पछि हट्दैनन्, भन्नेछन् 'देख्यौ, यस ठूली मेम साहबलाई, क्या शान देखाइरहेकी छ? यो श्री जूर्देकी छोरी हो, जो बचपनामा हामीसित खेलेर खुशी हुन्थी। उ पहिलेदेखि नै यसरी बन्निएकी थिइन् अनि उसको बाजे बोज्यूले, सेंतिनोसाँको दरबारमा लुगा बेच्थे। तिनीहरूले आफ्नो सन्तानको लागि सम्पति जमा गरेका थिए, जसको निम्ति परलोकमा धेरै मूल्य तिरिरहेका होलान् कारण इमान्दार रहेर थोरै मानिस धनी हुन्छन्।' म यी व्यर्थका कुराहरू सुन्न चाहिन्दनँ; संक्षेपमा, मलाई एकजना यस्तो मानिस चाहियो, जो मेरी छोरी पाएर मप्रति कृतज्ञ रहोस् अनि म भन्न सकूँ–'यहाँ बस्नुहोस्, जुँवाई साहेब, मसित खाना खानुहोस्।'

**श्री जूर्दे** : सानो मान्छेको सानै चाला हुन्छ। मलाई अब केही नभन। जे भए पनि, मेरी छोरी मार्कीज हुनेछ, अनि तिमीले मलाई रीस उठायौ भने म उसलाई 'दूशे स' (अंग्रेज़ी डचेस) बनाउने छु।

**श्रीमती जूर्दे** : क्लेओंत, अहिल्यै हिम्मत नहार्नुहोस्। (लुसिलसित) मेरो कुरा सुन छोरी, यहाँ आएर आफ्नो बाबुलाई 'तिमी क्लेओंतकी हुन नसके कसैकी हुने छैनौ' भनी दृढ़तापूर्वक भन।

## दृश्य-13

(क्लेओंत, कोव्येल)

**कोव्येल** : आफ्नो उच्च-भावनाहरू लिएर धैरे राम्रो काम गर्नु भयो तपाईंले।

**क्लेओंत** : के चाहन्छस्? यस सम्बन्धमा मेरो एउटा निश्चित धारणा छ, जुन म कसैको सल्लाहमा बदलिन सक्दिनँ।

**कोव्येल** : यस्तो मानिसको कुरालाई गम्भीरतापूर्वक विचारेर तपाईं आफ्नै

हाँसो उड़ाउन चाहनु हुन्छ? देख्नुहुन्न उ पगला हो? तपाईं उसको बौलट्टीपनसित सहमत हुनु भयो भने कस्तो लाग्ला?

क्लेओंत : ठीक भनिस्, तर श्री जूर्देको जुँवाई हुनको लागि धनी भएको प्रमाण दिनु पर्छ भन्ने कुरा मैले सोंचिनँ।

कोव्येल : हा! हा! हा!

क्लेओंत : किन हाँसेको?

कोव्येल : यस मानिसलाई उल्लू बनाउने एउटा उपायको सम्झना भयो, यसले तपाईं जे चाहनु हुन्छ त्यो पनि पाउनु हुनेछ।

क्लेओंत : कसरी?

कोव्येल : कुरा बड़ो चाख्लाग्दो छ।

क्लेओंत : आखिर के कुरा हो?

कोव्येल : यता एउटा स्वाँग प्रचलित छ, जुन यहाँ ठ्याक्क मिल्नेछ। म एउटा लीला रच्नेछु। जसमा हामीले अर्कै रूप लिनुपर्छ। यो सब ठट्टा जस्तो देखिन्छ, तर उसित जे पनि गर्न सकिन्छ, धेरै उपाय सोच्ने काम छैन। उ एकजना यस्तो मानिस हो जो आफ्नो अभिनय राम्रो गर्न सक्छ अनि हामी जो गराउने छौं, त्यसले गर्नेछ। मसित नट छ, पोशाक छ, मलाई केवल अभिनय गर्न दिनुहोस्।

क्लेओंत : तर मलाई भन्न...।

कोव्येल : म तपाईलाई सबै कुरा भन्ने छु। हामी यहाँबाट हटौं, उ फेरि आउँदे छ।

## दृश्य-14

(श्री जूर्दे, अनुचर)

श्री जूर्दे : यो के मूर्खता हो? यिनलाई ठूला-बड़ा सामन्तहरूको निन्दा गर्नु मात्र आउँछ, तर ठूला सामन्तहरूको अनुकरण गर्नु बाहेक मलाई अरु केही आउँदैन; जसमा केवल प्रतिष्ठा र शिष्टता छ। म त चाहन्छु मेरो जन्म त 'काउण्ट' वा 'मार्किवस' घरमा हुँदो हो। चाहे मेरो हातमा दुइटा औंला नै किन कम्ती नहोस्?

अनुचर : मालिक, काउण्ट साहेब, हेर्नुहोस्। उ एकजना मेम साहेबको हात समातेर आउँदैछन्।

श्री जूर्दे : हे भगवान! मैले केही आदेश दिनु छ। एकछिनमा आउँदैछु भनी उनीहरूलाई भनि दे।

## दृश्य-15

(दोरिमेन, दोराँत, अनुचर)

**अनुचर** : मालिक एकैछिनमा यहाँ आउनु हुँदैछ।

**दोराँत** : ठीक छ।

**दोरिमेन** : म जान्दिनँ दोराँत, यो पनि एउटा आश्चर्यजनक कदम हो, तपाईंसित म एक यस्तो घरमा आएकी छु; जहाँ म कसैलाई चिन्दिनँ।

**दोराँत** : महाशया, तपाईंको मनोरंजनको निम्ति मेरो प्रेमले कुन ठाउँ पो रोज्थ्यो र? बदनामीको डरले न तपाईंले आफ्नो घर रोज्नु हुन्थ्यो, न त मेरोनै।

**दोरिमेन** : तर तपाईं देख्नु हुन्न, सँधै म कुनै सोंच-बिचार बिना तपाईंको प्रेमको प्रदर्शनमा बाँधिन्दै आइरहेकी छु। म भरसक जोगिन चाहन्छु, तर तपाईंको आग्रहले थाक्छु। तपाईं मा भएको शिष्टतापूर्ण हठले म बिस्तारै ती सबै कुरा मान्न लागेकी छु, जुन तपाईं चाहनु हुन्छ। पहिले आउनु-जानु शुरु भयो, त्यसपछि प्रेम-प्रदर्शन, फेरि प्रेयसी-गीत र मनोरंजनको आयोजन, अनि अन्तमा, उपहारको पालो आयो। म यी सबै कुराको विरोधमा छु, तर तपाईं हतोत्साह हुँदै हुनुहुन्न, अनि विस्तारै तपाईंले मेरो निश्चयलाई जित्न लाग्नु भएको छ। म त अब केही भन्न सक्तिनँ, अनि मलाई लाग्छ अन्तमा तपाईंले मलाई विवाहकोलागि पनि राजी पार्नु हुनेछ, जसबाट म धेरै टाढ़ा बस्न चाहन्छु।

**दोराँत** : साँच्चै भन्दैछु, महाशया, अहिले सम्म त तपाईंको विवाह भइसक्नु पर्ने हो। तपाईं विधुई हुनुहुन्छ, अनि आफैमा निर्भर गर्नु हुन्छ। म पनि स्वयम् आफ्नो मालिक हूँ। तपाईंलाई प्राण भन्दा प्यारो गर्छु। फेरि किन आजदेखि नै तपाईं मेरो खुशीको कारण नबन्ने?

**दोरिमेन** : हे भगवान! सुखी जीवनको लागि दुवैपट्टि, कतिपय गुण चाहिन्छ दोराँत, अनि प्रायः देखिएको छ दुइ अत्यन्त बुद्धिमान व्यक्तिहरूलाई पनि सन्तोषजनक सम्बन्ध जोड़नु हम्मे-हम्मे पर्छ।

**दोराँत** : महाशया, यत्रो मुश्किलको कल्पना गरेर तपाईं ठट्टा गर्नु हुँदैछ? अनि तपाईंको जुन अनुभव छ, त्यो सबैको निम्ति उचित नहुनु पनि सक्छ।

**दोरिमेन** : म बारम्बार यसै कुरामा आउँछु। तपाईंले ममाथि गरेको खर्च देख्दा, मलाई दुइटा कारणले चिन्ता हुन्छ—एक त मलाई यस खर्चले

बाँध्छ; नरिसाउनु होला, अर्को मलाई विश्वास छ तपाईं यी सब खर्च कुनै असुविधा बिना गर्नु हुन्न होला, अनि म यो चाहन्नँ।

दोराँत : अरे महाशया, यो केही होइन, अनि यसले...।

दोरिमेन : मलाई थाह छ के भनिरहेकी छु; अरु चीजहरू भन्दा तपाईंले जबरजस्ती मलाई जुन हीरा दिनु भयो, त्यसको मोल...।

दोराँत : हेर्नुहोस् महाशया, कृपा गरेर यस्तो चीजलाई मेरो प्रेम तपाईंको योग्य ठान्दैन, यत्रो महत्व नदिनुहोस्, अनि...। लौ त घरको मालिक आइरहेका छन्।

## दृश्य-16

(श्री जूर्दे, दोरिमेन, दोराँत, अनुचर)

श्री जूर्दे : (दुइपल्ट अभिवादन गरी, दोरिमेनको एकदमै छेऊमा पुगेर) अझै पछि सर्नुहोस्, महोदया।

दोरिमेन : किन?

श्री जूर्दे : कृपया एक पाइलो पछि सर्नुहोस्।

दोरिमेन : किन होला?

श्री जूर्दे : अलिकति पछि सर्नुहोस्, तेस्रोको लागि।

दोराँत : महाशया, जूर्दे महोदयलाई थाह छ, कोसित भेट्नु हुँदैछ।

श्री जूर्दे : महाशया, यो मेरो निम्ति एउटा ठूलो सम्मान हो कि मैले तपाईंको कृपापूर्ण दर्शनको सुखले सुखी हुने सौभाग्य पाएँ, अनि तपाईंको गुणको योग्य हुने ममा त्यो गुण भए अनि यदि ईश्वर...मेरो सौभाग्यदेखि ईर्ष्या गर्नेहरू...मलाई योग्य हुने सौभाग्य दिए त...।

दोराँत : जूर्दे महोदय, पर्खनुहोस्, यहाँ ठूल्ठूला प्रशंसा मन पराउनु हुन्न। (दोरिमेनसित, बिस्तारै) देख्नु हुँदैछ, यिनी एकजना राम्रो बनिया हो, आफ्नो सबै रंग-ढँगमा निपट मूर्ख छ।

दोरिमेन : (त्यसरी नै) यिनलाई यस्तो रंग-ढंगमा कुनै असुविधा हुँदैन।

दोराँत : (प्रकट) महाशया, यहाँ मेरो सबभन्दा प्रिय मित्र हुनुहुन्छ।

श्री जूर्दे : तपाईंले मेरो धेरै सम्मान गर्नुहुँदैछ।

दोराँत : एकदम शानदार व्यक्ति हुनुहुन्छ।

दोरिमेन : मेरो हृदयमा यहाँको लागि धेरै सम्मान छ।

श्री जूर्दे : यस कृपाको योग्य बन्न सक्ने मैले अहिलेसम्म त्यस्तो केही गरेकै छैन, महोदया।

दोराँत : (श्री जूर्देसित, बिस्तारै) हेर्नुहोस्, सावधान रहनुहोला, औ तपाईंले

उहाँलाई दिनु भएको हीराको चर्चा नगर्नुहोला।

**श्री जूर्दे** : (दोराँतसित, विस्तारै) हीरा कस्तो लाग्यो, त्यो पनि नसोध्नु?

**दोराँत** : (श्री जूर्देसित, बिस्तारै) के भन्नु भयो? खूब होशियार रहनुहोला। यो तपाईंको लागि राम्रो नहोला, अनि शानदार मानिस जस्ता देखिनुलाई तपाईंले हीरा नदिए झैं गर्नुपर्छ। (प्रकट) जूर्दे महोदय भन्नु हुँदैछ, यहाँलाई आफ्नो घरमा देखेर गद्गद् हुनु भएको छ।

**दोरिमेन** : यहाँले मेरो धैरै सम्मान गर्नुहुँदैछ।

**श्री जूर्दे** : (दोराँतसित, विस्तारै) म कृतज्ञ छु, प्रिय मित्र, तपाईंले मेरो तरफबाट उहाँलाई यति भनिदिनु भयो।

**दोराँत** : (श्री जूर्देसित, विस्तारै) यहाँलाई यहाँसम्म त्याउन मैले धेरै कष्ट गर्नुपरेको छ।

**श्री जूर्दे** : (दोराँतसित, विस्तारै) म, जान्दिनँ कसरी तपाईंलाई धन्यवाद दिउँ।

**दोराँत** : यहाँले भन्नु हुँदैछ, तपाईं संसारको सर्वश्रेष्ठ सुन्दरी हुनुहुन्छ।

**दोरिमन** : यो त मप्रति यहाँको कृपा हो।

**श्री जूर्दे** : महोदया, कृपा त तपाईंले गर्नुहुँदैछ, अनि...।

**दोराँत** : अब खाने चिन्ता गरौं होला।

**अनुचर** : (श्री जूर्देसित) सबै तयार छ, महोदय।

**दोराँत** : उसो भए जौं, खाना खाऊँ, अनि संगीतज्ञहरूलाई बोलाइयोस्। (भोजन तयार गर्ने छः भान्से एक साथ नाच्छन्, अनि यो तेस्रो विष्कम्भक हुन्छ। यसपछि खाने कुराले ढाकिएको एउटा टेबल ल्याउँछन्।)

# चौंथो अंक

## दृश्य-1

(दोराँत, दोरिमेन, श्री जूर्दे, दुई गायक, एकजना गायिका, अनुचर)

**दोरिमेन** : खाना त साह्रै स्वादिलो छ, तपाईं के भन्नु हुन्छ, दोराँत?

**श्री जूर्दे** : तपाईं ठट्टा गर्नुहुँदैछ, महाशया, यो यदि अझै तपाईंको लायकको हुन सके त? (सबै खान बस्छन्)

**दोराँत** : श्री जूर्दे ठीकै भन्नु हुँदैछ महोदया, अनि आफ्नो घरमा तपाईंको सम्मान गरेर मलाई कृतज्ञ बनाउनु हुँदैछ। म उहाँसित सहमत छु, खाना तपाईंको योग्य छैन। किनकि खाना मैले बनाउन लाएको छु, अनि यस विषयमा मलाई आफ्ना मित्रहरूको जस्तो अनुभव छैन, यसैले तपाईंले देख्नु हुँदैछ, उत्तम भोजको दृष्टिले, यहाँ परस्पर नमिलेका चीजहरू छन्, अनि सुरूचिको दृष्टिले अपरिष्कृत। दामी यहाँ भए अझ सबै कुरा कायदासित हुनेथियो, सबैतिर सौष्ठव र विशेषज्ञता हुने थियो, अनि भोजमा खाइने सबै कुराको गुण बढ़ाइ-चढ्याई गर्नेथ्यो अनि असल खानेकुरा तयार पार्न उसको अनुभव माथिलो दर्जाको छ भनेर तपाईंलाई सहमत गराउनेथ्यो। उसले तपाईंसित राम्ररी पाकेको डबल रोटीको चर्चा गर्नेथ्यो, जसमा सुनको जलप लगाएको हुन्थ्यो अनि जुन दाँतहरूको बीचमा परेर टुक्रिनेथ्यो; जीवनले परिपूर्ण मखमली मदिराको कुरा गर्नेथ्यो, जसमा हलुको हरियोपन छाएको हुनेथ्यो, धनियाको सुगन्धले युक्त भेड़ाको मासुको, पाठाको कम्मरको यति लामो मासुको टुक्राको, जो सेतो र नरम हुने थियो, अनि जसले दाँतमुनि परेर बदामी-हलुआको स्वाद देओस्, आकर्षक सुगन्धले युक्त जुरेलीको कुरा गर्नेथ्यो अनि आफ्नो सर्वोच्च कृतिको रूपमा, मोती जस्ता बुलबुलले युक्त 'सूप' को चर्चा गर्नेथ्यो, जसको साथमा एउटा मोटा र जवान कुखुरा छोड़ी साना-साना परेवा, अनि त्यसमाथि सिरकामा मिलेको पियाज होस्। तर म त आफ्नो अनभिज्ञता स्वीकार गर्छु, अनि श्री जूर्देले ठीकै भन्नु भयो खाना यदि तपाईंको लायक हुन्थ्यो।

**दोरिमेन** : प्रशंसाको उत्तर चाहिँ म मज्जाले खाइरहेकी छु।

**श्री जूर्दे** : वाह! क्या सुन्दर हात छ तपाईंको?

**दोरिमेन** : हात साधारण नै छ, जूर्दे महोदय, तपाईं हीराको कुरा गर्नुहुँदैछ, त्यो वास्तवमा सुन्दर छ।

**श्री जूर्दे** : म, भगवान जान्दछन्, मैले हीराको कुरा गरेको होइन, एकजना रसिक व्यक्तिले गर्न सक्तैन, भएन यो हीरा त मामुली हो।

**दोरिमेन** : तपाईंलाई खुशी पार्ने चीज पाउनु मुश्किल छ।

**श्री जूर्दे** : तपाईंको ठूलो कृपा छ...।

**दोराँत** : लौ, श्री जूर्दे र यी साहबहरूलाई मदिरा दिया जावोस्। यहाँहरूले हामीलाई एक पेय-गीत सुनाउनु हुनेछ।

**दोरिमेन** : संगीतले वास्तवमा राम्रो भोजलाई झन् स्वादिलो बनाउँछ। मलाई यहाँ साँच्चै नै औधि आनन्द आइरहेको छ।

**श्री जूर्दे** : महाशया, यो केही...।

**दोराँत** : जूर्दे महोदय, यी महाशयहरूको सुनौं, यहाँहरूले जे भन्नेछन्, त्यो हाम्रो कुराहरू भन्दा धेरै नै राम्रो हुनेछ।
(पहिलो र दोस्रो गायक हातमा प्याला लिएर गाउँछन्)

## पहिलो पेय गीत

*मदिरा पानको प्रारम्भ यस सानो प्यालाबाट नै होस्;*
*अहा! तिम्रो हातमा यो प्याला कति मोहक छ?*
*तिमी र यो मदिरा, तिमी एक्लो जस्तै छ;*
*र तिमी दुवैको लागि मेरो प्रेम दुइगुणा भइरहेको छ—*
*उसको तिमी र मेरो बीच हे सुन्दरी!*
*वचन गरौं हामी संधै प्रेम गर्नेछौं।*
*तिम्रो मुख भिजाएर उ आकर्षक हुन्छे,*
*अनि त्यसले तिम्रो मुखको शोभा बढ़ाउँछ।*
*ओह! यो र त्यो, दुवैले मेरो अभिलाषा जगाउँछ,*
*अनि तिमी र उसको बीच प्रेमले म ठूलो 'पेग' पिउँछु—*
*उसको, तिम्रो र मेरो बीच, हे सुन्दरी!*
*वचन गरौं, हामी सँधै प्रेम गर्नेछौं।*

(तीनैजना गायक एकसाथ गाउँछन्)

## दोस्रो पेय गीत

*पियौं, प्रिय साथीहरू, पियौं, भाग्दै गरेको समयको निमन्त्रण छ,*
*जहाँसम्म हुन सक्छ जीवनको लाभ उठाउँ—*

*कालको मुखमा परेपछि त, कहाँ राम्रो सुरा, कहाँ हाम्रो प्रेम;*
*हामी चाँड़ै पियौं, किनकि हामी सर्वदा पिउँदैनौं।*
*पागलहरूलाई तर्क गर्न दिउँ, जीवनको साँचो सुख के हो,*
*हाम्रो दर्शनले त्यो त मदिराको प्यालामा बताउँछ—*
*धन, ज्ञान र प्रतिष्ठाले हाम्रो दुश्चिन्तालाई हर्दैनन्,*
*यसरी हामी सक्दो पिएर नै सुखी हुन सक्छौं।*
*आऊ, आऊ, आएर ढाल, त्यति बेलासम्म ढाल*
*जब सम्म भयो न भनूँ।*

दोरिमेन : मेरो बिचारमा यो भन्दा राम्रो गाउन सकिन्न। अति सुन्दर!

श्री जूर्दे : महोदया, म त यो भन्दा पनि राम्रो चीज देखिरहेको छु।

दोरिमेन : ओहो! मैले त सोच्दै-सोचिनँ श्री जूर्दे यति रसिक मिजासको हुनुहुन्छ।

दोराँत : महाशया, तपाईं श्री जुर्देलाई के सम्झिनु हुन्छ?

श्री जूर्दे : निःसन्देह, यहाँले मलाई त्यो सम्झिनु हुन्थ्यो—जो म भन्थें।

दोरिमेन : अति उत्तम।

दोराँत : तपाई यहाँलाई चिन्नु हुन्न।

श्री जूर्दे : उहाँले मलाई त्यति बेला चिन्नु हुनेछ, जब उहाँको इच्छा होला।

दोरिमेन : ओहो! यहाँको त जवाब छैन।

दोराँत : यहाँको जवाब सँधै तयार रहन्छ। तर तपाईं देख्नु हुँदैछ महाशया, तपाईंले छोएको हरेक टुकड़ा यहाँले खानु हुँदैछ।

दोरिमेन : श्री जूर्दे एकजना यस्तो मानिस हुनुहुन्छ, जोसित म अति खुशी छु।

श्री जूर्दे : तपाईलाई खुशी पार्न सकेको भए म...।

## दृश्य-2

(श्रीमती जूर्दे, श्री जूर्दे, दोरिमेन, दोराँत, गायक, गायिका, अनुचर)

श्रीमती जूर्दे : यहाँ राम्रो मेला लागेछ, अनि म देख्छु कसैलाई मेरो प्रतीक्षा थिएन; त मेरो पतिदेव, यसै ठूलो भोजको लागि मलाई तपाईंले जोड़ गर्नु भएको थियो—बहिनीको घरमा खानु जाने? त्यहाँ पनि मैले एउटा नाटक हेरें, अनि यहाँ खुशीको भोज देख्दैछु। तपाई यसरीनै आफ्नो सम्पति लुटाउनु हुन्छ, अनि मेरो अनुपस्थितिमा ठूला मेमहरूलाई भोज दिनु हुन्छ। तपाई उनीहरूको लागि त संगीत र नाटकको आयोजन गर्न सक्नु हुन्छ, अनि मलाई खान अन्यत्रै पठाउनु हुन्छ।

दोराँत : तपाईं के भन्न चाहनु हुन्छ, श्रीमती जूर्दे? तपाईको पतिले धन

उड़ाउनु हुँदैछ भनेर तपाईंले कसरी सोच्नू भयो, अनि उहॉले महाशयाको सम्मानमा यो भोज दिनु भएको हो? कृपया याद राख्नुहोला यो म गर्दैछु, उहाँले आफ्नो घर मात्रै दिनु भएको छ। तपाईंले राम्ररी विचार गरी यसो भन्नु होला।

**श्री जूर्दे** : हो, काउण्ट साहबले यी सब आफै गर्नु हुँदैछ महाशयाको सम्मानमा, जो एक ठूलो दर्जाकी महिला हुन्। मेरो घर लिएर अनि मलाई साथ राख्ने इच्छा गरेर उहाँले मलाई सम्मानित गर्नु भएको छ।

**श्रीमती जूर्दे** : यी सब कुरा मात्र हुन्, म जे जान्दछु, ठीकै जान्दछु।

**दोराँत** : श्रीमती जूर्दे, अलिक राम्रो चश्मा लगाउनुहोस्।

**श्रीमती जूर्दे** : मलाई चश्माको प्रयोजन छैन श्रीमान, धेरै स्पष्ट देख्छु। धेरै अघि नै मैले यस कुराको गन्ध पाएकी थिएँ। अनि म मूर्ख होइन। तपाईंले मेरो पतिको मूर्खतापूर्ण काममा सहयोग गर्नु तपाईं जस्तो ठूलो सामन्तको निम्ति अति अशोभनीय हो। अनि तपाईं श्रीमतीज्यू, तपाईंले कसैको घर-गृहस्थीमा फाटो हालेर मेरो पतिलाई आफ्नो प्रेमी हुन दिने प्रयास तपाईं जस्ती ठूला दर्जाकी महिलाको निम्ति अशोभनीय साथै बेइमानी देखिन्छ।

**दोरिमेन** : के मतलब? हिंड्नुहोस् दोराँत, तपाईंले मलाई यस मूर्ख आइमाइको मूर्खतापूर्ण कुरा सुनाएर मेरो हाँसो उड़ाउनु भएको छ। (उ निस्किन्छे)

**दोराँत** : महोदया अरे महोदया, कहाँ जानु हुँदैछ?

**श्री जूर्दे** : महोदया, काउण्ट साहब उहाँसित क्षमा माग्नुहोस्, उहाँलाई फर्काएर ल्याउनु होस्। (श्रीमती जूर्देसित) उफ्! अशिष्ट पाखे, लौ हेर तिम्रो करनी, सबको सामु मेरो बेइज्जती गर्‍यौ, मेरो घरबाट ठूला दर्जाका मानिसहरू निकाल्यौ।

**श्रीमती जूर्दे** : त्यसको दर्जालाई बूढ़ी औंला देखाउँछु।

**श्री जूर्दे** : किन हो म हिचकिचाउँदैछु, नत्र जुन भोजमा तिमीले बाधा पुर्‍यायौ, त्यसैको प्लेटले नै टाउको फोरिदिन्थें, अलच्छिनी कहिंकी। (टेबल हटाइन्छ)

**श्रीमती जूर्दे** : निस्किन्दै) नाप्यौ? म आफ्नो अधिकारको रक्षा गरिरहेकी छु, अनि यस विषयमा सबै आइमाइहरू मपट्टि हुनेछन्।

**श्री जूर्दे** : राम्रो भयो मेरो रीसबाट जोगिन निस्किहाली। दुर्भाग्य पनि कस्तो? यस्तै मौकामा त्यस मूर्ख आइमाईलाई यहाँ आउनु परेकी। मीठा-मीठा कुरा गर्ने मूड्मा थिएँ। मैले कहिल्यै आफूलाई आज झैं बुद्धिमान ठानिनँ। यो के हो?

## दृश्य-3

(छद्मवेशमा कोव्येल, श्री जूर्दे, अनुचर)

कोव्येल : *महाशय, म जान्दिनँ मलाई तपाईंसित परिचित हुने सौभाग्य छ कि छैन?*

श्री जूर्दे : छैन, महाशय।

कोव्येल : (हातले पृथ्वीदेखि एक फूटको ऊचाई देखाउँदै) मैले तपाईंलाई त्यति बेला देखेको थिएँ जब तपाई यो भन्दा ठूलो हुनुहुन्न थियो।

श्री जूर्दे : म?

कोव्येल : हो, तपाई संसारको सुन्दर बालक हुनुहुन्थ्यो अनि तपाईंलाई म्वाई खान सबै आइमाइहरूले काखमा लिन खोज्थे।

श्री जूर्दे : मलाई म्वाई खान?

कोव्येल : हो। तपाईंको स्वर्गवासी पिताको म असल मित्र थिएँ।

श्री जूर्दे : मेरो स्वर्गवासी पिताको?

कोव्येल : हो। उहाँ एकजना इमान्दार रइस हुनुहुन्थ्यो।

श्री जूर्दे : तपाई के भन्नु हुन्छ?

कोव्येल : भन्दैछु, उहाँ एकजना बहुतै इमान्दार रइस हुनुहुन्थ्यो।

श्री जूर्दे : मेरो पिताज्यू?

कोव्येल : हो।

श्री जूर्दे : तपाई उहाँलाई राम्ररी चिन्नु हुन्थ्यो?

कोव्येल : अवश्य।

श्री जूर्दे : अनि उहाँ रइस हुनुहुन्थ्यो भनी जान्नु हुन्थ्यो?

कोव्येल : निस्सन्देह।

श्री जूर्दे : संसार पनि बड़ा अचम्मको छ!

कोव्येल : किन?

श्री जूर्दे : यस्ता मूर्खहरू पनि छन् जसले उहाँलाई बनियाँ भन्छन्।

कोव्येल : उहाँ अनि बनियाँ? यो पक्का बदनामी हो, उहाँ कहिल्यै बनियाँ हुनुहुन्न थियो। कुरा यो हो कि उहाँ साह्रै सहानुभूतिशील हुनुहुन्थ्यो, मानिसलाई सहायता गर्न तत्पर रहनुहुन्थ्यो, औ यद्यपि कपड़ाको विषयमा उहाँलाई पुरा ज्ञान थियो, उहाँले सबै ठाँउबाट राम्रो कपड़ा यहाँ ल्याउनु हुन्थ्यो, औ आफ्नो मित्रहरूबीचमा बाँड़िदिनु हुन्थ्यो—पैसा लिएर।

श्री जूर्दे : तपाईंको परिचय पाएर म धेरै खुशी छु। मेरो पिता धनी हुनुहुन्थ्यो भन्नेर साक्षी दिन सक्नु हुन्छ?

कोव्येल : म सबैको सामु साक्षी दिनेछु।

श्री जूर्दे : म तपाईंको कृतज्ञ हुनेछु। अच्छा, किन आउनु भयो?

| | | |
|---|---|---|
| कोव्येल | : | मैले तपाईको इमान्दार पिताज्यूसँग परिचय गरेको दिनदेखि मैले संसारभरिको यात्रा गरिसकेको छु। |
| श्री जूर्दे | : | संसारभरिको? |
| कोव्येल | : | हो। |
| श्री जूर्दे | : | उसो भए त्यो एउटा ठूलो देश होला। |
| कोव्येल | : | निश्चय नै, आफ्नो लामो यात्राबाट फर्किएको चार दिन मात्र भएको छ, अनि यद्यपि तपाईंबारे सबै विषयमा म चासो लिन्छु यसैकारण म संसारको सबै भन्दा उत्तम समाचार दिन आएको छु। |
| श्री जूर्दे | : | कुन चैं समाचार? |
| कोव्येल | : | तपाईंलाई थाह छ, महान तुर्कीको छोरा यहाँ आउनु भएको छ? |
| श्री जूर्दे | : | मलाई थाह छैन त? |
| कोव्येल | : | कसरी? उहाँसित उनको शानदार दल आएको छ। सबै उहाँलाई हेर्न जान्छन् अनि यस देशमा उहाँको स्वागत् एकजना प्रसिद्ध नवाबको झैं भएको छ। |
| श्री जूर्दे | : | भगवान नै जानून्, म जान्दिन थिएँ। |
| कोव्येल | : | तपाईंको निम्ति उहाँको आगमन अझै लाभप्रद छ, कारण उहाँले तपाईंकी छोरीसित प्रेम गर्नु हुन्छ। |
| श्री जूर्दे | : | महान तुर्कीको छोराले? |
| कोव्येल | : | हो, उहाँ तपाईंको जुँवाई हुन चाहनु हुन्छ। |
| श्री जूर्दे | : | महान तुर्कीको छोरा मेरो जुँवाई? |
| कोव्येल | : | हो, महान तुर्कीको छोरा तपाईंको जुँवाई। म उहाँलाई भेट्न गएको थिएँ, म उहाँको भाषा राम्ररी जान्दछु। उहाँले मसित कुराकानी गर्नु भयो, अनि केही अन्यान्य कुरापछि, उहाँले मलाई भन्नु भयो– आकस्याम क्रोक सोले उँश आला मुसताक गिदेलेम आमानाहेम चाराहिमी ऊसेर कारबुलात अर्थात् 'के तिमीले त्यो सुन्दरी युवतीलाई देखेको छैनौ, जो पेरिसको धनाढ्य श्री जूर्देकी छोरी हो?' |
| श्री जूर्दे | : | महान तुर्कीको छोरोले मेरो विषयमा यसो भन्नु हुन्छ? |
| कोव्येल | : | हो। जब मैले उहाँलाई विशेष रूपले चिन्दछु अनि तपाईंको छोरीलाई चिन्दछु भनी आश्वस्त पारे। उहाँले मलाई भन्नु भयो– 'अहा! मारबाबा साहेम' अर्थात! 'अहा! म उसित कति प्रेम गर्छु?' |
| श्री जूर्दे | : | मारबाबा साहेमको अर्थ हो–'अहा! म उसित कति प्रेम गर्छु ?' |
| कोव्येल | : | हो। |
| श्री जूर्दे | : | साँच्चै, तपाईंले मलाई यो सुनाएर राम्रै गर्नु भयो, म कहिल्यै विश्वास गर्दिन थिएँ। मारबाबा साहेमको अर्थ हो–'अहा! म उसित कति प्रेम गर्छु?' कति मीठो भाषा? |

कोव्येल : कति सुन्दर छ, तपाई विश्वास गर्नु हुन्न? तपाईं जान्नु हुन्छ 'काकाराकामुर्शे' को अर्थ के हो?

श्री जूर्दे : काकाराकामुर्शेको? अहँ जान्दिनँ?

कोव्येल : यसको अर्थ हो, मेरो प्रिय आत्मा।

श्री जूर्दे : काकाराकामुर्शेको अर्थ हो मेरो प्रिय आत्मा?

कोव्येल : हो।

श्री जूर्दे : कति सुन्दर? कसैलै काकाराकामुर्शेको अर्थ, मेरो प्रिय आत्मा भन्दा मलाई त आश्चर्य लाग्छ।

कोव्येल : अच्छा, आफ्नो दुइटै कामलाई पूरा गरुँ। उहाँले तपाईं की छोरीसित विवाहको प्रस्ताव गर्नु भएँको छ, अनि आफ्नो ससुरालाई निजको प्रतिष्ठा अनूकूल बनाउन उहाँले तपाईंलाई मामामुशी बनाउनु चाहनु हुन्छ। मामामुशी उहाँको देशको एउटा ठूलो उपाधि हो।

श्री जूर्दे : मामामुशी?

कोव्येल : हो मामामुशी, हाम्रो भाषामा 'पालादें' (पालादें अंग्रेजीमा Knight को उपाधि।) पालादें त्यो पुरानो...। होस्, पालादें। संसारमा यो भन्दा ठूलो अरु केही छैन, अनि तपाई संसारका ठूला नवाबहरूको समकक्ष आउनु हुनेछ।

श्री जूर्दे : महान तुर्कीको छोराले मेरो ठूलो सम्मान गर्नु हुँदैछ, कृपया मलाई उहाँकोमा लैजानु होस्, जसमा उहाँलाई धन्यवाद दिन सकूँ।

कोव्येल : अरे। उहाँ यहीं नै आउनु हुँदैछ।

श्री जूर्दे : उहाँ यहीं आउनु हुँदैछ।

कोव्येल : हो, अनि उहाँले तपाईंको उपाधि प्रदान-समारोहको लागि पनि सबै समान साथै ल्याउनु हुनेछ।

श्री जूर्दे : कति तत्परता छ?

कोव्येल : उहाँको प्रेमले कुनै प्रकारको बिलम्ब सहन सक्दैन।

श्री जूर्दे : यस सम्बन्धमा मेरो जुन कठिनाई छ, त्यो यो हो कि, मेरी छोरी जिद्दी छे, अनि त्यसले आफ्नो मनमा 'क्लेओंत' भन्ने एकजना व्यक्तिलाई ठाउँ दिइराखेकी छ। क्लेओंत छोड़ी अरु कसैसित विवाह गर्ने छैन भनी त्यसले कसम खान्छे।

कोव्येल : महान तुर्कीको छोरालाई देख्नु साथै उनले आफ्नो विचार बदलिनेछिन् अनि फेरि एउटा साम्रै संयोग हो कि महान तुर्कीको छोरो झण्डै-झण्डै क्लेओंत जस्तै देखिन्छन्। मैले भखरै उनलाई देखें, मानिसहरू भन्छन् कुनै एकजनाप्रति जुन प्रेम छ त्यो अर्कोप्रति पनि हुन सक्छ, अनि ... ...। उहाँको पदचाप सुनिदै छ, सायद उहाँ आउनु हुँदैछ।

## दृश्य-4

(क्लेओंत तुर्की भेषमा, तीन अनुचरले उनको कपड़ा समातेका छन्, श्री जूर्दे, छद्मवेशी कोव्येल)

**क्लेओंत** : आँबुसाहिम ओकी बेराफ, जोर दिना सालामालेकी।

**कोव्येल** : अर्थात्, 'श्रीमान जूर्दे, तपाईको मन बर्षभरि फूलले लत्रेको गुलाबको बोट झैं भइरहोस्।' यो त्यो देशको कृतज्ञता प्रगट गर्ने ढंग हो।

**श्री जूर्दे** : महामहिम महान तुर्कको म एकजना नम्र सेवक हूँ।

**कोव्येल** : कारिगार कामबोतो ऊस्तें मोराफ।

**क्लेओंत** : ऊस्तें योक कातामाले की बाजुम बाज अल्ला मोराँ।

**कोव्येल** : भन्नु हुन्छ 'भगवानले तपाईंलाई सिंहको ताकत र साँपको बुद्धि दिउन्।'

**श्री जूर्दे** : महामहिम तुर्कले मेरो ठूलो इज्जत गर्नु हुँदैछ। उहाँलाई सबै प्रकारको सम्पदा प्राप्त होस् भनी कामना गर्छु।

**कोव्येल** : ओस्सा बिना माँ सादोक बाबाल्ली ओराकाफऊराम।

**क्लेओंत** : बेलमें।

**कोव्येल** : भन्नुहुन्छ 'तपाईं उहाँसित चाँड़े हिंड़नु होस् र समारोहको आयोजन गर्नुहोस्, अनि आफ्नो छोरीको विवाह-विधि पूरा गर्नु होस्।'

**श्री जूर्दे** : दुई शब्दमा यत्रा कुरा?

**कोव्येल** : हो, तुर्की भाषा नै यस्तै छ, थोरैमा धेरै भनिन्छ। चाँड़ै हिंड़नु होस्, जहाँ उहाँले भन्नु हुँदैछ।

## दृश्य-5

(दोराँत, कोव्येल)

**कोव्येल** : हा! हा! हा! हा! यो त मज्जाको ठट्टा भयो। क्या झुक्याइयो? राम्ररी घोकेर पनि उसले यति राम्ररी आफ्नो भूमिका निभाउनु सक्ने थिएन। हा! हा! विन्ती छ, महोदय तपाईंले यस विषयमा हामीलाई मदत गर्नु होला।

**दोराँत** : हा! हा! अरे कोव्येल, तिमीलाई कसले चिन्ने? क्या राम्रो भेष बनाएका छौ।

**कोव्येल** : साँच्चै, हा! हा!

**दोराँत** : किन हाँस्दैछौ?

**कोव्येल** : एउटा यस्तो कुरा छ, जसमा हाँस्नै पर्छ, महोदय।

दोराँत : त्यो के?

कोव्येल : तपाईंले जति नै चेष्टा गरे पनि थाह पाउनु हुन्न, महोदय। हामीले यस्तो उपाय निकालेका छौं कि श्री जूर्देले आफ्नी छोरी मेरो मालिकलाई सुम्पन्न राजी हुनेछन् नै।

दोराँत : त्यो उपाय त म जान्दिनँ, तर म यति जान्दछु, यस उपायले आफ्नो काम फत्ते नगरिकन छोड्ने होइन, किनभने यसपछि तिमी छौ।

कोव्येल : म जान्दछु महोदय, त्यो गधालाई तपाईंले चिन्नु भएको छ।

दोराँत : भन के हो?

कोव्येल : अलि पर सर्नुहोस्, जसमा यहाँ आउने व्यक्तिले ठाँउ पाउन्। कथाको एक अंश त यहाँ हेर्नु होला, बाँकी म सुनाइ दिउँला। (श्री जूर्देको पदवी-प्रदान समारोह, नृत्य र संगीत साथ हुन्छ। यो नाटक चौथो विष्कम्भक हुन्छ। समारोहको अभिनयमा एकजना मुफ्ती, चारजना दरवेश, छ जना नाच्ने तुर्की, छ जना गाउने तुर्की र अरू अन्य व्यक्ति जो तुर्की बाजा बजाउँछन् सामेल हुन्छन्। मुफ्तीले बारहजना तुर्कीहरू र चारजना दरवेशहरूका साथ मुहम्मदलाई आह्वान गर्छन्। यसपछि, तुर्कीको भेषमा पगड़ी र तरवार बेगर बुर्ज्वालाई ल्याइन्छ।)

मुफ्ती : (बुर्ज्वासित) से ती साबिर, ती रिपोंदिर, सेनो साविर ताजिर, ताजिर। भी स्तार मुफ्ती, ती की स्तार सी?
नो इँताँदिर, ताजिर, ताजिर[1]
(मुफ्तीले सहायक तुर्कीहरूसित यस्तै भाषामा श्री जूर्देको धर्म सोध्छ अनि उनी मुसलमान हुन् भनेर तिनीहरूले विश्वास दिलाउँछन् मुफ्तीले 'लिंग्वा फ्रांका' मा मुहम्मदलाई आह्वान गर्छ र यी पंक्तिहरू गाउँछ)–
'माहामेता पेर, गिउर दिना भी प्रेगार सेरा ए मातिना
बोले फार ऐं पाला दिना दे गिउर दिना, दे गिउर दिना।'[2]
'दार तुरबाँता एक दार स्कार सिना कों गालेरा ए ब्रिगांतिना पेर दे फाँ दे पालेस्तिना।'[3]
(मुफ्ती, तुर्कीहरूलाई सोध्छ, के बुर्ज्वा बुसलमान धर्ममा दृढ़ रहनेछन् र यी पंक्तिहरू गाउँछन्)–

---

1. (यो अरबेली, तुर्केली, माल्टियानी, फ्रान्सेली, इटली, स्पेनियाली आदि भाषाले बनेको बोली हो, जसलाई 'लिंग्वा फ्राँका' भनिन्छ। यस पंक्तिको अर्थ लाग्छ-बुझे जवाब दिनु नबुझे चुप लाग्। म मुफ्ती हूँ, तँ को होस्? नबुझे चुप लागेर बस्।)
2. (मुहम्मद, मेरो प्रार्थना छ, जूर्देको निम्ति दिनरात, जूर्देलाई बनाउँ पालादें, पालादें बनोस् जूर्दे।)
3. (पगड़ी देऊ, तलवार देऊ, नाँउमा चढ़ेर जूर्दे जाउन् पालेस्तिनलाई बचाउन)

**मुफ्ती** : स्तार बों तुर्की गिउर बिना? (के जुर्दे असल तुर्की बनिरहने छन्?)

**तुर्की** : ही, बल्ला (भगवान कसम, हो)।

(मुफ्ती नाच्छ र यी शब्दहरू गाउँछन्-)

'ह ला बाबा ला शू, बा ला बा बा ला दा।'[1] तुर्कीहरू यी शब्दहरू दोहोर्‍याउँछन्। मुफ्ती बुर्ज्वालाई पगड़ी दिन लाग्छ र यी शब्दहरू गाउँछन्।

**मुफ्ती** : तीनो स्तार फूर्बा। (के तिमी ठग होइनौ?)

**तुर्की** : नो, नो, नो। (होइन, होइन, होइन।)

**मुफ्ती** : नों स्तार फुर्फाता? (के तिमी धूर्त होइनौं?)

**तुर्की** : नो, नो, नो। (होइन, होइन, होइन।)

**मुफ्ती** : दोनार तुर्बान्ता, दोरान तुर्बान्ता (पगड़ी देऊ, पगडी देऊ)। (तुर्कीहरू मुफ्तीको कुराहरूलाई दोहर्‍याउँछन् अनि बुर्ज्वालाई पगड़ी दिन्छन्। मुफ्ती र दरबेशहरू समारोह अनुकूल पगडी लगाउँछन्, अनि मुफ्तीलाई अल-कुरान दिइन्छ। उ अरु उपस्थित तुर्कीहरूलाई फेरि एकपल्ट आह्वान गर्छ, त्यसपछि उसले बुर्ज्वालाई तलवार दिन्छ र यी शब्दहरू गाउँछन्।)

'ती स्तार नोबिल ए नों स्तार फाब्बोला।

पिग्लियर श्याब्वोला।'

(तिमी कुलीन हौ, यो कुरा साँचो होस्, तलवार लेऊ)

(तुर्कीहरू यी शब्दहरू दोहर्‍याउँछन्। सबैले तलवार समात्छन् अनि ती मध्ये छः जना बुर्ज्वाको चारैतिर नाच्छन् अनि उमाथि तलवारले आघात गर्ने अभिनय गर्छन्। मुफ्ती तुर्कीहरूलाई आदेश दिन्छ, बुर्ज्वालाई डण्ठाले हिर्काइयोस्, अनि यी शब्दहरू गाउँछन्—)

'दारा दारा बास्तोन्नारा बास्तोन्नारा (देऊ, देऊ डण्ठा देऊ।) (तुर्कीहरू उक्त शब्दहरू दोहर्‍याउँछन् अनि तालमा, बुर्ज्वालाई निकै पल्ट डण्ठाले हिर्काउँछन्। उसलाई डण्ठा लगाएपछि मुफ्ती गाएर उसलाई भन्छ)—नों तेने ओंता के स्ता स्तार उलतिया आफ्रोंता।'

(लज्जित न हौ, यो तिम्रो अन्तिम अपमान हो।)

(तुर्कीहरू यी शब्दहरू दोहर्‍याउँछन्। मुफ्ती फेरि एकपल्ट आह्वान गर्छ, अनि समारोहपछि जान्छ, साथै सबै तुर्कीहरू नाच्दै र गाउँदै साथमा धेरै प्रकारका तुर्की बाजा लिएर जान्छन्।)

---

1. (ईश्वर मेरो पिता भनी कसै-कसैले यस शब्दको अर्थ लाउँछन्, तर यस्तो लाग्छ नाटककारलाई यस शब्दको कुनै अर्थ नलागे जस्तो छ।)

# पाँचौं अंक

## दृश्य-1

(श्री जूर्दे, श्रीमती जूर्दे)

**श्रीमती जूर्दे** : हे ईश्वर! रक्षा गर। यो सब के हो? के रूप बनाएका छन्? कुनै स्वाँग रचिन्दैछ कि? के यो सिंगारिने समय हो? भन्नु हास् त, यो सब के हो? कसले तपाईंको यो रूप बनायो?

**श्री जूर्दे** : हेर त यस पाखे आइमाइलाई, एकजना मामामुशीसित यसरी बात गर्छे।

**श्री जूर्दे** : के भन्नु भो?

**श्री जूर्दे** : हो, अब मेरो इज्जत गर्नुपर्छ, भर्खरै मलाई मामामुशी बनाइएको छ।

**श्रीमती जूर्दे** : तपाईंको यो मामामुशी को अर्थ के हो?

**श्री जूर्दे** : मामामुशी, भन्दै छु। म मामामुशी हूँ।

**श्रीमती जूर्दे** : यो कुन जनावर हो?

**श्री जूर्दे** : मामामुशी, हाम्रो भाषामा पालादें।

**श्रीमती जूर्दे** : बालादें! के ब्यालेमा नाच्ने उमेर छ तपाईंको?

**श्री जूर्दे** : कस्ति मूर्ख छौ भने? भन्दै छु पालादें; यो एक पदवी हो जुन अहिले मलाई समारोहपूर्वक दिइएको छ।

**श्रीमती जूर्दे** : कुन चैं समारोह?

**श्री जूर्दे** : माहामेत्ता पर जोर दिना। (बुर्ज्वा मुफ्तीको अभिनय नक्कल गर्छ।)

**श्रीमती जूर्दे** : यसको के मतलब?

**श्री जूर्दे** : जो दिना, अर्थात् जूर्दे।

**श्रीमती जूर्दे** : अँ, त के भयो जूर्देलाई?

**श्री जूर्दे** : बोले फार एँ पालादिना दे जोरदिना।

**श्रीमती जूर्दे** : के रे?

**श्री जूर्दे** : दार तुर्बान्ता कों गालेरा।

**श्रीमती जूर्दे** : यसको के अर्थ हो?

**श्री जूर्दे** : पेर दे फाँ दे पालेस्तिना।

**श्रीमती जूर्दे** : होइन, तपाईं के भन्न चाहनु हुन्छ?

**श्री जूर्दे** : दारा, दारा बास्तोनारा।

**श्रीमती जूर्दे** : यो कस्तो अप्ठ्यारो बोली हो?

**श्री जूर्दे** : नों तेने ओंता, केस्ता स्तार ललतिमा आफ्रोंता।

**श्रीमती जूर्दे** : होइन, यो सब के हो?

**श्री जूर्दे** : (नाच्छ अनि गाउँछ) हू ला बा, बा ला शू, बा ला बा, बा ला दा।

**श्रीमती जूर्दे** : हे भगवान! मेरो पति पागल भए क्यार!

**श्री जूर्दे** : (निस्किँदै) चुप लाग, असभ्य। श्रीमान मामामुशीलाई इज्जत गर।

**श्रीमती जूर्दे** : यिनले आफ्नो मगज कहाँ खुस्काएर आए हुँ? जाऊँ, यिनलाई बाहिर जानु नदेऊ। ओहो! यी कुलच्छिनाहरू कहाँबाट आइपुगे हुँ? म चारैतिर दुःखै-दुःख मात्र देख्दैछु।

## दृश्य-2

(दोराँत, दोरिमेन)

**दोराँत** : हो महाशया, तपाईंले साह्रै गजबको वस्तु देख्नु हुनेछ; अनि सारा संसारमा यस्तो पागल मानिस देखिनु सम्भव होला भन्ने ठान्दिनँ। अनि फेरि महाशया, क्लेओंतको प्रेममा मदत गर्नु पर्छ, अनि यस स्वाँगलाई समर्थन पनि गर्न पर्छ। यिनी एकजना खुबै शानदार व्यक्ति हुनुहुन्छ अनि हामीले उनिप्रति चासो लिनै पर्छ।

**दोरिमेन** : म यसलाई खुबै महत्व दिन्छु अनि उ एउटा असल सम्पति पाउने योग्यको पनि छ।

**दोराँत** : यस बाहेक पनि महाशया, जहाँ हामीलाई एउटा ब्यालेको आनन्द पाउने मौका मिल्नेछ हामीले यस मौकालाई गुमाउनु हुँदैन अनि हेर्नु पर्छ, मेरो योजना सफल हुन्छ कि हुँदैनं

**दोरिमेन** : मैले खुब शानदार आयोजन देखेकी छु अनि यो एउटा यस्तो चीज हो दोराँत, जुन म रुचाउँदिन। हो, अब म फाल्तु खर्च रोक्न चाहन्छु अनि मेरो निम्ति तपाईंको जुन खर्चको क्रम चलेको छ, त्यो रोक्न तपाईंसित चाँड़ै विवाह गर्ने निर्णय लिएकी छु। यही नै असल चाबी हो; अनि तपाईं जान्नु हुन्छ नै, विवाहको साथै, यी सबै कुराको अन्त हुन्छन्।

**दोराँत** : ओहो! महोदया, के यो सम्भव छ, मेरो पक्षमा तपाईंले यस्तो मधुर निश्चय गर्नु भयो?

दोरिमेन : यो केवल तपाईंको बर्बादी रोक्नको लागि; अनि यसो नगरे म देख्छु, चाँडै नै तपाईंसित एक पैसा पनि रहने छैन।

दोराँत : म कति कृतज्ञ महाशया, तपाईं मेरो सम्पत्ति जोगाउने चिन्ता गर्नु हुन्छ। त्यो निःसन्देह तपाईंको हो, साथै मेरो हृदय पनि, अनि तपाईं जस्तो चाहनु हुन्छ, उपयोग गर्नसक्नु हुन्छ।

दोरिमेन : म दुवैको उपयोग गर्नेछु। तर हेर्नुहोस्, तपाईंको मान्छे—क्या राम्रो अनुहार छ?

## दृश्य-3

(श्री जूर्दे, दोराँत, दोरिमेन)

दोराँत : महोदय, म र यहाँ महाशया, हामी दुवै, तपाईंको नयाँ उपाधिको लागि अभिवादन गर्न आएका छौं। तपाईं आफ्नी छोरीको विवाह महान् तुर्कीको छोरासित गर्नु हुँदैछ, यस खुशीमा हामी पनि तपाईंको साथ छौं।

श्री जूर्दे : (तुर्की ढंगले अभिवादन गरेपछि) महाशय, मेरो कामना छ तपाईंलाई पनि साँपको बल र सिंहको बुद्धि मिलोस्।

दोरिमेन : यो मेरो सौभाग्य हो महोदय, म ती पहिलो व्यक्तिहरूमा एक जाना हूँ जो तपाईंको ठूलो पदवीको लागि तपाईंलाई बधाई दिन आएकी छु।

श्री जूर्दे : महाशया, मेरो कामना छ वर्ष भरिनै तपाईंको गुलाब (-को बोट) फूलिरहोस्। म कृतज्ञ छु कि तपाईं आउनु भयो अनि मैले जो सम्मान पाएको छु, त्यसमा तपाईंले हर्ष प्रकट गर्नु भयो। तपाईं यहाँ फेरि आउनु भएर मलाई साह्रै खुशी लागेको छ; जसमा म मेरी मूर्ख स्वास्नीको मूर्खतापूर्ण व्यवहारको लागि नम्रतापूर्वक क्षमा माग्न सकूँ।

दोरिमेन : केही कुरा छैन; उहाँबाट यस्तो व्यवहार म क्षम्य मान्दछु किन कि तपाईंको हृदय उहाँप्रति स्वभावले मूल्यवान होला अनि तपाईं जस्तो व्यक्ति पाएर उहाँमा केही सन्देह उत्पन्न भए किन अचम्म मान्नु?

श्री जूर्दे : मेरो हृदय त तपाईंकै भएको ठान्नु होस्।

दोराँत : देख्नु भयो महाशया, जूर्दे महोदय तिनीहरूमध्ये हुनुहुन्न, जसलाई सम्पन्नातले अन्धा बनाई दिन्छ। गौरवान्वित भए पनि, यहाँले आफ्नो मित्रहरूलाई राम्ररी चिन्नु हुन्छ।

दोरिमेन : यो एकजना उदार व्यक्तिको गुण हो।

**दोराँत** : महामहिम तुर्की महोदय कहाँ हुनुहुन्छ? तपाईको मित्रको नाताले हामी उहाँलाई श्रद्धा व्यक्त गर्न चाहन्छौं।

**श्री जूर्दे** : उहाँ आउनु हुँदैछ। उहाँसित त्यसको पाणिग्रहण गराउन मैले आफ्नो छोरीलाई बोलाइ पठाएको छु।

## दृश्य-4

(क्लेओंत, कोव्येल, श्री जूर्दे आदि)

**दोराँत** : महामहिम, तपाईंको ससुराका मित्र हुनको नाताले हामी तपाईंलाई आफ्नो श्रद्धा प्रकट गर्न आएका छौं, हामी तपाईंको सेवाको लागि नम्रतापूर्वक प्रस्तुत छौं भनेर आदरपूर्वक तपाईंलाई विश्वास दिलाउँछौं।

**श्री जूर्दे** : दोभाषे खोई? उसले बताउने थियो, तपाईंहरू को हुनुहुन्छ, र के भन्नु हुँदैछ? तपाईंहरूले देख्नु हुन्थ्यो उहाँले तपाईंरूलाई जवाफ दिनु हुन्थ्यो, साह्रै, राम्रो तुर्की बोल्नु हुन्छ। अरे उ कहाँ मर्न गयो? (क्लेओंतसित) स्त्रूफ, स्त्रिफ, स्त्रोफ, स्त्राफ। यहाँ महाशय एकजना ठूलो सेग्नोरे, ठूला सेग्नोरे, ठूला सेग्नोरे (उच्च दर्जाका अलादमी) हुनुहुन्छ अनि महाशया, चाहिँ ग्रान्दा दामा, ग्रान्दा दामा (उच्च दर्जाकी महिला) हुनुहुन्छ। अँ! यी महाशय फ्रांसेली मामामुशी हुनुहुन्छ, अनि महाशया चाहिँ फ्रांसेली महिला-मामामुशी। म यो भन्दा बढ़ता सम्झाउन सक्तिनँ। दोभाषे आएछ। तपाई कहाँ जानु भएको थियो? तपाई बिना हामीले कुनै कुरा गर्ने सकेको छैनौं। यहाँहरूलाई भनि दिनुहोला, यहाँ महाशय र महाशया, उच्च दर्जाका व्यक्तिहरू हुनुहुन्छ, मेरा मित्र हुनको नाताले यहाँलाई आफ्नो श्रद्धा चढाउन र यो विश्वास दिलाउन आउनु भएको छ कि उहाँहरू यहाँको सेवा गर्न तयार हुनुहुन्छ। हेर्नुहोला, उहाँले कस्तो उत्तर दिनु हुनेछ।

**कोव्येल** : आलाबाला, कोसियाम आक्सी बोराम आलाबामां।

**क्लेओंत** : कातालेकी तूबाल ऊदिन सोते आमालूशाँ।

**श्री जूर्दे** : देख्नु भयो तपाईंले?

**कोव्येल** : भन्नु हुन्छ, सँधै तपाईंको परिवार-बँगैचामा सम्पन्नताको वर्षा होइरहोस्।

**श्री जूर्दे** : उहाँ तुर्की बोल्नु हुन्छ भनेर मैले तपाईंलाई ठीकै भनिनँ र?

**दोराँत** : राम्रै छ।

## दृश्य-5

(लुसिल, श्री जूर्दे, दोरिमेन आदि)

**श्री जूर्दे** : आऊ छोरी, छेऊमा आऊ, अनि यहाँ महाशयलाई आफ्नो हात देऊ। उहाँले तिमीसित विवाह गरेर तिमीलाई सम्मानित गर्न चाहनु हुन्छ।

**लुसिल** : यो के भेष बनाउनु भएको छ तपाईले? कुनै हास्याभिनय गर्नु हुँदैछ क्या?

**श्री जूर्दे** : होइन, होइन, यो हास्याभिनय होइन, यो अति नै गहिरो कुरा हो। यो तिम्रो निम्ति अति नै सम्मानजनक छ जति हामी चाहन्थ्यौं। म तिमीलाई यहाँलाई नै पतिको रूपमा दिँदैछु।

**लुसिल** : बुवा मलाई?

**श्री जूर्दे** : हो, तिमीलाई। आऊ, यहाँको हात समात, यस सौभाग्यको लागि ईश्वरलाई धन्यवाद देऊ।

**लुसिल** : म एकदमै विवाह गर्न चाहन्नँ।

**श्री जूर्दे** : तर म त तिम्रो पिता हुँ, म त चाहन्छु।

**लुसिल** : म गर्दिनँ।

**श्री जूर्दे** : ओहो! कस्तो झमेला गरेकी? चाँड़ो भन्दैछु। खोई, आफ्नो हात देऊ।

**लुसिल** : होइन, बुवा, मैले तपाईंलाई भनिसकेकी छु, क्लेओंत बाहेक अरूलाई पतिको रूपमा वरण गर्न मलाई कुनै शक्तिले बाध्य गराउन सक्तैन, बरु म हरेक किसीमको कष्ट सहन्छु, तर......(क्लेओंतलाई उसले चिन्छे) यो साँचो हो, तपाई मेरो बुवा हुनुहुन्छ, मैले तपाईको सबै आदेश मान्नु पर्छ, तपाईंले चाहेकै व्यक्तिसित मेरो विवाह गराइ दिनु आवश्यक छ।

**श्री जूर्दे** : म औधी प्रसन्न छु, तिमी छिट्टै कर्तव्य-पथमा आयौ, आज्ञाकारिणी छोरी मलाई अत्यन्त प्रिय लाग्छ।

## दृश्य-6

(श्रीमती जूर्दे, श्री जूर्दे, क्लेओंत आदि)

**श्रीमती जूर्दे** : अरे? यो के हो? मानिसहरू भन्दैछन् तपाई आफ्नो छोरीको विवाह एकजना बहुरूपेसँग गर्दै हुनुहुन्छ?

**श्री जूर्दे** : तिमी चुप लाग्ने छैनौ? सबै कुरामा तिमी आफ्नो मूर्खताको प्रदर्शन गर्छ्यौ? तिमीलाई कुनै प्रकारले उचित-अनुचितको ज्ञान गराउन

सकिन्न।

**श्रीमती जूर्दे** : तपाईंलाई बुद्धिमान बनाउने कुनै बाटो छैन, अनि तपाई बौलट्टीपन माथि बौलट्टीपन देखाइ रहनु भएको छ। तपाईंको के विचार छ? अनि मान्छेको मेला लगाएर तपाई के गर्न चाहनु हुन्छ?

**श्री जूर्दे** : म आफ्नो छोरीको विवाह महान् तुर्कीका छोरासित गर्न चाहन्छु।

**श्रीमती जूर्दे** : महान् तुर्कीका छोरा?

**श्री जूर्दे** : हो, यो दोभाषेको मदतले तिमी यहाँलाई अभिनन्दन गर।

**श्रीमती जूर्दे** : मलाई दोभाषेको प्रयोजन छैन। म आफै उसलाई मुखमा भनि दिने छु, उसले मेरी छोरी पाउने छैन।

**श्री जूर्दे** : फेरि भन्दैछु, चुप लाग्दिनौ?

**दोराँत** : यो के, श्रीमती जूर्दे, यस्तो सौभाग्यको विरोध गर्नु हुँदैछ।

**श्रीमती जूर्दे** : हे भगवान! तपाईं आफ्नो काम हेर्नुहोस्, महाशय।

**दोरिमेन** : यो एउटा सम्मान हो, जसलाई अस्वीकार गर्न हुँदैन।

**श्रीमती जूर्दे** : महाशया, तपाईसंग पनि बिन्ती छ, जुन विषयसित तपाईंको कुनै वास्ता छैन, त्यसमा न अल्झिनुहोस्।

**दोराँत** : तपाईंको भलोको कुरामो चासो लिएको त तपाईंहरूसँगको मित्रताको नाताले नै हो।

**श्रीमती जूर्दे** : म तपाईंहरूको मित्रता बिना पनि बाँच्नु सक्छु।

**दोराँत** : तपाईंकी छोरी त आफ्नो पिताको इच्छामा सहमत छन्।

**श्रीमती जूर्दे** : मेरी छोरी एकजना तुर्कीलाई विवाह गर्न राजी छे?

**दोराँत** : निस्सन्देह।

**श्रीमती जूर्दे** : उ क्लेओंतलाई भूल्न सक्छे?

**दोराँत** : उच्च दर्जाकी मेम हुनलाई अईमाईले के गर्दैन?

**श्रीमती जूर्दे** : उसले यसो गरी भने म आफ्नै हातले, त्यसको घिच्रो निमोठी दिनेछु।

**श्री जूर्दे** : लौ सुन, यिनको फाल्तु कुरा। त तिमीलाई भन्दैछु यो विवाह हुन्छै हुन्छ।

**श्रीमती जूर्दे** : म तपाईंलाई भन्दैछु, यो विवाह हुँदैन।

**श्री जूर्दे** : ओहो! हल्ला किन गरेकी?

**लुसिल** : आमा!

**श्रीमती जूर्दे** : मर, बेइमान।

**श्री जूर्दे** : किन? उसले मेरो आज्ञा पालन गरी भनेर उसित झगड़ा गर्छौ?

**श्रीमती जूर्दे** : हो, उ जति तपाईंकी छोरी हो, त्यति मेरो पनि।

**कोव्येल** : महाशया!

श्रीमती जूर्दे : तपाईं कुन कथा सुनाउन चाहनु हुन्छ?
कोव्येल : एकै शब्द।
श्रीमती जूर्दे : तपाईंको शब्दसित मलाई कुनै मतलब छैन।
कोव्येल : (श्री जूर्देसित) महाशय, उहाँले मेरो एउटा कुरा सुन्नु भयो भने म प्रतिज्ञा गर्छु उहाँले तपाईंको कुरा मान्नु हुनेछ।
श्रीमती जूर्दे : म मान्दिनँ।
कोव्येल : मेरो कुरा मात्रै त सुन्नु होस्।
श्रीमती जूर्दे : पर्दैन।
श्री जूर्दे : सुन न त।
श्रीमती जूर्दे : होइन, म सुन्न चाहन्नँ।
श्री जूर्दे : उहाँले तिमीलाई भन्नु हुनेछ...।
श्रीमती जूर्दे : उहाँले मलाई केही भनून् म एकदमै चाहन्नँ।
श्री जूर्दे : यो हो आईमाईको दुराग्रह। के उहाँको कुरा सुन्दा तिमीलाई केही कष्ट हुन्छ?
कोव्येल : मेरो कुरा सुन्नु मात्र होस्, पछि जे मन लाग्छ, गर्नुहोस्।
श्रीमती जूर्दे : भन्नुहोस्, के कुरा छ?
कोव्येल : (श्रीमती जूर्देसित, अलग्गै) महाशया, एक घंटादेखि म तपाईंलाई ईशारा गरिरहेको छु। हामीले तपाईंको सनकी पतिको तुष्टिको लागि यसो गरिरहेका हौं भनेर के तपाई यो बुझ्नु हुन्न? हामी यस भेषमा उहाँलाई धोखा दिइरहेका छौं, अनि क्लेओंत नै महान तुर्कीका छोरा हुन्।
श्रीमती जूर्दे : हो र?
कोव्येल : अनि म कोव्येल दोभाषे हूँ।
श्रीमती जूर्दे : ओहो! यो कुरा हो भने म सहमत छु।
कोव्येल : अहिले कुनै छनक नदिनु होला।
श्रीमती जूर्दे : लौ उसे भए पक्का भयो। यस विवाहमा म सहमत छु।
श्री जूर्दे : हो? अब बल्ल सबलाई बुद्धि आयो। तिमी सुन्दै-नसुन्ने भएकी थियौ। म राम्ररी जान्दथें, महान तुर्कीको छोराको मनसाय के हो? उहाँले तिमीलाई बुझाइदिनु हुनेछ।
श्रीमती जूर्दे : उहाँले मलाई सबै बुझाइदिनु भयो। म औधि सन्तुष्ट छु। नोटेरीलाई झट्ट बोलाउन पठाउनु होस्।
दोराँत : ठीक भन्नु भो। अनि महोदया, तपाईंको मनलाई सन्तुष्ट पार्न अनि आफ्नो पछि श्री जूर्दे महोदयसँग भएको मनोमालिन्य हटाउन म र यी महाशया हामी दुवैले पनि त्यही नोटेरीको बाहुलीबाट नै

| | | |
|---|---|---|
| | | विवाह सम्पन्न गराउने छौं। |
| **श्रीमती जूर्दे** | : | म यसमा पनि सहमत छु। |
| **श्री जूर्दे** | : | (दोराँतसँग विस्तारै) उसको मन राख्नलाई यसो भन्नु पर्‍यो नै, कि कसो? |
| **दोराँत** | : | (श्री जूर्देसित विस्तारै) हो, यहाँलाई यसै तरिकाले बुझाउनु पर्छ। |
| **श्री जूर्दे** | : | हो! हो!! छिट्टो नोटेरीलाई बोलाएर ल्याऊ। |
| **दोराँत** | : | उ नआउञ्जेलसम्म हामी 'ब्याले' हेर्दै बसौं अनि महामहिम तुर्कीको मनोरंजन गरौं। |
| **श्री जूर्दे** | : | यो विचार राम्रै हो। जौं, आ-आफ्नो ठाउँमा बसौं। |
| **श्रीमती जूर्दे** | : | अनि निकोल? |
| **श्री जूर्दे** | : | म त्यस केटीलाई दोभाषेलाई सुम्पन्छु। अनि आफ्नो स्वास्नी त्यसलाई सुम्पन्छु जसले उसलाई चाहन्छ। |
| **कोव्येल** | : | धन्यवाद महोदय, (अलग्गै) यिनीभन्दा अन्य कुनै ठूला पागल भेटिए म आफ्नो नाक कटाउँछु।<br>(मूल फ्रेञ्च वाग्धाराको शाब्दिक अनुवाद यस्तो हुन्छ—'म रोम गएर भनिदिउँला।')<br>[यस उपलक्ष्यमा विशेष गरी तयार गरिएको एउटा 'ब्याले'-को साथै यो हास्य-नाटक सकिन्छ।] |